# नेपाल
द्वैमासिक

# Nepal
Bi-Monthly

वर्ष ४८ अङ्क ३ पूर्णाङ्क २२४ मङ्सिर/पुस २०७४



**प्रकाशक**

नेपाल सरकार

सूचना तथा सञ्चार मन्त्रालय

**सूचना विभाग**

काठमाडौं, फोनः ४११२५५४, फ्याक्सः४११२६५२

E-mail: publication@doinepal .gov .np

Website: www .doinepal .gov .np

## हाम्रो अनुरोध

यस अङ्कमा समावेश गरिएका नीतिहरू नेपाल सरकारका विभिन्न साइटबाट साभार गरिएको हो । यूनिककोडमा भएका नीतिहरू प्रीति फन्टमा बदल्दा र पुस्तकको रूपमा डिजाइन गर्दा सकेसम्म त्रुटिरहित बनाउने प्रयास गरिए पनि कहिँकतै छुट या त्रुटि भएका हुन सक्दछन् । अतः कुनै सन्देह भएमा तत् तत् वेवसाइटमा भएका नीतिहरू हेर्न अनुरोध गर्दछौँ ।

– सम्पादन मण्डल

# विषय सूची

# सूचना तथा सञ्चार प्रविधि नीति, २०७२

## १. पृष्ठभूमि

सूचना र सञ्चार प्रविधिमा भएको तीब्र विकासले गर्दा आधुनिक विश्व नै एक गाउँ (Global Village) मा रूपान्तरण भएको छ । हालका वर्षहरूमा दिगो विकासका वृहत्तर लक्ष्य हासिल गर्न अवलम्बन गरिएका रणनीतिहरूको केन्द्रमा सूचना तथा सञ्चार प्रविधि रहँदै आएको छ । विश्वव्यापी रूपमा सूचना तथा सञ्चार प्रविधिको बढ्दो प्रयोगले सामाजिक अन्तरकृया (Social Interaction) तथा सार्वजनिक सेवा तथा सूचना प्रवाहमा आधारभूत परिवर्तन आएको छ । सूचना तथा सञ्चार प्रविधिको प्रयोगमार्फत प्राप्त हुने अन्य लाभका अतिरिक्त यो प्रविधिको प्रयोगबाट सुशासनको प्रत्याभूत गर्नुका साथै बढी पारदर्शी एवं प्रभावकारी सार्वजनिक व्यवस्थापनको लागि यथेष्ट पूर्वाधार निर्माण गर्न सहज हुने अपेक्षा गरिएको छ । साथै सूचना प्रविधि र सूचना प्रविधिमा आधारित विभिन्न सेवाहरू (Information Technology, Information Technology Enabled Services / Business Process Outsourcing) लगायत अन्य उद्योग एवं सेवाजन्य व्यवसायको वृद्धिद्वारा वृहत्तर राष्ट्रिय लक्ष्यहरू हासिल गर्नमा समेत यो प्रविधि सहायक हुने देखिएको छ ।

सूचना तथा सञ्चार प्रविधिको प्रयोग निरन्तर विकास एवं गतिशीलताबाट उपयुक्त अवसरसँगै नीतिगत चुनौतीहरू पनि सिर्जना भैरहेका छन् भने यस क्षेत्रको गतिशीलतालाई नीतिगत रूपले सम्बोधन गर्न देशमा हाल विद्यमान नीतिगत, संस्थागत तथा नियामक व्यवस्था पनि अपर्याप्त देखिएका छन् । समकालीन सूचना तथा सञ्चार प्रविधि क्षेत्रमा भएको गतिशीलता एवं निरन्तर विकासद्वारा सिर्जित नीतिगत चुनौती सम्बोधन गर्न यो सूचना तथा सञ्चार प्रविधि नीति तर्जुमा गरिएको छ ।

## २. विगतका नीतिगत प्रयासहरू

विगत केही वर्षदेखि नेपालमा सूचना तथा सञ्चार प्रविधिको क्षेत्रमा विभिन्न नीतिगत प्रयासहरू भएका छन् । राष्ट्रिय सञ्चार नीति २०४९ तथा नेपाल दूर सञ्चार ऐन तथा नियमावली, २०५६ लागू भएपछि देशमा दूरसञ्चार क्षेत्र खुला एवं प्रतिस्पर्धी युगमा प्रवेश गरेको हो । उक्त नीति एवं कानुनका आधारमा वि.सं. २०६० मा घोषित दूरसञ्चार नीतिले खुला इजाजत व्यवस्था (Open Licensing

Regime) र प्रविधि तटस्थता (Technology Neutrality) लगायतका अवधारणा प्रवर्द्धन गर्दै दूरसञ्चार क्षेत्रलाई बढी प्रतिस्पर्धी बनाउँदै अघि बढाइएको हो । दूरसञ्चार क्षेत्रमा भएका यी नीतिगत प्रयासहरूका अतिरिक्त वि.सं. २०५७ मा लागू गरिएको सूचना प्रविधि नीतिले सूचना प्रविधिलाई देश विकासको वृहत्तर लक्ष्य हासिल गर्ने औजारको रूपमा स्थापित गर्ने अवधारणा प्रवर्द्धन गरेको थियो । वि.सं. २०६७ मा आइपुग्दा यस नीतिको परिमार्जन भैसकेको छ । त्यस्तै वि.सं. २०७१ मा लागू गरिएको राष्ट्रिय ब्रोडव्याण्ड नीतिले नेपालमा सूचना तथा सञ्चार प्रविधिको प्रयोग मार्फत दिगो आर्थिक सामाजिक विकासका लक्ष्य हासिल गर्ने प्रयासमा एक महत्त्वपूर्ण उपलब्धि मान्न सकिन्छ ।

### ३. उपलब्धि

विगतमा गरिएका नीतिगत प्रयासका कारण सूचना तथा सञ्चार प्रविधि क्षेत्रले नेपालमा दूरसञ्चार सेवामा व्यापक पहुँच एवं इन्टरनेटको बढ्दो प्रयोग तथा त्यस क्षेत्रको प्रतिस्पर्धात्मक सघनता (Competitive Intensity) बढाउने कार्यमा उल्लेखनीय योगदान गरेको छ । विशेषतः मोबाइल फोनको विस्तारले आम समुदायको दूरसञ्चार सेवाको पहुँचमा व्यापक सुधार ल्याएको छ । हाल देशका ९० प्रतिशतभन्दा बढी जनतामा मोबाइल फोनको पहुँच पुगेको छ । यसैगरी समग्र दूरसञ्चार पूर्वाधार विकासमा समेत उल्लेखनीय प्रगति भएको छ । हाल Fiber optic प्रविधिमा आधारित विभिन्न मेरुदण्डीय पूर्वाधार Backbone उपलब्ध छ । नेपाल विद्युत् प्राधिकरणको पूर्वाधारमा आधारित काठमाडौं-हेटौंडा Fiber Optic Backbone सञ्चालनमा रहेको छ भने काठमाडौं-बुटवल तथा पोखरा हुँदै Fiber Optic Backbone समेत सञ्चालमा आइसकेको छ । यी पूर्वाधारहरूमार्फत ग्रामीण भेगहरूमा हाल भैरहेको सूचना तथा सञ्चार प्रविधि सेवाको घनत्वमा थप विस्तार गर्नुपर्ने आवश्यक भएको छ ।

देशभर दूरसञ्चार पूर्वाधारमा भएको उल्लेख्य विकासको अतिरिक्त सूचना प्रविधि प्रयोगको क्षेत्रमा समेत केही उत्साहवर्धक प्रयासहरू भएका छन् । यसै क्रममा गभर्नमेन्ट इन्टरप्राइज आर्किटेक्चर (Government Enterprise Architecture) तथा राष्ट्रिय इन्टरअपरेबिलिटी फ्रेमवर्क (Interoperability Framework) समेत विकास गरी लागू गरिएको अवस्था छ ।

विद्युतीय कारोबार ऐन, २०६३ लागू भै सोको कार्यान्वयनको लागि प्रमाणीकरण नियन्त्रकको कार्यालयसमेत स्थापना भएको छ । सूचना प्रविधिको विकासका लागि सूचना प्रविधि विभाग, राष्ट्रिय सूचना तथा प्रविधि केन्द्र स्थापना भैसकेका छन् ।

## ४. प्रमुख समस्या तथा चुनौतीहरू

सूचना तथा सञ्चार प्रविधिको क्षेत्रमा आएको बदलिँदो परिवेशमा विगतका नीतिअनुरूप संस्थागत व्यवस्था हुन सकेको छैन भने इन्टरनेटको व्यापक प्रयोगसँगै सूचना तथा सञ्चार प्रविधि क्षेत्रमा साइबर सुरक्षा (Cyber Security) को आवश्यकता अझ बढ्दै गएको छ । मोबाइल फोन तथा मोबाइल नेटकर्वको विस्तारले कन्भरजेन्स (Convergence) लगायतका अवधारणाको नीतिगत सम्बोधन गर्ने चुनौती रहेकोछ । बौद्धिक सम्पत्तिको संरक्षण (Protection of Intellectual Property) तथा समग्र सुरक्षा सम्वेदनशीलतालाई विशेष नीतिगत र कानुनी व्यवस्था मार्फत सम्बोधन गर्नु आवश्यक भैसकेको छ । सूचना तथा प्रविधिको निरन्तर विकासद्वारा सिर्जित यावत चुनौतीको सामना गर्न तथा उपलब्ध अवसरको उपयोग गर्न नवीनतम नीतिगत तथा तदनुरूपको संरचनागत व्यवस्था गर्नु अत्यावश्यक भएको छ ।

सूचना तथा सञ्चार प्रविधिमा भएको विकासको अवस्थालाई विश्लेषण गर्दा नेपालले सो प्रविधिद्वारा सिर्जित अवसर तथा चुनौती सामना गर्न बदलिँदो परिस्थितिअनुरूपको रणनैतिक अवधारणा अवलम्बन गर्नु जरुरी भैसकेको छ । इन्टरनेट प्रोटोकलको प्रयोग गरी गरिने टेलिफोन Voice Over Internet Protocol र इन्टरनेट प्रोटोकलको प्रयोग गरी प्रसारण गरिने टेलिभिजन (Internet Protocol Televison) जस्ता नवीनतम प्रकारका सूचना तथा सञ्चार प्रविधिमा आधारित सामाजिक सञ्जालको बढ्दो प्रयोगबाट आउने चुनौतीहरू सामना गर्न आगामी दिनहरूमा नीतिगत स्पष्टता हुनु आवश्यक छ । हाल विद्यमान भिन्न-भिन्न संस्थागत व्यवस्थाले गर्दा सूचना तथा सञ्चार प्रविधिका क्षेत्रमा विभिन्न परियोजना तर्जुमा तथा कार्यान्वयनमा समेत चुनौतीहरू देखिएका छन् ।

## ५. नीतिको आवश्यकता र औचित्य

सूचना तथा सञ्चार प्रविधि क्षेत्रमा निरन्तर भैरहेको विकासको यथोचित लाभ लिन वर्तमान नीतिगत र संस्थागत व्यवस्था अपर्याप्त छ । साइबर सुरक्षा, कन्भरजेन्सलगायतका अवधारणाको नीतिगत सम्बोधन गर्न सकिएको छैन । सूचना तथा सञ्चार प्रविधिलाई राष्ट्रिय प्राथमिकताका आधारमा अन्तर क्षेत्रगत विषयहरूको विकासमा उपयोग गर्ने गरी एकीकृत नीतिगत व्यवस्था हुन सकेको छैन । बौद्धिक सम्पत्तिको संरक्षण तथा समग्र सुरक्षा सम्वेदनशीलतालाई पनि सम्बोधन गर्न सकिएको छैन । विद्यमान नीतिगत अस्पष्टताले गर्दा सूचना प्रविधि तथा सूचना प्रविधि प्रवर्द्धित सेवाहरू जस्ता

क्षेत्रको सम्भावनालाई प्रचुर मात्रामा सम्बोधन गर्न नसकिएको अवस्था छ। सार्वजनिक सेवा प्रवाहको विधि र प्रकृया रूपान्तरणको निमित्त एकीकृत सूचना तथा सञ्चार प्रविधि नीतिको आवश्यकता रहेको छ।

वर्तमान अवस्थामा सूचना तथा सञ्चार प्रविधिले मानवीय जीवन तथा समुदाय, सङ्गठन र आर्थिक, सामाजिक, प्रविधि क्षेत्रलगायत राष्ट्रिय जीवनका सबै पक्षहरूमा व्यापक प्रभाव पारेको हुँदा विभिन्न विषयगत निकायहरूमा भएका सूचना तथा सञ्चार प्रविधि मार्फत प्रदत्त सेवा सुविधाहरूलाई प्रवर्द्धन गर्न र प्राविधिक रूपमा सहयोग गर्नसमेत सबै क्षेत्र समेटी एकीकृत नीतिको तर्जुमा गर्नु आवश्यक भएको छ।

बदलिँदो परिवेश तथा त्यसबाट सिर्जित चुनौती सामना गर्न तथा सिर्जित अवसरहरू प्रभावकारी रूपले उपयोग गर्न तदअनुरूपको नीतिगत, कानुनी संस्थागत व्यवस्था तथा रणनैतिक उपायहरू अवलम्बन गर्नुपर्ने आवश्यकता महसुस गरी यो एकीकृत सूचना तथा सञ्चार प्रविधि नीति २०७२ तर्जुमा गरिएको छ।

## ६. नीति निर्माणका आधारहरू

६.१ सूचना तथा सञ्चार प्रविधि नेपाली समाजलाई ज्ञानमा आधारित समाजमा रूपान्तरण गर्ने एउटा सशक्त माध्यमको रूपमा रहनेछ।

६.२ नीति कार्यान्वयनमा सरकारी संयन्त्रको नेतृत्वदायी भूमिका हुनेछ। राष्ट्रिय महत्त्वका सूचना तथा सञ्चार प्रविधिमा आधारित योजना तथा सेवाहरूमा सार्वजनिक निजी साझेदारीको (Public Private Partnership) अवधारणा लागू गरिनेछ।

६.३ सूचना तथा सञ्चार प्रविधिका आधारभूत पूर्वाधारमा सर्वव्यापी (Universal) पहुँच सुनिश्चित गरिनेछ।

६.४ सूचना तथा सञ्चार प्रविधि सेवामा प्रविधि तटस्थता (Technology Neutrality) प्रत्याभूत गरिनेछ।

६.५ सूचना तथा सञ्चार प्रविधिको एकीकृत सेवा र सुविधालाई प्रविधिगत कन्भर्जेन्ससँग सामन्जस्य गरिनेछ।

६.६ अन्तरविषयक क्षेत्रहरू (Cross cutting issues) जस्तै दिगोपन, लैङ्गिक समावेशीकरण, किशोर किशोरी तथा युवा अपाङ्गता भएका व्यक्ति सांस्कृतिक विविधता स्थानीय विषय (Local content) सँग सम्बन्धित विषयहरूमा सूचना प्रविधिको अधिकतम प्रयोग सुनिश्चत गरिनेछ।

६.७ पूर्वाधार जन्य सहकार्यता (Infrastructural Synergy) को अवधारणा अवलम्बन गरिनेछ ।

६.८ क्षेत्रीय तथा अन्तर्राष्ट्रिय रूपमा सफल भएका अभ्यासहरूलाई अवलम्बन गरिनेछ ।

## ७. भावी सोच Vision

सूचना तथा सञ्चार प्रविधिको प्रयोगबाट नेपाललाई सूचना तथा ज्ञानमा आधारित समाजमा रूपान्तरण गर्ने ।

## ८. परिदृष्य Mission

सूचना तथा सञ्चार प्रविधि मार्फत देशभर सुशासन, दिगो विकास एवं गरिबी न्यूनीकरणका लक्ष्यहरू हासिल गर्नु यस नीतिको प्रमुख परिदृश्य रहेको छ ।

## ९. नीतिका प्रमुख उद्देश्यहरू

९.१ सूचना तथा सञ्चार प्रविधिलाई सबैको पहुँच र क्रयशक्तियोग्य (Afordable) बनाउने ।

९.२ सूचना तथा सञ्चार प्रविधि मार्फत दिगो, फराकिलो र समावेशी आर्थिक सामाजिक विकास गर्ने ।

९.३ सूचना तथा सञ्चार प्रविधि पूर्वाधारको विकास र विस्तार गर्ने ।

९.४ सम्भावित वातावरणीय, आर्थिक सामाजिक तथा प्रविधिको क्षेत्रमा आउने चुनौतीहरूको सामना गर्न सूचना तथा सञ्चार प्रविधिको नवीनतम प्रयोग, खोज एवं अन्वेषणलाई प्रोत्साहन गर्ने ।

९.५ सूचना तथा सञ्चार प्रविधिका क्षेत्रमा मानव संसाधनको विकास गर्ने र सूचना तथा सञ्चार प्रविधि मार्फत मानव संसाधन विकासका अवसरहरू सृजना गर्ने ।

९.६ सूचना तथा सञ्चार प्रविधिको प्रयोगबाट सुशासन प्रवर्द्धन गर्ने ।

## १०. नीतिका लक्ष्यहरू

यस नीतिका प्रमुख लक्ष्यहरू देहायबमोजिम रहेका छन् :

१०.१ अन्तर्राष्ट्रिय सञ्जाल तयारी (Network Readiness) तथा विद्युतीय सरकार सूचकाङ्कमा सन् २०२० सम्म समग्रमा नेपालको स्थान दोस्रो चौथाई (Top second quartile) मा पुऱ्याइने छ ।

१०.२ सन् २०२० सम्ममा ७५ प्रतिशत नेपालीहरूलाई डिजिटल साक्षर बनाइनेछ ।

१०.३ सन् २०२० सम्ममा ९० प्रतिशत जनतासमक्ष ब्रोडब्याड सेवाको पहुँच सुनिश्चित गरिनेछ ।

१०.४ सन् २०२० सम्ममा नेपालको कुल गार्हस्थ्य उत्पादनमा सूचना तथा सञ्चार प्रविधि उद्योग एवं सेवाको योगदान दूरसञ्चार बाहेक कम्तीमा २.५ प्रतिशत पुऱ्याइनेछ ।

१०.५ सन् २०२० सम्ममा सम्पूर्ण नेपालीमा इन्टरनेटको पहुँच सुनिश्चित गरिनेछ ।

१०.६ सन् २०२० सम्ममा विद्युतीय सरकारको अवधारणाअनुरूप कम्तिमा ८० प्रतिशत नागरिक-लक्षित सेवाहरू अनलाइन (Online) मार्फत प्रदान गरिनेछ ।

१०.७ सन् २०१७ सम्ममा सरकारी प्रसारण क्षेत्रलाई डिजिटल प्रणालीमा रूपान्तरण गरिनेछ ।

## ११. नीतिहरू

११.१ सूचना तथा सञ्चार प्रविधिमा पहुँच माध्यम तथा विषयवस्तु विकास

११.१.१ सूचना तथा सञ्चार प्रविधिसम्बन्धी सेवाहरू, रेडियो तथा टेलिफोन प्रसारणको व्यापक पहुँच एवं विस्तार सुनिश्चित गर्न कार्यक्रम तर्जुमा गरी लागू गरिनेछ ।

११.१.२ समुदायमा अवस्थित हुलाक तथा सामुदायिक पुस्तकालयहरूलाई विद्युतीय व्यापार (e-commerc), विद्युतीय सरकार (e-governent) तथा इन्टरनेटमा आधारित अन्य सेवा सुविधा प्रदान गर्ने माध्यमको रूपमा विकसित गर्न विशेष कार्यक्रमहरू ल्याइनेछ ।

११.१.३ समुदाय, नागरिक समाज तथा निजी क्षेत्रको समेत सहभागिता सुनिश्चित गर्दै शैक्षिक संस्था, विद्यालय, स्वास्थ्य संस्था, गाउँ विकास समिति तथा सामुदायिक भवनहरूमा समेत इन्टरनेटसहितको आधारभूत सञ्चार सुविधाको उपलब्धता सुनिश्चित गर्न एक राष्ट्रव्यापी कार्यक्रम तर्जुमा गरी लागू गरिनेछ । यस क्रममा स्थानीय निकायको तल्लो तहसम्म इन्टरनेट सेवासहितका सूचना

केन्द्रहरूको विस्तार गरिनेछ ।

११.१.४ सूचना तथा सञ्चार प्रविधिको पहुँच अपर्याप्त रहेका ग्रामीण तथा दुर्गम क्षेत्रहरूमा सो प्रविधि विस्तारको लागि युवा तथा महिलाहरूलाई परिचालित गरिनेछ ।

११.१.५ विकास एवं सार्वजनिक सेवा प्रवाहसम्बन्धी चुनौती सामना गर्न सूचना तथा प्रविधिमा आधारित नवीनतम तथा मौलिक प्रयोग (innovativeuse) प्रवर्द्धन गर्न विशेष कार्यक्रम लागू गरिनेछ ।

११.२ ग्रामीण तथा दुर्गम क्षेत्रहरूमा सूचना तथा सञ्चार प्रविधिको पहुँच विस्तार

११.२.१ ग्रामीण तथा दुर्गम क्षेत्रहरूमा सूचना तथा सञ्चार प्रविधिको उपलब्धता सुनिश्चित गर्न विशेष कार्यक्रम तर्जुमा गरिनेछ ।

११.२.२ सूचना तथा सञ्चार प्रविधि पहुँचभन्दा बाहिर रहेको स्थानहरूमा सो प्रविधि विस्तार गर्न ग्रामीण दूरसञ्चार विकास कोष परिचालन गरिनेछ ।

११.३ विशेष आवश्यकता भएका एवं अपाङ्ग व्यक्तिहरूमा सूचना तथा सञ्चार प्रविधि पहुँच

११.३.१ विशेष अवाश्यकता भएका तथा अपाङ्ग व्यक्तिहरूमा सूचना तथा सञ्चार प्रविधि पहुँच सुनिश्चित गर्न विशेष कार्यक्रम तर्जुमा गरी लागू गरिनेछ ।

११.४ युवा, महिला तथा बालबालिकाहरूमा सूचना तथा सञ्चार प्रविधि

११.४.१ सूचना तथा सञ्चार प्रविधिलाई युवा, महिला तथा बालबालिकासम्बन्धी विषयहरू मूल प्रवाहीकरण गर्ने माध्यमको रूपमा स्थापित गर्दै लगिनेछ । सूचना तथा सञ्चार प्रविधिजन्य योजनाहरू कार्यान्वयनका क्रममा सिर्जना हुने अवसरहरूद्वारा उक्त समूहको सशक्तीकरण गरिनेछ ।

११.४.२ महिला एवं युवा लक्षित सूचना तथा सञ्चार प्रविधिजन्य

कार्यक्रमलाई विशेष प्राथमिकता प्रदान गरिनेछ । साथै वञ्चितीकरण तथा विपन्नवर्गमा परेका समुदायहरूको लागि सूचना तथा सञ्चार प्रविधि सुनिश्चित गर्न विशेष कार्यक्रहरू लागू गरिनेछ ।

११.४.३ सूचना प्रविधिको पहुँच तथा प्रयोगमा लैङ्गिक असमानताको अवस्था निराकरण गरिनेछ ।

११.४.४ युवा तथा महिलासँग सरोकार राख्ने विषयहरूमा विचार आदान प्रदान सहज बनाउन सूचना तथा सञ्चार प्रविधिमा आधारित प्लेटफर्महरू निर्माण गर्न प्रोत्साहन गरिनेछ ।

१४.४.५ सूचना समाज निर्माणमा महिला तथा युवा वर्गको सहभागिता सुनिश्चित गरिनेछ ।

११.४.६ लैङ्गिक हिंसा रोकथाम गर्नका साथै लैङ्गिक हिंसाजन्य क्रियाकलाप निरुत्साहित गर्न सूचना तथा सञ्चार प्रविधिको सिर्जनात्मक प्रयोग गर्न प्रोत्साहित गरिनेछ ।

११.५ शिक्षा, अन्वेषण र विकासमा सूचना तथा सञ्चार प्रविधि

११.५.१ शैक्षिक क्षेत्रमा सूचना तथा सञ्चार प्रविधिलाई समायोजन गर्दै तालिम तथा शैक्षिक गुणस्तर अभिवृद्धिको लागि विशेष कार्यक्रहरू तर्जुमा गरी लागू गरिनेछ ।

११.५.२ राष्ट्रव्यापी रूपमा विद्युतीय विद्यालय (e-school) तथा अन्य सम्बन्धित कार्यक्रहरू तर्जुमा गर्दै विद्युतीय सिकाइ (e-learning) विद्युतीय शिक्षा (e-education) कार्यान्वयन गर्नुका साथै जीवनन पर्यन्त सिकाइलाई प्रवर्द्धन गरिनेछ । उच्च शिक्षा प्रदान गर्ने शिक्षाण संस्थाहरूको समेत सूचना तथा सञ्चार प्रविधिमा क्षमता अभिवृद्धि गरिनेछ ।

११.५.३ शिक्षा मन्त्रालयद्वारा तर्जुमा गरिएको शिक्षामा सूचना तथा सञ्चार प्रविधिसम्बन्धी गुरुयोजना (ICT in Education Master Plan) को प्रभावकारी कार्यान्वयनको लागि विशेष व्यवस्था मिलाइनेछ ।

११.६ सूचना तथा सञ्चार प्रविधिसम्बन्धी उद्योग क्षेत्रको विकास

११.६.१ सूचना तथा सञ्चार प्रविधिमा आधारित साना तथा मझौला व्यवसाय (Small and Medium Enterprises SME) मा

लक्षित परियोजना तर्जुमा गरी लागू गरिनेछ ।

११.६.२ नीति निर्माता नियामक संस्था दूरसञ्चार सेवा प्रदायक तथा उपभोक्तासमेतको सहभागितामा अन्तरक्रिया परामर्श एवं संवाद सहजीकरणको लागि एक संयन्त्र निर्माण गरिनेछ ।

११.६.३ विदेशी कम्पनीहरूबाट स्थानीय कम्पनी, सङ्घ संस्थालाई प्रविधि हस्तान्तरण (Technology Transfer) का साथै वैदेशिक लगानी प्रवर्द्धन गर्न विशेष रणनीति अवलम्बन गरिनेछ ।

११.६.४ अन्तर्राष्ट्रिय स्तरमा प्रतिस्पर्धा गर्न सक्ने सूचना तथा सञ्चार उद्योग क्षेत्रको विकास गर्न विशेष कार्यक्रम तर्जुमा गरी लागू गरिनेछ । सूचना तथा सञ्चार प्रविधिका क्षेत्रमा विदेशी श्रोतसमेतको परिचालन गरी लागू गरिने परियोजनाहरूमा स्वदेशी व्यावसायीहरूलाई सहभागी हुने वातावरण निर्माण गरिनेछ ।

११.६.५ नेपाल एकीकृत वाणिज्य रणनीति (Nepal Trade Integration Strategy, 2010) मा आधारित वाणिज्य तथा आपूर्ति मन्त्रालयअन्तर्गत सूचना प्रविधि तथा सूचना प्रविधि प्रवर्द्धित सेवाहरू (IT-ITES / BPO) व्यापार प्रवर्द्धन एकाइ स्थापना गरिनेछ ।

११.६.६ बौद्धिक सम्पत्तिको अधिकार गोपनीयता तथा सूचना संरक्षणका क्षेत्रहरूमा विद्यमान समस्या निराकरणका लागि विशेष नियामक व्यवस्था लागू गरिनेछ ।

११.६७ निजी क्षेत्र समेतको सहभागितामा सफ्टवेयर तथा सेवा उद्योग प्रवर्द्धन बोर्ड (Software & Services Promotion Board) स्थापना गरिनेछ ।

११.६.८ नेपालमा सूचना तथा सञ्चार प्रविधिजन्य उद्योग एवं सेवाहरूको विस्तृत विवरण सङ्कलन गर्न तथा यस क्षेत्रले भोगिरहेको चुनौती, प्रतिस्पर्धात्मक क्षमता र अवसरहरूको बारेमा सन् २०१६ भित्र एक विस्तृत अध्ययन (Diagnostic study) गरिनेछ ।

११.६.९ काभ्रेपलाञ्चोक जिल्लाको बनेपामा अवस्थित सूचना प्रविधि पार्कमा लगानी आकर्षित गर्न विशेष उपाय अवलम्बन गरिनेछ ।

११.७ साना तथा मझौला व्यवसाय एवं विद्युतीय व्यापार (e-Commerce)

११.७.१ विद्युतीय व्यापार (e-commerce) का साथै सरकारी निकायहरूमा समेत आर्थिक कारोबारलाई प्रभावकारी बनाउन सूचना तथा सञ्चार प्रविधिमा आधारित (on-line payment) सेवा तथा पद्धतिलाई सशक्त बनाउन विशेष कार्यक्रमहरू तर्जुमा गरी लागू गरिनेछ ।

११.७.२ विद्युतीय व्यापार (e-commerce) को क्षेत्रमा रहेको अवसर तथा चुनौतीको विस्तृत अध्ययन कार्य (National e-commerce Readiness Assessment) सम्पन्न गरिनेछ ।

११.७.३ अन्तर्राष्ट्रिय प्रचलनसँग तादाम्य हुने गरी विद्युतीय माध्यमबाट हुने व्यापारिक कार्यहरूको सम्बन्धमा सहायक कानुनी एवं नियामक प्रारूप compatible legal & Regulatory framework तर्जुमा गरिनेछ ।

११.७.४ सूचना तथा सञ्चार प्रविधि एवं विद्युतीय व्यापारको सन्दर्भमा बौद्धिक सम्पत्तिमाथिको अधिकारलाई सुनिश्चित गर्न सम्बन्धित कानुनलाई समयानुकूल परिमार्जन गरिनेछ ।

११.७.५ वाणिज्यसम्बन्धी सङ्घ संस्थासमेतको सहभागितामा नेपालमा विद्युतीय व्यापार प्रवर्द्धन गर्न विशेष कार्यक्रमहरू तर्जुमा गरी लागू गरिनेछ ।

११.७.६ व्यक्तिगत सूचना सुरक्षा तथा उपभोक्तासम्बन्धी सूचनाको गोपनीयता सुनिश्चित गर्ने उपायहरू अवलम्बन गरिनेछ ।

११.७.७ सूचना तथा सञ्चार प्रविधिको प्रयोगमार्फत मझौला तथा साना उद्योगहरूको उत्पादनशीलता तथा प्रतिस्पर्धात्मक क्षमता अभिवृद्धि गरिनेछ ।

११.७.८ इन्टरनेट बजार, Virtual Market Place लगायतका अवधारणाहरू लागू गर्दै निर्यातमूखी साना तथा मझौला उद्योग व्यवसायहरूको अन्तर्राष्ट्रिय बजार पहुँच सुनिश्चित गरिनेछ ।

११.७.९ सरोकारवालाहरूसमेतको सहभागितामा कारोबार

(Transaction) लेनदेन (clearing) तथा राफसाफ Settlement पूर्वाधारहरू समेत समाहित हुनेगरी अनलाइन भुक्तानी पूर्वाधार सेवा (Payment infrastructure services) हरूको स्थापना तथा प्रभावकारी सञ्चालन सुनिश्चित गरिनेछ ।

११.८ कृषिमा सूचना तथा सञ्चार प्रविधि

११.८.१ सूचना तथा सञ्चार प्रविधिको नवीनतम प्रयोगमार्फत कृषि क्षेत्रको उत्पादकत्व, प्रतिस्पर्धी क्षमता र बजार विस्तारलगायतका विषयमा सम्बोधन गरिनेछ ।

११.८.२ कृषि क्षेत्रसँग सम्बन्धित सूचना तथा सञ्चार प्रविधिको विकास एवं यस प्रविधिमा आधारित सेवा प्रवाहमा निजी क्षेत्रको लगानी प्रोत्साहन गर्न विशेष कार्यक्रम ल्याइनेछ ।

११.९ पर्यटनमा सूचना तथा सञ्चार प्रविधि

११.९.१ सूचना तथा सञ्चार प्रविधिको प्रभावकारी प्रयोगद्वारा पर्यटन क्षेत्रको समग्र विकासमा लगानी गर्न आवश्यक उपायहरू अलवम्बन गरिनेछ ।

११.९.२ निजी क्षेत्रसँगको सहकार्यमा प्रमुख पर्यटकीय गन्तव्यहरूमा सूचना तथा सञ्चार प्रविधिको उपलब्धता सुनिश्चित गरिनेछ ।

११.१० स्वास्थ्य क्षेत्रमा सूचना तथा सञ्चार प्रविधि

११.१०.१ सूचना तथा सञ्चार प्रविधि मार्फत समुदायहरूमा गुणस्तरीय स्वास्थ्य सेवा प्रदान गर्न सरोकारवालाहरूको सहभागितामा एउटा विस्तृत रणनीतिक प्रारूप (Strategic Framework) तयार गरी लागू गरिनेछ ।

११.१०.२ सूचना तथा सञ्चार प्रविधिमा आधारित स्वास्थ्य सेवा क्षेत्रमा लगानी प्रवर्द्धन गरिनेछ ।

११.१०.३ स्वास्थ्य सेवामा जनशक्ति विकाससमेतको लक्ष्यबाट निर्देशित रही एक विस्तारित दूरस्वास्थ्य (Tele Medicine) योजना तर्जुमा गरी लागू गरिनेछ ।

११.१०.४ स्वास्थ्य संस्थाहरूमा विद्युतीय माध्यमद्वारा सङ्कलित स्वास्थ्य सेवासम्बन्धी उपभोक्ताहरूको तथ्याङ्कको गोपनीयता सुरक्षित गर्न आवश्यक कानुनी तथा नियामक व्यवस्था गरिनेछ ।

११.१०.५ सबै स्वास्थ्य संस्थाहरूमा ब्रोडब्याण्ड इन्टरनेट सेवा उपलब्ध गराइनेछ ।

११.१०.६ स्वास्थ्य बिमा कार्यक्रमलाई सूचना तथा सञ्चार प्रविधिको प्रयोग गरी सहज तथा पारदर्शी रूपमा लागू गरिनेछ ।

११.११ दूरसञ्चार पूर्वाधार

११.११.१ भौगोलिक परिस्थिति अनुकूल राष्ट्रव्यापी रूपमा ब्रोडब्याण्ड सञ्जाल विस्तार गरिनेछ ।

११.११.२ दूरसञ्चार पूर्वाधार निर्माणमा दोहोरोपन हटाउन, विद्युत् सडकलगायतका भौतिक पूर्वाधार सँगसँगै दूरसञ्चार पूर्वाधारको समेत साझा प्रयोग गर्न प्रोत्साहन गरिनेछ ।

११.११.३ ग्रामीण दूरसञ्चार विकास कोषको प्रभावकारी परिचालन मार्फत ग्रामीण तथा सूचना तथा सञ्चार प्रविधिको पहुँच नपुगेको क्षेत्रमा पूर्वाधार विकास गरिनेछ ।

११.११.४ ताररहित मेरुदण्डीय पूर्वाधार (Wireless Backbone) निर्माण गर्न पर्याप्त भू-सतही माइक्रोवेव फ्रिक्वेन्सी (Terrestrial Microwave frequencey) को उपलब्धता यथाशीघ्र सुनिश्चित गरिनेछ ।

११.११.५ अन्तर्राष्ट्रिय आबद्धता (International Connectivity) मा व्यापक सुधार गर्न विशेष प्राथमिकता दिइनेछ ।

११.११.६ प्राकृतिक विपदपश्चात्को आवश्यकता मूल्याङ्कन प्रतिवेदनका आधारमा विनाशकारी भूकम्पका कारण र अन्य प्राकृतिक प्रकोपका कारण भत्किएका, बिग्रिएका सूचना सञ्चार प्रविधि र दूरसञ्चारसम्बन्धी पूर्वाधारहरूको पुनर्निर्माण एवं पुनर्स्थापना गरिनेछ ।

११.११.७ विनाशकारी भूकम्पबाट भएका संरचनाहरूको पुनर्निर्माण एवं पुनर्स्थापनामा सूचना तथा सञ्चार प्रविधिको उच्चतम प्रयोग गरिनेछ ।

११.११.८ स्मार्ट सिटी (Smart city) को अवधारणा लागू गरिनेछ ।

११.११.९ सूचना तथा सञ्चार प्रविधिको विस्तारका लागि नेपालले आफ्नै भू-उपग्रह प्रक्षेपण गर्नेसम्बन्धमा आवश्यक कार्य गर्नेछ ।

११.१२ दूरसञ्चार सूचना तथा प्रविधि तथा प्रसारणबीचको कन्भर्जेन्स (Convergence)

११.१२.१ हालको प्राविधिक विकासको पृष्ठभूमिमा दूरसञ्चार सूचना तथा सञ्चार प्रविधि तथा प्रसारणबीचको कन्भरजेन्सद्वारा सिर्जित अवसर तथा चुनौतीहरू सामना गर्न विद्यमान नीति, कानुनी तथा नियामक प्रावधान र संस्थागत व्यवस्थामा परिमार्जन गरिनेछ ।

११.१२.२ प्रशारण क्षेत्रलाई डिजिटल प्रणालीमा रूपान्तरण गरिनेछ ।

११.१३ जलवायु परिवर्तनको असर न्यूनीकरणमा सूचना तथा सञ्चार प्रविधि

११.१३.१ जलवायु परिवर्तन अनुकूलन (Climate Change Adaptation) रणनीतिहरूमा सूचना तथा सञ्चार प्रविधिको नवीनतम एवं मौलिक प्रयोगलाई प्रोत्साहन गर्दै लगिनेछ । यसै सन्दर्भमा विद्युतीय अनुकूलन सेवाहरू (e-adaptation applications) को विकास गरी राष्ट्रिय तथा स्थानीय अनुकूलन कार्यक्रम (National and local adaptation plan of action) सञ्चालनलाई प्रभावकारी बनाइनेछ ।

११.१४ वातावरण तथा प्राकृतिक श्रोत व्यवस्थापनमा सूचना तथा सञ्चार प्रविधि

११.१४.१ वातावरण तथा प्राकृतिक श्रोत व्यवस्थापनमा सूचना तथा सञ्चार प्रविधिको उपयोगलाई बढाउँदै लगिनेछ ।

११.१४.२ सूचना तथा सञ्चार प्रविधिजन्य फोहोर तथा अवशेष व्यवस्थापन गर्दा वातावरणीय सुरक्षा एवं सास्कृतिक तथा प्राकृतिक सम्पदा संरक्षणसम्बन्धी राष्ट्रिय

रणनीतिअन्तर्गत रही गरिनेछ ।

११.१५ इलेक्ट्रोम्याग्नेटिक फिल्डजन्य जोखिम तथा विद्युतीय फोहोरको सुरक्षित व्यवस्थापन

११.१५.१ सूचना तथा सञ्चार प्रविधि सम्बन्धित उपकरणको प्रयोगबाट सिर्जित फोहोरहरूको न्यूनीकरण तथा व्यवस्थापनको लागि विशेष कार्ययोजना निर्माण गरी लागू गरिनेछ ।

११.१५.२ दूरसञ्चारसम्बन्धी उपकरणबाट उत्सर्ग हुने विकिरणद्वारा हुने सम्भावित स्वास्थ्य जोखिमबारे जनचासो सम्बोधन गर्न विशेष कार्ययोजना बनाई लागू गरिनेछ ।

११.१६ मानव संसाधन विकास

११.१६.१ गुणात्मक तथा सङ्ख्यात्मक पक्षहरू समाहित गरी सूचना तथा सञ्चार प्रविधिसम्बन्धी मानव संसाधन विकास योजना तर्जुमा गरी लागू गरिनेछ ।

११.१६.२ सूचना तथा सञ्चार प्रविधि क्षेत्रमा मानव संसाधन विकासमा संलग्न शिक्षण संस्थाहरू, तालिम प्रदान गर्ने निकायहरूबाट विषय वस्तुको गतिशीलताबमोजिम पाठ्यक्रम परिमार्जन गर्ने नीति अवलम्बन गरिनेछ । यसअनुरूप उक्त संस्थाहरूको क्षमता अभिवृद्धि गर्दै लगिनेछ ।

११.१६.३ मानव संसाधनका कार्यक्रमहरू तर्जुमा गर्दा युवा तथा लैङ्गिक अवधारणालाई विशेष महत्त्व प्रदान गरिनेछ ।

११.१६.४ सूचना तथा सञ्चार विधामा गुणस्तरीय मानव संसाधन विकासको लागि आधारभूत विज्ञान तथा प्राविधिक शिक्षालाई परिमार्जन गर्दै लगिनेछ ।

११.१६.५ विद्यालयमार्फत समुदायलाई इन्टरनेट सेवामा आबद्ध गर्न सामुदायिक विद्यालयहरूमा इन्टरनेट सेवा उपलब्ध गराइनेछ ।

११.१७ सुशासन तथा सार्वजनिक सेवा प्रवाहमा सूचना तथा सञ्चार प्रविधि

११.१७.१ सूचना तथा सञ्चार प्रविधिको प्रयोगद्वारा सार्वजनिक सेवा प्रवाहलाई प्रभावकारी बनाउने विद्यमान प्रयासहरूलाई निरन्तरता प्रदान गरिनेछ । यसै सन्दर्भमा सन् २०१६ सम्ममा विद्युतीय सरकार गुरुयोजना (e-government master plan) संशोधन तथा परिमार्जन गरी लागू गरिनेछ ।

११.१८ प्राकृतिक प्रकोप पूर्वतयारी, न्यूनीकरण तथा उद्धारमा सूचना तथा सञ्चार प्रविधि

११.१८.१ प्राकृतिक प्रकोपसँग सम्बन्धित पूर्वतयारी, विपद् जोखिम न्यूनीकरण पूर्वसूचनालगायतका आयामहरू समावेश गरी दूरसञ्चार तथा सूचना सञ्चार प्रविधिसम्बन्धी विपद्पूर्व तयारी योजना बनाई लागू गरिनेछ ।

११.१९ दूरसञ्चार तथा सूचना तथा सञ्चार प्रविधिमा सामान्जस्यता अन्तर सक्रियता तथा मापदण्ड (Conformance, Interoperability & standards)

११.१९.१ दूरसञ्चार उपकरणबीच हुने रेडियो हस्तक्षेप (Radio Interference) न्यूनीकरण अन्तर-सक्रियता (Interoperability) गुणस्तर तथा विश्वसनीयता सुनिश्चित गर्न यस क्षेत्रमा कार्यरत अन्तर्राष्ट्रिय संस्थाहरूसँग समेतको सहकार्यको नियामक व्यवस्थामा आवश्यक परिमार्जन गरिनेछ ।

११.२० क्लाउड कम्प्युटिङ (Cloud Computing)

११.२०.१ सार्वजनिक निकायहरूले सूचना तथा सञ्चार प्रविधिजन्य उपकरण तथा सेवाहरू खरिद गर्ने योजना गर्दा क्लाउड कम्प्युटिङ (Cloud Computing) लाई एउटा उपयुक्त विकल्पको रूपमा अध्ययन गर्दै उक्त अवधारणा अनुपयुक्त भएमा मात्रै अन्य विकल्प अवलम्बन गर्नुपर्ने व्यवस्था गरिनेछ ।

११.२०.२ विद्यमान एकीकृत सरकारी डाटा सेन्टर (Government Integrated Data center) को प्रभावकारी उपयोग मार्फत सरकारी निकायहरूमा एक क्लाउड कम्पयुटिङ तथा साझा पूर्वाधारसम्बन्धी प्रारूप तयार गरिनेछ ।

११.२१ सूचना तथा सञ्चार प्रविधि प्रयोगमा सुरक्षा एवं विश्वसनीयता प्रत्याभूति

११.२१.१ नागरिकको सूचनाको गोपनीयता तथा वैचारिक स्वतन्त्रतालगायत अन्य मूल्यहरू प्रवर्द्धन गर्न समयानुकूल साइबर सुरक्षा नीति निर्देशिका निर्माण गरी लागू गरिनेछ ।

११.२१.२ सूचना तथा सञ्चार प्रविधिको अवाञ्छित प्रयोगका साथै अनपेक्षित सूचना प्रवाह (Unsolicited Content) निरुत्साहित गर्न दूरसञ्चार कम्पनी तथा इन्टरनेट सेवा प्रदायकहरूलाई प्रशासनिक, प्राविधिक तथा अन्य उपाय अवलम्बन गर्नुपर्ने बाध्यकारी व्यवस्था गरिनेछ ।

११.२१.३ साइबर अपराधको अनुसन्धान तथा अभियोजन (Prosecution) व्यवस्थामा यथोचित परिमार्जन गर्दै विद्युतीय कारोबार ऐनको पूर्ण कार्यान्वयन सुनिश्चित गरिनेछ ।

## १२. रणनीतिहरू

१२.१ सूचना तथा सञ्चार प्रविधिमा पहुँच माध्यम तथा विषयवस्तु विकास

१२.१.१ विद्यालय, स्वास्थ्य संस्था तथा सार्वजनिक पुस्तकालयलगायतका सामुदायिक संस्थाहरूमा सूचना तथा सञ्चार प्रविधि सेवा विस्तार गरिनेछ ।

१२.१.२ प्रमुख सरोकारवालाहरूसमेतको सहकार्यमा स्थानीय तथा मौलिक परम्परागत विषयवस्तु विकास (Local & Indigenous) तथा स्थानीय ज्ञान तथा सूचना सङ्कलनलाई प्रोत्साहन गर्न विशेष कार्यक्रहरू ल्याइनेछ । यसै सन्दर्भमा नेपालमा प्रचलनमा रहेका अन्य भाषा भाषीमार्फत पनि सूचना तथा सञ्चार

प्रविधि सेवाको पहुँच विस्तार गर्न स्थानीय भाषामा कम्प्युटिङ् (Local Language Computing) गर्ने अवधारणालाई प्रवर्द्धन गरिनेछ ।

१२.१.३ राष्ट्रिय सामुदायिक तथा स्थानीय स्तरमा हुने सूचना तथा सञ्चार प्रविधिसम्बन्धी गतिविधिहरूमा महिलाहरूको अर्थपूर्ण सहभागिता सुनिश्चित गर्न विशेष पहल गरिनेछ ।

१२.१.४ इन्टरनेट उपभोक्ताहरूलाई सहज तथा प्रभावकारी तरिकाले विषयवस्तु (Content) मा पहुँच सुनिश्चित गर्न यथोचित नियामक व्यवस्था अवलम्बन गरी विषयवस्तु वितरण सञ्जाल (Content Distribution Network) हरूको स्थानीय उपस्थिति (Point of Presence) लाई प्रोत्साहन गरिनेछ ।

१२.१.५ इन्टरनेट सुशासन (Internet Good Governance) को क्षेत्रमा अन्तर्राष्ट्रिय स्तरमा हुने गतिविधिहरूमा नेपालको अर्थपूर्ण सहभागिता तथा प्रतिनिधित्व सुनिश्चित गरिनेछ । यसअन्तर्गत IPV-6 अवलम्बन तथा अन्तर्राष्ट्रिय डोमेन नेम (Internatiional Domain Names) को कार्यान्वयन गरिनेछ ।

१२.२ ग्रामीण तथा सुदूर इलाकाहरूमा दूरसञ्चार एवं सूचना तथा सञ्चार प्रविधिको पहुँच

१२.२.१ हाल विद्यमान सूचना तथा सञ्चार प्रविधिको पहुँच नपुगेका समुदाय तथा क्षेत्रहरूसम्बन्धी नियामक तथा नीतिगत व्यवस्था तथा उक्त व्यवस्थाको कार्यान्वयनबीचको अन्तर विश्लेषण गरिनेछ ।

१२.२.२ सूचना तथा सञ्चार प्रविधिको पहुँचबाट बाहिर रहेका क्षेत्र एवं समुदायहरू पहिचान गर्दै आवश्यक नीतिगत व्यवस्थाका साथै ग्रामीण दूरसञ्चार विकास कोष मार्फत प्राप्त हुने स्रोत उक्त क्षेत्र तथा समुदायहरूमा लक्षित गर्न एक विस्तृत अध्ययन गरी कार्ययोजना बनाइनेछ ।

१२.२.३ समुदायहरूलाई सूचना तथा सञ्चार प्रविधिको अर्थपूर्ण प्रयोगमा सक्षम बनाउन एक राष्ट्रव्यापी डिजिटल

साक्षरता कार्यक्रम तर्जुमा गरी लागू गरिनेछ ।

१२.२.४ ब्रोडब्याण्ड नेटवर्क तथा सेवालाई ग्रामीण दूरसञ्चार विकास कोष समेतको परिचालनद्वारा ग्रामीण तथा शहरी क्षेत्रहरूमा विस्तार गर्न आवश्यक व्यवस्था मिलाइनेछ ।

१२.२.५ जिल्ला सदरमुकामभन्दा बाहिर प्रतिस्पर्धी सूचना तथा सञ्चार सेवाको विस्तार गर्ने वातावरण सिर्जना गर्न आर्थिक, नीतिगत तथा नियामक प्रोत्साहनका उपायहरू अवलम्बन गरिनेछ । यसैअनुरूप दूरसञ्चार सेवाको पहुँचबाट पछाडि परेका क्षेत्रहरूमा न्यूनतम उपभोक्ता मूल्यमा ब्रोडब्याण्ड सेवा प्रवाहको सर्तसहित केही रेडियो फ्रिक्वेन्सी स्पेक्ट्रम (Radio Frequency Spectrum) विशेष इजाजत व्यवस्था मार्फत उपलब्ध गराइनेछ ।

१२.२.६ सूचना तथा सञ्चार प्रविधिको विस्तार र प्रयोगका लागि स्थानीय निकायहरूलाई ससर्त अनुदान र ग्रामीण दूरसञ्चार विकास कोषबाट रकम उपलब्ध गराउन सकिनेछ ।

१२.३ विशेष आवश्यकता भएका तथा अपाङ्ग व्यक्तिहरूमा सूचना तथा सञ्चार प्रविधिको पहुँच

१२.३.१ सूचना तथा सञ्चार प्रविधिमा विशेष आवश्यकता भएका तथा अपाङ्ग व्यक्तिहरूको पहुँच सुनिश्चित गर्न आवश्यक कार्यक्रम तर्जुमा गरी लागू गरिनेछ । यस कार्यमा ग्रामीण दूरसञ्चार विकास कोषको भूमिका र कार्यक्षेत्रमा आवश्यक परिमार्जन गरिनेछ ।

१२.३.२ विशेष आवश्यकता भएका तथा अपाङ्ग व्यक्ति तथा त्यस्ता समूहलाई सहयोग गर्ने व्यक्तिहरूलाई समेत लक्षित गरी उपयुक्त तालिम कार्यक्रहरू सञ्चालन गरिनेछ ।

१२.४ युवा तथा महिला वर्गको लागि सूचना तथा सञ्चार प्रविधि

१२.४.१ लैङ्गिक असमानता कम गर्नुका साथै लैङ्गिक हिसा

रोकथाम गर्ने र लैङ्गिक हिंसासम्बन्धी उजुरी प्रक्रिया सहज बनाउन तथा त्यस प्रकारका घटनाहरू र सम्बोधन समन्वय प्रवर्द्धन गर्न सूचना तथा सञ्चार प्रविधिको प्रयोगलाई बढाइनेछ ।

१२.४.२ ग्रामीण क्षेत्रहरूमा विभिन्न सरकारी एवं गैरसरकारी संस्थाहरूमार्फत युवा तथा महिलाहरूलाई सूचना प्रविधिसम्बन्धी तालिम सञ्चालन गरिनेछ ।

१२.४.३ सूचना तथा सञ्चार प्रविधिको प्रयोगमार्फत युवा तथा महिलाहरूलाई राष्ट्रिय नीति निर्माण योजना तर्जुमा लगायतका प्रक्रियाहरुमा सहभागी गराईनेछ ।

१२.४.४. सुरुवाती (Start-up) लगायत इन्क्युवेटर परियोजना (Incubator Project) हरूको प्रवर्द्धनमार्फत युवा तथा महिलाहरूमा सूचना तथा सञ्चार प्रविधि क्षेत्रमा उद्यमशीलता विकास गर्न विभिन्न नीतिगत व्यवस्था गरिनेछ ।

१२.५ शिक्षा अनुसन्धान तथा विकास (Research & Development) मा सूचना तथा सञ्चार प्रविधि

१२.५.१ शैक्षिक सेवालाई सर्वसुलभ तथा प्रभावकारी बनाउन अनलाइन सिकाइ (Online learning) पद्धतिको विकास एवं प्रयोगलाई प्रोत्साहन गर्दै लगिनेछ ।

१२.५.२ प्राथमिक, माध्यमिक तथा उच्च शिक्षा क्षेत्रमा सूचना तथा सञ्चार प्रविधिको प्रयोगलाई प्रोत्साहन गरिनेछ ।

१२.५.३ रोजगारमुखी दक्षता (Employment Driven Competencies) अभिवृद्धि गर्न राष्ट्रिय सूचना तथा सञ्चार प्रविधि पाठ्यक्रम तथा दक्षता प्रमाणीकरण पद्धतिको विकास गरी लागू गरिनेछ ।

१२.५.४ शिक्षक तालिम केन्द्रहरूलाई क्षमता अभिवृद्धिका विशेष कार्ययोजनामार्फत शिक्षकहरूलाई सूचना तथा सञ्चार प्रविधिमा स्तरीय तालिम प्रदान गर्न व्यवस्था मिलाइनेछ ।

१२.५.५ सरोकारवालाहरूसमेतको संलग्नतामा सूचना तथा सञ्चार प्रविधिसम्बन्धी खोज तथा अन्वेषण (Research

& Development) प्रवर्द्धन गर्न विशेष कार्यक्रम लागू गरिनेछ ।

१२.५.६ दुर्गम तथा प्रविधिको पहुँचबाट बाहिर रहेका समुदायका विद्यार्थी, शिक्षक तथा शैक्षिक संस्थाहरूमा सूचना सञ्चार प्रविधि उपकरण तथा सेवाहरूमा सर्वसुलभ पहुँच सुनिश्चित गरिनेछ ।

१२.५.७ सूचना तथा सञ्चार प्रविधिमा नवीनतम खोज तथा अनुसन्धान प्रवर्द्धन गर्न विश्वविद्यालय र राष्ट्रिय तथा अन्तर्राष्ट्रिय अनुसन्धान संस्थाहरूसँगको सहकार्यलाई निरन्तर प्रोत्साहन गर्दै लगिनेछ ।

१२.५.८ विद्यालयहरूमा विद्युतीय पुस्तकालय (e-library) को अन्तरसञ्जाल निर्माण गरिनेछ ।

१२.५.९ खुला विश्वविद्यालय (Open university) र दुरशिक्षा सिकाइ (Distance learning) मा सूचना तथा सञ्चार प्रविधिको प्रवर्द्धन गरिनेछ ।

१२.६ सूचना तथा सञ्चार प्रविधिको प्रयोग

१२.६.१ सूचना प्रविधि पार्कमा लगानी प्रोत्साहन गर्न विशेष कार्यक्रम बनाई लागू गरिनेछ । यसै सन्दर्भमा उक्त पार्कमा सुरुवाती (start up) लगायत इन्क्युवेटर परियोजना (incubator project) समेत आकर्षित गरिनेछ ।

१२.६.२ सन् २०१६ सम्ममा नेपालमा सूचना तथा सञ्चार प्रविधि उद्योग एवं व्यावसायको विद्यमान अवस्था, प्रतिस्पर्धी क्षमतालगायतका विविध आयामहरू समेटी एक विस्तृत अध्ययन गरिनेछ ।

१२.६.३ स्थानीय सूचना तथा सञ्चार प्रविधिजन्य उद्योग तथा सेवाहरू प्रवर्द्धन गर्न विशेष कर प्रणाली तथा आर्थिक प्रोत्साहनका विधि उपायहरू अवलम्बन गरिनेछ ।

१२.६.४ नवीनतम विषयवस्तु तथा सेवाहरूको विकासलाई प्रवर्द्धन गरिनेछ ।

१२.६.५ विश्वविद्यालय सूचना तथा सञ्चार प्रविधिसँग सम्बन्धित शिक्षण संस्था, व्यावसायिक तथा वित्तीय संस्थाहरूसँगको

समेत सहकार्यमा सूचना तथा सञ्चार प्रविधि क्षेत्रमा incubator program लगायत उद्यमशीलता प्रवर्द्धन गर्ने विशेष कार्यक्रमहरू तर्जुमा गरी लागू गरिनेछ ।

१२.६.६ अन्तर्राष्ट्रिय रूपमा प्रतिस्पर्धी सूचना तथा सञ्चार प्रविधिजन्य वस्तु तथा सेवाहरू विकसित गर्न निजीक्षेत्रसँग समेतको सहकार्यमा अन्तर्राष्ट्रिय मापदण्ड (International Standards) तथा सर्वोत्तम अभ्यासहरूको (Best Practices) को प्रयोगलाई प्रोत्साहन गरिनेछ ।

१२.७ साना तथा मझौला व्यवसाय एवं विद्युतीय व्यापार (e-commerce)

१२.७.१ कृषि पर्यटन तथा उत्पादनशील क्षेत्रहरूमा सक्रिय साना तथा मझौला व्यवसायहरूमा विद्युतीय व्यापारको प्रयोगलाई निरन्तर प्रोत्साहन गरिनेछ ।

१२.७.२ राष्ट्रिय, क्षेत्रीय तथा अन्तर्राष्ट्रिय स्तरमा हुने व्यापारिक कारोबारहरूमा विद्युतीय कारोबारको अवधारणालाई कार्यान्वयन गरिनेछ ।

१२.७.३ नेपालमा अनलाइन पेमेन्टको विद्यमान अवस्थाको अध्ययन गरी सुरक्षित अन्तरसक्रिय (interoperable) सर्वसुलभ तथा अन्तर्राष्ट्रिय मापदण्डसँग समेत सामञ्जस्य हुने गरी भुक्तानी तथा राफसाफ प्रणाली (Payment and Settlement System) विकास गरिनेछ ।

१२.७.४ सरकारी स्तरबाट हुने भुक्तानी व्यवस्थालाई समयानुकूल परिमार्जन गरिनेछ ।

१२.७.५ मोबाइल फोनलाई वित्तीय समावेशीकरण (Financial inclusion) को एक प्रमुख माध्यमको रूपमा स्थापित गर्न आवश्यक कार्यहरू गरिनेछ । यस क्रममा सम्बन्धित निकायहरूको सम्मति र सहभागितामा मोबाइल बैंकिङ् सेवालाई प्रभावकारी रूपमा अघि बढाइनेछ ।

१२.७.६ नेपालमा सूचना तथा सञ्चार प्रविधिको क्षेत्रमा काम

गर्ने स्वदेशी एवं विदेशी व्यक्ति तथा संस्थाहरूको तथ्याङ्क सङ्कलन गरी निजहरूले गर्ने व्यवसायलाई पारदर्शी बनाइनेछ ।

१२.८ कृषिमा सूचना तथा सञ्चार प्रविधि

१२.८.१ कृषक सम्बन्धित सरकारी निकाय, कृषि सहकारीहरूलगायत अन्य स्थानीय तथा राष्ट्रिय स्तरका सरोकारवालाहरूलाई कृषि प्रविधि र बजार मूल्यसम्बन्धी सूचना तथा अन्य उपयोगी सूचना उपलब्ध गराउन एकीकृत कृषि सूचना प्रणाली (Integrated Agriculture Information System) को विकास गरिनेछ ।

१२.८.२ परम्परागत तथा नवीनतम सूचना तथा सञ्चार प्रविधिबारे किसान, कृषि सहकारी संस्थाहरू तथा कृषि प्राविधिकहरूको सचेतना तथा क्षमता अभिवृद्धि गर्न विशेष कार्यक्रमहरू तर्जुमा गरिनेछ ।

१२.८.३ प्राकृतिक विपद्बाट हुने जोखिम न्यूनीकरण कम गर्नुका साथै कृषि उत्पादनमा सहयोग पुऱ्याउन मौसमसम्बन्धी पूर्व सूचना प्रणाली विकास गरी लागू गरिनेछ ।

१२.९ पर्यटनमा सूचना तथा सञ्चार प्रविधि

१२.९.१ योजना निर्माण, अनुगमन तथा मुल्याङ्कनसम्बन्धी तथ्याङ्क सङ्कलनमा साथै पर्यटनसम्बन्धी विशिष्ट सेवा तथा गन्तव्यबारे जानकारी प्रदान गर्न तथा व्यवसायलाई सहजीकरण गर्न सरोकारवालाहरूलाई प्रोत्साहन गरिनेछ ।

१२.९.२ राष्ट्रिय सम्पदा संरक्षण प्राकृतिक स्रोत व्यवस्थापन तथा पूर्वचेतनावनी (Early Warning) सँग सम्बन्धित कार्यहरूको व्यवस्थापन गर्न एकीकृत भौगोलिक सूचना प्रणालीमा आधारित पद्धतिको विकास गरिनेछ ।

१२.९.३ पर्यटन उद्योग तथा व्यवसायहरूलाई व्यवसाय सञ्चालन बजार प्रवर्द्धन तथा उत्कृष्ट सेवा प्रदान गर्न सहयोग

पुऱ्याउने उद्देश्यले एक विस्तृत पर्यटन सूचना प्रणालीको विकास गरिनेछ ।

१२.९.४ अतिथि सेवा (Hospitality) सम्बन्धी तालिमको स्तरीयता तथा प्रभावकारिता सुनिश्चित गर्न सूचना तथा सञ्चार प्रविधिको नवीनतम प्रयोगलाई प्रोत्साहन गरिनेछ ।

१२.९.५ नेपाल भ्रमण गर्न चाहने पर्यटकहरूलाई विद्युतीय प्रवेशाज्ञा (e-visa) प्रदान गर्न आवश्यक व्यवस्था मिलाइनेछ ।

१२.९.६ पदयात्रा र पर्वतारोहणमा जाने पदयात्री र पर्वतारोहीको लागि मौसम भविष्यवाणी गर्ने प्रविधिलाई सूचना प्रविधिको प्रयोगबाट विश्वसनीय बनाइनेछ । यस कार्यमा स्वदेशी विज्ञहरूलाई प्रोत्साहन गरिनेछ ।

१२.१० स्वास्थ्यमा सूचना तथा सञ्चार प्रविधि

१२.१०.१ टेलिमेडिसिनको प्रभावकारितालाई अझै अभिवृद्धि गर्न तथा उक्त प्रविधिमा आधारित स्वास्थ्य सेवा प्रवाहको पहुँच देशव्यापी रूपमा विस्तार गर्न टेलिमेडिसिनसम्बन्धी रणनैतिक प्रारूप सन् २०१६ भित्रमा बनाई लागू गरिनेछ ।

१२.१०.२ सबै प्रकारका स्वास्थ्य संस्थाहरूमा सूचना तथा सञ्चार प्राविधिको पहुँच तथा उपलब्धता सुनिश्चित गरिनेछ ।

१२.१०.३ स्वास्थ्य सेवामा कार्यरत जनशक्तिको सूचना तथा सञ्चार प्रविधि प्रयोगमा दक्षता अभिवृद्धि गर्न विशेष कार्यक्रम तर्जुमा गरिनेछ । यस सन्दर्भमा स्वास्थ्यसम्बन्धी तालिम तथा जनशक्ति विकास गर्ने संस्थाहरूको क्षमता अभिवृद्धि गर्दै लगिनेछ ।

१२.१०.४ सबै प्रकारका सर्ने वा नसर्ने रोग तथा महामारीसम्बन्धी सचेतना अभिवृद्धि गर्न तथा व्यवस्थापन गर्न सूचना तथा सञ्चार प्रविधिमा आधारित पद्धति विकास गरिनेछ ।

१२.१०.५ स्वास्थ्य संस्थाहरूमा आउने बिरामीहरूसम्बन्धी विद्युतीय सूचनालाई सुरक्षित एवं गोपनीय तवरमा

राख्न आवश्यक व्यवस्था गरिनेछ ।

१२.१०.६ राष्ट्रिय स्वास्थ्य बिमा कार्यक्रममा सूचना सञ्चारको आधुनिक प्रविधि प्रयोग गरिनेछ ।

१२.११ दूरसञ्चार पूर्वाधार

१२.११.१ ग्रामीण दूरसञ्चार विकास कोष (Rural Telecome Development Fund) को अधिकतम परिचालन गरी फाइबर अप्टिक तथा तारबिहीन (wireless) प्रविधिमा आधारित मेरुदण्डीय पूर्वाधार (Back haul) देशव्यापी रूपमा विकास गरिनेछ ।

१२.११.२ क्षेत्रीय तथा अन्तर्राष्ट्रिय आबद्धता (connectivity) सहित सार्वजनिक निजी साझेदारी तथा अन्य व्यवस्था मार्फत द्रुततर गतिको भरपर्दो दूरसञ्चार मेरुदण्डीय पूर्वाधार निर्माण गरिनेछ ।

१२.११.३ इजाजत व्यवस्था प्रारूपअन्तरगत भौतिक पूर्वाधारको साझा प्रयोग नेटवर्क अन्तर आवद्धता (Interconnectivity) तथा सेवा शुल्क निर्धारणलगायतका विषयहरूमा बजारमा आधारित निर्देशिका (Market Based Guidelinces) बनाई लागू गरिनेछ ।

१२.११.४ सासेक (SASEC) तथा एशियाली सूचना राजमार्ग (Asian Information Superhighway) लगायतका क्षेत्रीय तथा अन्तर्राष्ट्रिय दूरसञ्चार विकास परियोजनाहरूमा नेपालको अर्थपूर्ण सभागिता तथा ती आयोजनाहरूको नेपालको तर्फबाट प्रभावकारी कार्यान्वयन गरिनेछ ।

१२.११.५ सडक, विद्युत् तथा रेल्वे पूर्वाधारका परियोजनाहरू डिजाइनमा सरोकारवालाहरूसँगको सहकार्यमा सूचना तथा सञ्चार प्रविधि पूर्वाधारको प्रावधानसमेत समावेश गरिनेछ ।

१२.११.६ अन्तर्राष्ट्रिय पियरिङ बिन्दुहरू (International Peering Points) मार्फत हुने इन्टरनेट प्रयोगमा व्ययभार कम गर्न तथा सम्भावित सुरक्षा जोखिम (Security Risk) न्यून गर्न स्थानीय पियरिङ बिन्दु अथवा स्थानीय

एक्सचेन्ज (Local Peering Point and Local Exchange) को प्रयोग तथा प्रभावकारिता प्रवर्द्धन गरिनेछ ।

१२.११.७ दूरसञ्चार पूर्वाधार विस्तारलाई सहजीकरण गर्ने लक्ष्यअनुरूप पूर्वाधार स्थलको अधिकार (Right of way) सुनिश्चित गर्न अवलम्बन गर्नुपर्ने प्रशासनिक प्रक्रिया सरल तथा चुस्त बनाउन नियामक प्रावधानहरू परिमार्जन गर्दै अन्य आवश्यक उपायहरू अवलम्बन गरिनेछ ।

१२.११.८ सक्रिय तथा निष्क्रिय पूर्वाधार (Active & Passive Infrastructure) को साझा प्रयोग प्रवर्द्धन गर्न आवश्यक नियामक व्यवस्था तथा निर्देशिकाहरू तर्जुमा गरी लागू गरिनेछ ।

१२.११.९ मोबाइल ब्रोडब्याण्ड सेवा विस्तार गर्न आवश्यक लागत मितव्यी (Backhaul) सेवा तथा तीव्र गतिको डिजिटल माइक्रोवे सञ्चार (Digital Microwave Communication) का लागि फ्रिक्वेन्सी स्पेक्ट्रम व्यवस्थापन गर्ने प्रभावकारी नियमन तथा अन्य व्यवस्था मिलाइनेछ ।

१२.११.१० स्मार्ट सिटीको अवधारणा क्रमशः कार्यान्वयनमा लगिने छ र यसका लागि सुरुमा केही शहरहरू पहिचान गरी स्मार्ट सिटीका रूपमा विकास गरिनेछ । सोही अनुभवका आधारमा अन्य शहरहरूलाई पनि समयबद्ध रूपमा स्मार्ट सिटीका रूपमा विकास गरिनेछ ।

१२.११.११ नेपाललाई उपलब्ध अर्बिटल स्लट (Orbital Slot) उपयोग गर्ने सम्बन्धमा सम्भाव्यता अध्ययन गरिनेछ ।

१२.१२ दूरसञ्चार सूचना तथा सञ्चार प्रविधि तथा प्रसारणको कन्भरजेन्स (Convergence)

१२.१२.१ Convergence द्वारा सिर्जित अवसर तथा चुनौतीहरू सम्बोधन गर्न विद्यमान कानुनी, नियामक तथा संस्थागत व्यवस्थाहरूमा आवश्यक परिमार्जन गरिनेछ ।

१२.१२.२ प्रसारण क्षेत्रलाई डिजिटल प्रणालीमा रूपान्तरण गर्न तयार गरिएको समयबद्ध मार्ग-चित्र कार्यान्वयनमा ल्याइनेछ ।

१२.१३ जलवायु परिवर्तनको प्रभाव न्यूनीकरणमा सूचना तथा सञ्चार प्रविधि

१२.१३.१ जलवायु परिवर्तन अनुकूलन प्रक्रियाहरूमा आउने चुनौतीहरूलाई सम्बोधन गर्न मोबाइल फोन, सामुदायिक रेडियो, इन्टरनेट तथा अन्य सम्बन्धित सूचना तथा सञ्चार प्रविधि माध्यहरूको नवीनतम (Innovative) प्रयोगलाई प्रवर्द्धन गरिनेछ ।

१२.१३.२ वृहत्तर अनुकूल लक्ष्यहरू (Climate Change Adaptation Goals) हासिल गर्न आवश्यक सूचना तथा ज्ञान आदान प्रदान, क्षमता अभिवृद्धि, नेटवर्किङ तथा विद्युतीय अनुकूलन सेवाहरू (e-adaptation Applications) लगायतका क्षेत्रहरूमा सूचना तथा सञ्चार प्रविधिको प्रयोग प्रवर्द्धन गरिनेछ ।

१२.१३.३ राष्ट्रिय तथा स्थानीय अनुकूल कार्ययोजना (National and Local Adaptation Plan of Action) को सफल तथा प्रभावकारी कार्यान्वयनमा सूचना तथा सञ्चार प्रविधिको अधिकतम प्रयोग गरिनेछ ।

१२.१४ वातावरण तथा प्राकृतिक श्रोत व्यवस्थापनमा सूचना तथा सञ्चार प्रविधि

१२.१४.१ भौगोलिक सूचना प्रणाली (Geographic Information System) दुर संवेदन (Remote Sensing) तथा मौसम पूर्वानुमान प्रविधि प्रयोग गरी वातावरणीय चुनौती व्यवस्थापनमा सरोकारवालाहरूको क्षमता अभिवृद्धि गर्दै लगिनेछ ।

१२.१५ इलेक्ट्रो म्याग्नेटिक फिल्ड (Electro Magnetic Field) को सम्भावित स्वास्थ जोखिम तथा इलेक्ट्रोक फोहोर व्यवस्थापन

१२.१५.१ नेपालमा विद्युत् चुम्बकीय क्षेत्रको न्यूनतम बिन्दु (EMF

Threshhold) को निर्धारण विश्व स्वास्थ्य सङ्गठन (World Health Organization / International Commission on Non-Lonising Radiation Protection (WHO/ICNIRP) द्वारा जारी निर्देशिकाको आधारमा गरिनेछ । यसका अतिरिक्त रेडियो फ्रिक्वेन्सीबाट सम्भावित जोखिमको व्यवस्थापनसम्बन्धी नीति निर्माण गरिनेछ ।

१२.१५.२ EMF जोखिम न्यूनीकण गर्न स्वेच्छिक तथा बाध्यकारी दुवै उपाय अवलम्बन गरिनेछ ।

१२.१६ मानव संसाधन विकास

१२.१६.१ समग्र सूचना तथा सञ्चार प्रविधिको विकास, विस्तार र प्रवर्द्धन सहजीकरण नियमन गर्न विद्यमान सूचना तथा सञ्चार मन्त्रालय, सूचना प्रविधि विभाग, नेपाल दूरसञ्चार प्राधिकरणलगायतका निकायहरूको पुनरसंरचना गरिनेछ ।

१२.१६.२ सूचना सञ्चार प्रविधि उद्योग तथा शैक्षिक संस्थाहरूसमेतको सहभागितामा अल्पकालीन, मध्यम तथा दीर्घकालीन सूचना तथा सञ्चार प्रविधिसम्बन्धी मानव संसाधन विकास योजना लागू गरिनेछ ।

१२.१६.३ दूरसञ्चार तथा सूचना तथा सञ्चार प्रविधि विधाहरूमा गुणस्तरीय शिक्षा तथा तालिम प्रदान गर्न नमूना केन्द्रहरू (Centers for Excellence) स्थापना गरिनेछ ।

१२.१६.४ डिजिटल साक्षरता (Digital literacy) अभिवृद्धि गर्न राष्ट्रिय डिजिटल साक्षरता कार्यक्रम तर्जुमा गरी लागू गरिनेछ ।

१२.१६.५ सम्पूर्ण नगारिकहरूमा पहुँच पुग्ने गरी सूचना तथा सञ्चार प्रविधि सचेतना कार्यक्रम लागू गरिनेछ ।

१२.१६.६ सार्जनिक तथा निजी क्षेत्रमा कार्यरत संस्थाहरूलाई सूचना तथा सञ्चार प्रविधिसम्बन्धी दक्षता अभिवृद्धि तथा समग्र रूपमा मानव संसाधन विकासमा लगानी अभिवृद्धि गर्न विशेष पहल गरिनेछ ।

१२.१६.७ स्थानीय निकाय निजी क्षेत्र तथा नागरिक समाजसमेतको

सहभागितामा समुदायमा लक्षित सूचना तथा सञ्चार प्रविधि तालिम तथा सचेतना कार्यक्रमहरू लागू गरिनेछ ।

१२.१६.८ शारीरिक अशक्तता भएका तथा असहाय समूहहरूको सूचना तथा सञ्चार प्रविधिमा पहुँच सुनिश्चित गर्न विशेष कार्यक्रम तर्जुमा गरी लागू गरिनेछ ।

१२.१६.९ सूचना तथा सञ्चार प्रविधि क्षेत्रको जनशक्ति विकास गर्न तालिम प्रदायक संस्थाहरू मार्फत अन्तर्राष्ट्रिय मान्यता प्राप्त तालिमहरू सञ्चालन गरिनेछ ।

१२.१६.१० शिक्षा मन्त्रालयद्वारा तर्जुमा गरिएको शिक्षामा सूचना तथा सञ्चार प्रविधि गुरुयोजनाको प्रभावकारी कार्यान्वयन गरिनेछ ।

१२.१७ सुशासन तथा सार्वजनिक सेवा प्रवाहमा सूचना तथा सञ्चार प्रविधि

१२.१७.१ विद्युतीय सुशासनका प्रयासहरूको गतिशीलता एवं प्रभावकारिता सुनिश्चित गर्न संस्थागत व्यवस्था सुदृढ गरिनेछ । यस क्रममा गभरमेन्ट इन्टरप्राइजेज आर्किटेक्चर (GEA) राष्ट्रिय इन्टरअपरेबिलिटी फ्रेमवर्क (Government Interoperebiolity Framework) लगायतका प्रारूपहरूको कार्यान्वयन गरिनेछ ।

१२.१७.२ नेपालको विद्युतीय सुशासनसम्बन्धी क्रियाकलापहरू खुला सरकार (Open Government) को अवधारणाबाट निर्देशित रहनेछन् । यस सन्दर्भमा सूचना तथा तथ्याङ्कहरू विभिन्न माध्यमबाट विश्लेषण गर्न सकिने स्वरूप (Formet) मा उपलब्ध गराउने व्यवस्था गरिनेछ ।

१२.१७.३ शासन प्रणाली सञ्चालनमा समावेशिता तथा सहभागिता प्रवर्द्धन गर्न सामाजिक सञ्जालको प्रभावकारी प्रयोगलाई प्रोत्साहन गर्दै लगिनेछ ।

१२.१७.४ सूचना तथा सञ्चार प्रविधिको सिर्जनशील प्रयोगद्वारा सार्वजनिक सेवा प्रवाहमा नवीनतम प्रयोगहरू भैरहेको सन्दर्भमा उक्त प्रविधिमा कर्मचारीहरूको दक्षता

अभिवृद्धि गरिनेछ ।

१२.१७.५ नीति तथा योजना निर्माण प्रक्रियामा भौगोलिक सूचनाको माध्यमद्वारा प्रभावकारी सहयोग पुऱ्याउन राष्ट्रिय भौगोलिक सूचना प्रणाली पूर्वधार (National Geographic Information Infrastructure) को विकास गरिनेछ ।

१२.१७.६ स्मार्ट सिटीको अवधारणाअनुरूप नगरपालिकालाई क्रमशः स्मार्ट सिटीको रूपमा परिणत गरिनेछ । यस कार्यलाई शहरी विकास मन्त्रालयमार्फत अघि बढाइने छ ।

१२.१८ प्राकृतिक प्रकोप पूर्वतयारी, न्यूनीकरण तथा उद्धारमा सूचना तथा सञ्चार प्रविधि

१२.१८.१ प्राकृतिक प्रकोप जोखिम न्यूनीकरण पूर्वानुमान, पूर्वतयारी, असर न्यूनीकरण तथा उद्धारमा सूचना तथा सञ्चार प्रविधिको प्रयोगबारे कार्यक्रम तर्जुमा गरी लागू गरिनेछ ।

१२.१८.२ प्राकृतिक प्रकोप पूर्वतयारी, असर न्यूनीकरण राहत तथा उद्धारमा अन्तर्राष्ट्रिय स्तरमा भएका सफलतम प्रचलनहरू (Best Practices) नेपालको सन्दर्भमा प्रभावकारी बनाउन विशेष पहल गरिनेछ । विपत्का बेला दूरसञ्चार सेवालाई दुरुस्त रूपमा परिचालन गर्न विपद् व्यवस्थापनलाई सहज बनाउन एक आपतकालीन दूरसञ्चार रणनीति तयार गरी कार्यान्वयन गरिनेछ ।

१२.१९ दूरसञ्चार तथा सूचना तथा सञ्चार प्रविधिमा सामन्जस्यता अन्तर सक्रियता तथा मापदण्ड (Conformance, Interoperability & Standards)

१२.१९.१ अन्तर्राष्ट्रिय दूरसञ्चार सङ्घ (ITU) लगायतका मानक निर्धारण प्रतिष्ठित संस्थाहरूद्वारा विकसित सामञ्जस्यता मूल्याङ्कन प्रारूप (Conformity-Assessment Regimes) अङ्गीकार गर्दै नेपालले

आयात गर्ने सूचना तथा सञ्चार प्रविधि सञ्जाल तथा उपकरणको विश्वसनीयता, गुणस्तर निर्धारण तथा उक्त उपकरणहरूबीच अन्तर्राष्ट्रियस्तरमै स्थापित मानकबमोजिमको अन्तर-सक्रियता (Interoperability) सुनिश्चित गर्न विशेष पहल गरिनेछ । साथै सामञ्जस्यता र अन्तर्क्रियता (Conformance and Interoperability) को क्षेत्रमा जनशक्तिको विकास गरिनेछ ।

१२.२० क्लाउड कम्प्युटिङ्ग (Cloud Computing)

१२.२०.१ क्लाउड कम्प्युटिङ्गको क्रमिक विकासबाट सिर्जित अवरहरूको उपयोग गर्दै उक्त प्रविधिलाई विद्युतीय सुशासनको प्रयासको एक प्रमुख आयामको रूपमा स्थापित गर्न राष्ट्रिय क्लाउड कम्प्युटिङ्ग रणनीति सन् २०१७ सम्ममा लागू गरिनेछ ।

१२.२०.२ नेपालका सरकारको एकीकृत डाटा सेन्टर (GIDC) मा रहेका श्रोतहरू प्रयोग गर्दै एक क्लाउड कम्प्युटिङ्ग पूर्वाधार निर्माण गरिनेछ । यसअनुरूप सन् २०१८ भित्रमा सरकारले कम्तीमा पनि १० वटा विद्युतीय माध्यम (Online) द्वारा प्रदान गरिने सेवाहरू क्लाउड कम्प्युटिङ्ग पूर्वाधार मार्फत प्रवाह गर्ने व्यवस्था मिलाइनेछ ।

१२.२०.३ सरकारी निकायहरूद्वारा कुनै पनि सूचना तथा सञ्चार प्रविधिजन्य उपकरण तथा सेवाहरूमा लगानी गर्नुपूर्व क्लाउड कम्प्युटिङ्ग (Cloud Computing) विकल्पको विस्तृत मूल्याङ्कन गर्ने परिपाटी मिलाइनेछ ।

१२.२१ सूचना तथा सञ्चार प्रविधि प्रयोगमा सुरक्षा एवं विश्वास प्रत्याभूति

१२.२१.१ प्रभावकारी कानुनी व्यवस्थामा आधारित साइबर अपराधको रोकथाम तथा अभिजनको प्रणालीको विकास गरिनेछ । साइबर अपराध रोकथाम तथा अनुसन्धान गर्न कानुन कार्यान्वयन निकाय (Law Enforcement Agencies) हरूको क्षमता अभिवृद्धि गर्दै लगिनेछ ।

१२.२१.२ अनलाइन सुरक्षा प्रत्याभूत गर्न तथा तत्सम्बन्धी चेतना अभिवृद्धि गर्न व्यक्ति तथा व्यवसाय लक्षित कार्यक्रमहरू तर्जुमा गरी लागू गरिनेछ ।

१२.२१.३ सरकारी तालिम केन्द्रहरूसँग समेतको सहकार्यमा उच्चस्तरको साइबर सुरक्षा चुनौती सामना गर्न एक वृहत क्षमता अभिवृद्धि कार्यक्रम तर्जुमा गरी लागू गरिनेछ ।

१२.२१.४ उपयुक्त संयन्त्रको मातहतमा एक साइबर सुरक्षा निकाय (Cyber Security Cell) स्थापना गर्दै साइबर आक्रमण पहिचान रोकथाम प्रतिरक्षालगायतका आयामहरूको प्रभावकारी सम्बोधन हुने व्यवस्था मिलाइनेछ । यसै सन्दर्भमा सूचना तथा सञ्चार मन्त्रालयमा आपतकालीन कम्प्युटर उद्धार समूह (Computer Emergency Response Team) स्थापना गरी साइबर सुरक्षासम्बन्धी चुनौतीहरू शीघ्र सम्बोधन गर्ने व्यवस्था मिलाइनेछ ।

१२.२१.५ सम्बन्धित शैक्षिक संस्थाहरूसँग समेतको सहकार्यमा साइबर सुरक्षाका क्षेत्रमा पर्याप्त जनशक्तिको विकास गरिनेछ ।

१२.२१.६ विशेषज्ञताको तालिम (Certified Specialist Training) मार्फत सूचना सुरक्षा विज्ञहरूको निरन्तर दक्षता अभिवृद्धिका कार्यक्रम लागू गरिनेछ ।

१२.२१.७ साइबर सुरक्षा शिक्षा प्रदान गरी समग्रमा सूचना तथा सञ्चार प्रविधिको प्रयोगकर्तालाई सक्षम बनाउन विशेष कार्यक्रम तर्जुमा गरिनेछ ।

१२.२१.८ विद्युतीय कारोबार ऐन, २०६३ मा उल्लेखित प्रावधानअनुरूप सूचना प्रविधि न्यायाधिकरण (IT Tribunal) स्थापना गरिनेछ ।

## १३. संस्थागत व्यवस्था

१३.१ विषयगत निकायहरूको भूमिका र जिम्मेवारी

१३.१.१ यस नीतिको कार्यान्वयमा नेतृत्वदायी र प्राविधिक

सहयोग भूमिका सूचना तथा सञ्चार मन्त्रालयको रहनेछ ।

१३.१.२ आफ्नो क्षेत्रमा परेका नीति एवं रणनीतिहरूको प्रभावकारी कार्यान्वयन गर्ने जिम्मेवारी विषयगत मन्त्रालयहरूको हुनेछ ।

१३.२ निर्देशक समितिको गठन

यो नीति कार्यान्वयनको लागि सूचना तथा सञ्चार मन्त्रालयमा देहायबमोजिम पदाधिकारीहरू भएको एक निर्देशक समिति गठन गरिनेछ :

| | | |
|---|---|---|
| १. | मा. मन्त्री सूचना तथा सञ्चार मन्त्रालय | - अध्यक्ष |
| २. | सदस्य, राष्ट्रिय योजना आयोग (सम्बन्धित क्षेत्र हेर्ने) | - सदस्य |
| ३. | सचिव, प्रधानमन्त्री तथा मन्त्रिपरिषद्को कार्यालय (आर्थिक तथा पूर्वाधार हेर्ने | - सदस्य |
| ४. | सचिव, अर्थ मन्त्रालय | - सदस्य |
| ५. | सचिव, कानुन न्याय संविधानसभा तथा संसदीय मामिला मन्त्रालय | - सदस्य |
| ६. | सचिव, गृह मन्त्रालय | - सदस्य |
| ७. | सचिव, विज्ञान प्रविधि तथा वातावरण मन्त्रालय | - सदस्य |
| ८. | सचिव, शिक्षा मन्त्रालय | - सदस्य |
| ९. | सचिव, स्वास्थ्य तथा जनसङ्ख्या मन्त्रालय | - सदस्य |
| १०. | सचिव, सूचना तथा सञ्चार मन्त्रालय | - सदस्य |
| ११. | सचिव, सङ्घीयमामिला तथा स्थानीय विकास मन्त्रालय | - सदस्य |
| १२. | अध्यक्ष, नेपाल दूरसञ्चार प्राधिकरण | - सदस्य |
| १३. | सूचना तथा सञ्चार प्रविधिसम्बन्धी कम्तीमा एक जना महिला सहित विषयगत विशेषज्ञ (२ जना) | - सदस्य |
| १४. | सहसचिव, सूचना तथा सञ्चार मन्त्रालय | - सदस्य-सचिव |

यस नीतिको प्रभावकारी कार्यान्वयन गर्न निर्देशक समितिको नेतृत्वदायी भूमिका रहनेछ । निर्देशक समितिले सरकारी तथा निजी क्षेत्रका विषयगत विशेषज्ञ, सम्बन्धित सरोकारवालाहरू रहेको नीति कार्यान्वयन उपसमिति गठन गर्न सक्नेछ ।

१३.२ यस नीतिमा उल्लेखित नीति तथा रणनीतिहरू कार्यान्वयन योजना बनाई लागू गरिनेछ ।

## १४. श्रोत व्यवस्थापन

यो नीति कार्यान्वयन गर्न सार्वजनिक तथा निजी क्षेत्रको श्रोत परिचालन गरिनेछ। ग्रामीण दूरसञ्चार विकास कोष तथा विभिन्न अन्तर्राष्ट्रिय साझेदार सङ्घ संस्थाहरूबाट प्राप्त हुने आर्थिक तथा प्राविधिक सहयोग यस नीति कार्यान्वयनका श्रोतको रूपमा उपयोग गरिनेछ ।

## १५. कानुनी तथा नियामक व्यवस्था

यस नीतिको प्रभावकारी कार्यान्वयन सुनिश्चित गर्न आवश्यक कानुनी तथा नियामक व्यवस्था मिलाइनेछ ।

## १६. अनुगमन तथा मूल्याङ्कन

यस नीतिलाई समय तालिकासहितको कार्य योजना बनाई कार्यान्वयन गरिनेछ । नीति कार्यान्वयनको अनुगमन गर्न अनुगमन तथा मूल्याङ्कन प्रारूप (Monitoring & Evaluation Framework) तयार गरिनेछ । साथै यो नीति कार्यान्वयन अनुगमन तथा मूल्याङ्कन गर्ने दायित्व निर्देशक समितिको हुनेछ ।

## १७. पूर्वानुमान तथा जोखिम

प्रस्तुत नीति तर्जुमा गर्दा देहायबमोजिम पूर्वानुमान तथा जोखिममा आधारित रही गरिएको छ ।

### पूर्वानुमान Assumptions

देश विकासका वृहत्तर लक्षहरू हासिल गर्न सूचना तथा सञ्चार प्रविधिको विकासमा आउँदा दिनहरूमा उल्लेख्य श्रोत साधनको व्यवस्थाका साथै उच्च

स्तरको राजनैतिक प्रतिबद्धता रहनेछ ।

यस नीतिको प्रभावकारी कार्यान्वयन गरिँदा विशेषत सार्वजनिक सेवा प्रवाहमा सूचना तथा सञ्चार प्रविधिको माग उल्लेख्य रूपमा बढ्न गई उक्त क्षेत्रमा निजी क्षेत्रसमेतको लगानी प्रचुर मात्रमा बढ्नेछ ।

सूचना तथा सञ्चार प्रविधि क्षेत्रमा लगानी आकर्षित गर्न शिघ्रातिशीघ्र आवश्यक कानुनी तथा नियामक सुधार गरी इजाजत पत्र तथा फ्रिक्वेन्सी इस्पेक्ट्रम उपलब्धतामा देखिएका चुनौतीहरूको उचित तथा प्रभावकारी सम्बोधन हुनेछ ।

**जोखिम (Risk)**

आवश्यक कानुनी तथा नियामक व्यवस्थामा अपेक्षित सुधार अभाव हुन गई सूचना तथा सञ्चार प्रविधि क्षेत्रमा लगानी वातावरण कमजोर हुनसक्ने छ ।

विद्यमान ऊर्जा सङ्कटको निरन्तरताले गर्दा सूचना तथा सञ्चार प्रविधिको समग्र मागमा कमी हुन गई निजी क्षेत्रको लगानी सम्भावनामा नकारात्मक असर पर्न सक्नेछ ।

सूचना तथा सञ्चार प्रविधि विकास र विस्तारसम्बन्धी प्रयासमा अपेक्षित अनुगमन तथा निगरानी कमजोर हुन गई व्यापारिक लाभभन्दा बाहिर रहेका क्षेत्रहरू सूचना तथा सञ्चार प्रविधिको पहुँचबाट वञ्चित रहिरहने अवस्था सिर्जना हुन सक्नेछ ।

**१८. खारेजी**

सूचना प्रविधि नीति, २०६७ खारेज गरिएको छ। सूचना प्रविधि नीति, २०६७ बमोजिम भए गरेका कामहरू यसै नीतिबमोजिम भए गरेको मानिनेछ ।

नेपालको आर्थिक, सामाजिक, राजनीतिक, भौतिक तथा बौद्धिक जीवनमा आबद्ध गरी संरक्षण र विकास गर्ने,

२.८.१७.१.२ नेपालको राष्ट्रिय बौद्धिक क्षमताको संरक्षण तथा विकास गर्ने,

२.८.१७.१.३ नेपाली प्राचीन कला, संस्कृति सम्पदा र स्मारकहरूको संरक्षण र पुनर्स्थापना गर्ने,

२.८.१७.१.४ नेपाली परम्परागत अनुभव तथा सीपको संवर्द्धन र प्रवर्द्धन गर्ने,

२.८.१७.१.५ नेपालीहरूको प्रकृतिसँग मिलेर बस्न र बाँच्न सक्ने अन्तर्निहित क्षमता, राष्ट्र र जनताप्रतिको आस्था तथा दायित्व बोध तथा सामाजिक, धार्मिक सद्भाव जस्ता कुराको संरक्षण र संवर्द्धन गर्ने ।

२.८.१८ रणनीतिक लक्ष्य

नेपाली जनताको जीवन र स्वास्थ्यको रक्षा, गर्दै भावी पुस्ताको परिपोषण, संरक्षण र दिगो विकास सुनिश्चित गर्ने ।

२.८.१८.१ कार्यनीतिहरू

२.८.१८.१.१ अव्यवस्थित, असुरक्षित तथा विकासको प्रतिफलबाट विमुख भएका र छरिएर रहेका मानव बस्तीहरूलाई पहिचान, एकत्रित एवं आवश्यकताअनुसार स्थानान्तरण गरी सुरक्षित, व्यवस्थित, वातावरण मैत्री एवं आधुनिक बस्तीको रूपमा विकास गर्ने ।

२.८.१८.१.२ स्वास्थ्य रक्षाका लागि रोग निरोधक उपाय अवलम्बन गर्ने विषयलाई नीति तथा कार्यक्रमको आधार बनाउने,

२.८.१८.१.३ लागू पदार्थ सेवन तथा एड्स जस्ता रोगहरूबारे जनचेतना जगाउने, यसका कारकहरूको निवारण गर्नुका साथै प्रतिरोधात्मक र प्रतिकारात्मक नीति अवलम्बन गर्ने,

२.८.१८.१.४ रेडियो धर्मिता, रासायनिक प्रदूषण तथा जैविक सङ्क्रमका साथै तिनबाट उत्पन्न हुने रोग तथा महामारीबाट बच्नका लागि निगरानी संयन्त्र स्थापना गरी कार्यक्रम कार्यान्वयन गर्ने,

२.८.१८.१.५ स्वास्थ्य सेवालाई नेपाली जनताको आधारभूत आवश्यकता र राज्यको दायित्वका रूपमा रहने गरी संरचना, स्तर र क्षमताको विकास गर्ने,

२.८.१८.१.६ समय सापेक्ष जनसङ्ख्या नीति अवलम्बन गरी जन्मदर तथा मृत्युदर घटाउने,

२.८.१८.१.७ मानवीय सुरक्षामा प्रतिकूल असर पार्ने रासायनिक, जैविक, आणविक विकरणीय पदार्थ तथा विषादीको उत्पादन, भण्डारण, प्रयोग तथा ओसारपसारबाट सिर्जना हुने खतराबाट जनतालाई सुसूचित र सुरक्षित रहने उपाय अवलम्बन गर्ने। त्यस्ता पदार्थको नियमन र नियन्त्रण गर्ने, र

२.८.१८.१.८ खाद्यान्न, इन्धन, औषधीलगायतका अत्यावश्यक सामग्रीहरूको न्यूनतम भण्डारमा क्षमता निर्धारण गरी अभावको अवस्थामा आपूर्ति गर्न सकिने व्यवस्थित तथा सुरक्षित वितरण प्रणाली कायम गर्ने।

२.८.१९ रणनीतिक लक्ष्य

गैरकानुनी सशस्त्र गतिविधि हुनसक्ने वातावरण सिर्जना हुन नदिने।

२.८.१९.१ कार्यनीतिहरू

२.८.१९.१.१ कुनै पनि प्रकारका गैरकानुनी सशस्त्र गतिविधिका कारण र कारकहरूको पहिचान गरी तिनलाई निराकरण गर्न आवश्यक रणनीति तर्जुमा र कार्यान्वयन गर्ने,

२.८.१९.१.२ गैरकानुनी सशस्त्र गतिविधि हुन नपाउने

गरी आर्थिक, सामाजिक, सांस्कृतिक र सामुदायिक कार्यक्रहरू सञ्चालन गर्ने,

२.८.१९.१.३ गैरकानुनी सशस्त्र गतिविधिसँग सम्बन्धित पक्षबारे सूचना सङ्कलन तथा विश्लेषण गरी एकीकृत र समन्वयात्मक रूपमा सुरक्षा संयन्त्र परिचालन गर्ने र सशस्त्र गतिविधिलाई निस्तेज गर्ने,

२.८.१९.१.४ गैरकानुनी सशस्त्र गतिविधिलाई निस्तेज, निष्कृय र प्रभावहीन बनाउन जनतालाई राजनीतिक एवं सामाजिक रूपमा समेत प्रशिक्षित र क्रियाशील बनाउने,

२.८.१९.१.५ सशस्त्र गतिविधिलाई निस्तेज पार्न आवश्यक पर्ने कानुनको तर्जुमा र विद्यमान कानुनमा परिमार्जन गरी कार्यान्वयन गर्ने,

२.८.१९.१.६ सशस्त्र गतिविधि निस्तेज पार्न आवश्यक पर्ने विशिष्टीकृत सुरक्षा संयन्त्रको व्यवस्था गर्ने ।

## भाग–३

## राष्ट्रिय सुरक्षाको मार्ग निर्देशन र प्रमुख संस्थागत व्यवस्था

### ३.१ राष्ट्रिय सुरक्षा नीतिः निर्देशक नीति

३.१.१ राष्ट्रिय सुरक्षा नीति निर्देशक नीतिका रूपमा रहनेछ । क्षेत्रगत नीतिहरूको तर्जुमा गर्दा यस नीतिलाई ध्यानमा राख्नुपर्नेछ ।

३.१.२ राज्य सञ्चालनका सन्दर्भमा निर्माण हुने विभिन्न क्षेत्रगत नीतिहरूको राष्ट्रिय सुरक्षा नीतिसँग आबद्धता रहनेछ र सबै नीतिहरूबीच परिपूरक सम्बन्ध रहनेछ ।

३.१.३ सुरक्षा व्यवस्थापन सम्बन्धमा सङ्घ, प्रदेश र स्थानीय तहका नीति, कार्यक्रम र निर्णयहरू, राष्ट्रिय सुरक्षा नीतिको प्राथमिकता, उद्देश्य, रणनीति र कार्यनीतिबाट निर्देशित हुनेछन् ।

३.१.४ राष्ट्रिय रक्षा नीति तथा आन्तकि सुरक्षा नीतिहरूको तर्जुमा

तथा सुरक्षा निकायबीचको अन्तरसम्बन्ध, परिचालन विधिसमेत राष्ट्रिय सुरक्षा नीतिअनुरूप परिभाषित गरी कार्यान्वयन गरिनेछ ।

३.१.५ नेपालको संविधानमा उल्लेखित राज्यका नीतिहरूसँग राष्ट्रिय सुरक्षा नीतिको अन्तरसम्बन्ध र आबद्धता कायम गरिनेछ ।

## ३.२ राज्य शक्तिका संयन्त्र, सुरक्षा–समन्वय तथा संस्थागत व्यवस्था

३.२.१ नेपाली जनता नै राज्य शक्तिका मूल स्रोत र राष्ट्रिय सुरक्षाका प्रमुख आधार हुन् । आम रूपमा कार्यपालिका, व्यवस्थापिका, न्यायपालिका तथा अन्य संवैधानिक अङ्गहरूको समग्र राष्ट्रिय सुरक्षामा आ-आफ्नो योगदान रहन्छ । राजनीतिक, आर्थिक, कूटनीतिक, कानुनको कार्यान्वयन, सैनिक, नागरिक सुरक्षा र गुप्तचरी तथा सांस्कृतिक र सामाजिक क्षेत्रको पनि राष्ट्रिय सुरक्षाको सन्दर्भमा आ-आफ्नो योगदान हुन्छ ।

३.२.२ विशेष रूपमा राष्ट्रिय सुरक्षा नीतिको कार्यान्वयन तथा सुरक्षा संयन्त्रलाई परिचालन र निर्देशनका लागि देहायबमोजिमका संस्थागत व्यवस्थाको भूमिका रहनेछ :

३.२.२.१ नेपाल सरकार मन्त्रिपरिक्षाद्,

३.२.२.२ राष्ट्रिय सुरक्षा परिक्षाद्

३.२.२.३ मन्त्रालय र अन्तर्गतका निकायहरू, र

३.२.२.४ सुरक्षा निकायहरू ।

३.२.३ राष्ट्रिय सुरक्षा नीतिको कार्यान्वयन, सूचना प्रवाह, निर्देशन तथा अनुगमनका सम्बन्धमा समन्वय र एकीकृत रूपमा संयोजन गर्न देहायबमोजिमका संस्था र निकायहरू क्रियाशील रहनेछन् :

३.२.३.१ राष्ट्रिय सुरक्षा परिषद,

३.२.२.२ केन्द्रीय/सङ्घीय सुरक्षा समिति, र

३.२.२.३ प्रादेशिक तथा स्थानीय, क्षेत्रीय तथा जिल्लास्तरका सुरक्षा समितिहरू ।

## ३.३ नेपाली सेनाको प्रमुख सुरक्षा जिम्मेवारी

नेपाली सेनाले निम्न बमोजिम जिम्मेवारी बहन गर्ने छ :

३.३.१ नेपाली सेनाको प्रमुख कार्य नेपालको स्वतन्त्रता, सार्वभौमिकता र भौगोलिक अखण्डतालाई बाह्य घुसपैठ र आक्रमणबाट सुरक्षा गर्ने, सीमा सुरक्षाका लागि तत्पर रहने हुनेछ। राष्ट्रिय सुरक्षामा गम्भीर चुनौती उत्पन्न भएको अवस्थामा त्यसको सामना गर्न नेपाली सेनाको प्रमुख सुरक्षा भूमिका हुनेछ।

३.३.२ युद्धबाहेक क्रियाशील हुनुपर्ने परिस्थितिमा -

- ३.३.२.१ स्थानीय प्रशासनको नियन्त्रणभन्दा बाहिरको परिस्थिति उत्पन्न भएमा आन्तरिक सुरक्षा कायम गर्न सहयोग गर्ने,
- ३.३.२.२ प्रशासनिक नियन्त्रणबाहिर हिंसात्मक, विध्वंसात्मक तथा आतङ्ककारी कार्यहरू भएमा निस्तेज गर्ने,
- ३.३.२.३ गैरकानुनी सशस्त्र गतिविधि निस्तेज गर्ने,
- ३.३.२.४ आवश्यकताअनुसार महत्त्वपूर्ण र संवेदनशील स्थानहरूको सुरक्षा गर्ने,
- ३.३.२.५ प्राकृतिक तथा मानव सृजित तथा प्रविधिजन्य विपद्मा उद्धार कार्य गर्ने,
- ३.३.२.६ विकास निर्माणका कार्यहरूमा सहयोग पुऱ्याउने,
- ३.३.२.७ जनता, सरकार र सेनाबीचको सम्बन्धलाई सुमधुर तथा सुदृढ बनाउने र सुरक्षा चेतना अभिवृद्धिमा योगदान गर्ने,
- ३.३.२.८ राष्ट्रिय सम्पदाको संरक्षणमा आवश्यक सहयोग गर्ने,
- ३.३.२.९ सैनिक प्रविधि र अनुसन्धानको विकास गर्दै गोलीगट्ठा, विस्फोटक पदार्थलगायतका सुरक्षा निकायहरूले प्रयोगमा ल्याउने सामग्रीहरूको उत्पादनमा आत्मनिर्भरता बढाउने तथा नेपाली सेनाको लागि आवश्यक हातहतियारलगायतका सामग्रीको नियमित समीक्षा गर्दै आवश्यक सामग्री प्राप्त गर्ने।

३.३.२.१० संवेदनशील तथा अन्तर्राष्ट्रिय सीमा क्षेत्रनजिक निर्माण हुने आयोजना एवं विदेशी सहयोगमा निर्माण हुने सामरिक संरचनाको नियमित सुपरिवेक्षण गर्ने,

३.३.२.११ मित्रराष्ट्रको सेनाहरूसँग सैनिक सम्बन्ध विकसित गर्न सहयोग पुऱ्याउने,

३.३.२.१२ संयुक्त राष्ट्र सङ्घअन्तर्गत विश्व शान्ति स्थापनार्थ योगदान पुऱ्याउने नेपाल सरकारको परराष्ट्र नीतिलाई सघाउने,

३.३.२.१३ नेपालसँग दौत्यसम्बन्ध कायम भएका देशका राजदूतावासमा सैनिक सहचारीहरूले सबै सुरक्षा निकायहरूसँग गर्ने सैनिक महत्त्वका गतिविधि एवं अन्तरक्रियाहरूको समन्वय रक्षा मन्त्रालय मार्फत गर्ने, र

३.३.२.१४ नेपालको संविधान तथा कानुनबमोजिम नेपाल सरकारले तोकेका अन्य कार्यहरू गर्ने ।

**३.४ कानून व्यवस्था कायम गर्नुपर्ने सुरक्षा निकायहरूको प्रमुख जिम्मेवारी**

३.४.१ नेपाल प्रहरी

नेपाल प्रहरीले देहायको जिम्मेवारी वहन गर्नेछ :

३.४.१.१ देशमा कानुन व्यवस्था र आन्तरिक शान्ति सुव्यवस्था कायम गर्दै जनतालाई सुरक्षाको प्रत्याभूति दिई जनसहयोग र समर्थन प्राप्त गर्ने,

३.४.१.२ देशको कुनै पनि स्थानमा हुन सक्ने उपद्रव वा विध्वंस निरोधक कार्य गर्ने,

३.४.१.३ शान्ति सुव्यवस्थासम्बन्धी सूचना सङ्कलन, विश्लेषण र प्रवाह गर्ने,

३.४.१.४ अति विशिष्ट एवं विशिष्ट व्यक्तिहरूको सुरक्षा व्यवस्था मिलाउने,

३.४.१.५ आन्तरिक शान्ति, सुरक्षा कायम गरी जनतालाई सुरक्षाको प्रत्याभूति दिन विश्वासिलो तथा सक्षम सङ्गठनको रूपमा विकासका लागि दीर्घकालीन

योजना बनाई चरणबद्ध रूपमा कार्यान्वयन गर्दै जाने,

३.४.१.६ मुलुकभित्र सामाजिक, राजनीतिक, आर्थिक र विकाससम्बन्धी लक्ष्य हासिल गर्न सकिने गरी शान्ति सुव्यवस्था कायम राख्ने,

३.४.१.७ सबै प्रकारका अपराधिक क्रियाकलापको नियन्त्रण, रोकथाम, अनुसन्धान र तहकिकात गर्ने,

३.४.१.८ प्राकृतिक प्रकोप तथा मानव सिर्जित विपद्बाट हुनसक्ने जनधनको क्षतिलाई न्यून गर्न रोकथाम, उद्धार तथा राहतको कार्य गर्ने,

३.४.१.९ सवारी साधनहरू सुचारु रूपले सञ्चालन गर्न अनुगमन, नियन्त्रण तथा व्यवस्थापन गर्ने गरी जनतालाई दुर्घटना र खतराबाट बचाउने,

३.४.१.१० प्रदेश प्रहरी सङ्गठनको सामान्य सञ्चालन, समन्वय र सुपरिवेक्षणसम्बन्धी आवश्यक कार्य गर्ने,

३.४.१.११ विदेशमा रहेका नेपालीहरूको अभिलेख राखी प्रतिकूल अवस्था सिर्जना हुँदाको बखत थप कृयाशील रही अवाञ्छित गतिविधिलाई निस्तेज पार्ने,

३.४.१.१२ सीमा क्षेत्रमा हुने अपराधिक गतिविधि नियन्त्रण गर्ने र त्यसको प्रयोजनको लागि छिमेकी देशका प्रहरी सङ्गठनसँग समन्वय गर्ने,

३.४.१.१३ अन्तर्राष्ट्रिय प्रहरी सङ्गठन (ईन्टरपोल) लगायत अन्य सरकारी तथा गैरसरकारी सुरक्षा संस्थासँग सम्बन्ध विस्तार गरी अन्तर्राष्ट्रिय अपराधिक तथा आतङ्ककारी गतिविधि नियन्त्रण गर्न क्रियाशील रहने, र

३.४.१.१४ नेपालको संविधान तथा प्रचलित ऐन कानुनबमोजिम नेपाल सरकारले तोकका अन्य कार्यहरू गर्ने ।

३.४.२ सशस्त्र प्रहरी बल, नेपाल

सशस्त्र प्रहरी बलले देहायको जिम्मेवारी वहन गर्नेछ :

३.४.२.१ नेपालको कुनै भागमा भएको वा हुनसक्ने गैरकानुनी सशस्त्र गतिविधि, विद्रोह वा नेपालको राष्ट्रिय एकता र भौगोलिक अखण्डताविरुद्धका क्रियाकलाप, आतङ्ककारी कार्य र दङ्गा नियन्त्रण गर्न आवश्यकअनुसार परिचालित हुने ।

३.४.२.२ अपहरण, लुटपाट सङ्गठित अपराध तथा अन्य कुनै किसिमको जघन्य तथा गम्भीर अपराध भएमा वा गम्भीर प्रकृतिको अशान्ति भएमा वा हुने आशङका भएमा त्यसलाई नियन्त्रण गर्न परिचालित हुने ।

३.४.२.३ नेपाल राज्यको कुनै भागमा शान्ति र सुव्यवस्था कायम गर्ने प्रयोजनको लागि नेपाली सेना परिचालन भएको अवस्थामा नेपाली सेना परिचालन भएको अवधिभर सम्बन्धित ठाउँमा नेपाली सेनाको निर्देशनमा कार्य गर्ने,

३.४.२.४ नेपाल सरकारले तोकेको नेपाल सरकारले सुरक्षा दिनुपर्ने ठहर्‍याएका व्यक्ति, सार्वजनिक महत्त्वका भवन, संरचना र अन्य स्थलको सुरक्षा गर्ने,

३.४.२.५ बाह्य आक्रमणको अवस्थामा नेपाली सेनाको मातहतमा रही काम गर्ने,

३.४.२.६ नेपालको सीमा सुरक्षा गर्ने,

३.४.२.७ नेपालको कुनै भागमा भएको वा हुनसक्ने विपद्, प्राकृतिक प्रकोप र महामारीबाट पीडितको उद्धार गर्ने ।

३.४.२.८ सशस्त्र प्रहरी बल, नेपालको सङ्गठनात्मक संरचना, हातहतियार एवं तालिमलाई क्रमशः अर्धसैनिक बलको रूपमा रूपान्तरण गर्दै जाने, र

३.४.२.९ नेपालको संविधान तथा प्रचलित कानुनबमोजिम नेपाल सरकारले तोकेको अन्य कार्य गर्ने ।

३.४.३ राष्ट्रिय अनुसन्धान विभाग

राष्ट्रिय अनुसन्धान विभागले देहायको जिम्मेवारी वहन गर्नेछ :

३.४.३.१ नेपालको स्वतन्त्रता, सार्वभौमिकता, भौगोलिक अखण्डता, स्वाधीनता, स्वाभिमान, एकता, हित र सामाजिक सद्भाव प्रतिकूलका गतिविधि वा कामहरूको बारेमा सूचना सङ्कलन, विश्लेषण र सम्प्रेषण गर्ने,

३.४.३.२ नेपालको संविधान, कानुन र राज्यका विरुद्धमा आन्तरिक र बाह्य रूपमा हुने क्रियाकलाप तथा त्यस्ता कार्यमा संलग्न सङ्घ संस्था, सङ्गठन र व्यक्तिको बारेमा सूचना सङ्कलन र विश्लेषण गरी आवश्यक निकायमा सम्प्रेषण गर्ने र प्रतिकार्य योजना एवं सुझाव दिँदै राष्ट्रिय सुरक्षा कार्यमा सघाउ पुग्ने सूचना नेपाल सरकारलाई उपलब्ध गराउने,

३.४.३.३ राष्ट्रिय हितविपरीत हुने राजनीतिक, आर्थिक, सामाजिक, धार्मिक, साम्प्रदायिक र कूटनीतिक गतिविधिबारे सूचना सङ्कलन र विश्लेषण गरी सम्बन्धित निकाय वा अधिकारीलाई जानकारी गराउने,

३.४.३.४ देशभित्र तथा बाहिर, स्वदेशी तथा विदेशी नागरिकहरूबाट नेपालविरुद्ध गरिने जासुसी एवं प्रतिजासुसी कार्यसम्बन्धी सूचना सङ्कलन, विश्लेषण गरी सम्बन्धित निकाय वा अधिकारीलाई जानकारी गराउने,

३.४.३.५ धार्मिक, साम्प्रदायिक, जातीय, क्षेत्रीय स्वरूपका हिंसाउन्मुख गतिविधि, विद्रोह र आर्थिक क्रियाकलापबारे सूचना सङ्कलन गर्ने,

३.४.३.६ भ्रष्टाचार, आर्थिक अनियमितता, राजश्व चुहावटलगायत अर्थतन्त्रलाई नकारात्मक असर पुऱ्याउने गतिविधिहरूबारे सूचना सङ्कलन र विश्लेषण गर्ने,

३.४.३.७ आतङ्कवादी तथा अन्तर्राष्ट्रिय अपराधिक सङ्गठन तथा आतङ्कवादको जालो र त्यसबाट मुलुकलाई पुग्न सक्ने खतराको सूचना सङ्कलन र विश्लेषण गर्ने,

३.४.३.८ राष्ट्रमा आइपर्ने कुनै पनि चुनौतीलाई सामना गर्न आवश्यक सूचना सङ्कलन तथा विश्लेषण गर्न सक्ने भरपर्दो तथा सक्षम सङ्गठनको रूपमा विकास गर्न दीर्घकालीन योजना बनाई चरणबद्ध रूपमा कार्यान्वयन गर्दै जाने, र

३.४.३.९ नेपालको प्रचलित संविधान तथा प्रचलित ऐन कानुन बमोजिम नेपाल सरकारले तोकेका अन्य कार्यहरू गर्ने ।

**३.५ राष्ट्रिय सुरक्षा नीति कार्यान्वयनको अनुगमन तथा मूल्याङ्कन**

राष्ट्रिय सुरक्षा नीतिको कार्यान्वयनमा उत्पन्न हुनसक्ने समस्याको पहिचान गर्नुका साथै कार्यान्वयनको मूल्याङ्कन र अनुगमन राष्ट्रिय सुरक्षा परिषदले गर्नेछ । प्रत्येक पाच वर्षमा राष्ट्रिय सुरक्षा नीतिको समीक्षा र पुनरावलोकन गरिनेछ ।

**३.६ राष्ट्रिय सुरक्षा नीतिको समीक्षा र परिमार्जनसम्बन्धी व्यवस्था**

३.६.१ राष्ट्रिय सुरक्षा नीतिको समीक्षा वार्षिक रूपमा राष्ट्रिय सुरक्षा परिषदबाट गरिनेछ ।

३.६.२ सुरक्षा नीतिमा समय सापेक्ष परिमार्जन गर्ने कार्य नेपाल सरकारले गर्नेछ ।

# राष्ट्रिय बौद्धिक सम्पत्ति नीति, २०७३

## १. पृष्ठभूमि

समाजको आर्थिक, सामाजिक तथा सांस्कृतिक विकासका लागि गरिएको अनवरत प्रयत्नलाई थप बल पुऱ्याउन बौद्धिक सम्पत्तिको अवधारणा आएको हो । श्रष्टा र सिर्जना अनि ज्ञान, सीप र दक्षताको माध्यमबाट आर्थिक, सामाजिक, सांस्कृतिक विकासमा पुगेको अतुलनीय योगदानको कदर गर्दै श्रष्टा र समाजबीच सन्तुलित प्रणाली विकास गर्न बौद्धिक सम्पत्ति अधिकारको महसुस भएको हो । विश्वको आर्थिक तथा सामाजिक विकासमा बौद्धिक सम्पत्तिको योगदान अतुलनीय रहिआएको पाइन्छ । विज्ञान प्रविधि, कला साहित्य, संस्कृति प्राकृतिक, जैविक विविधताजन्य श्रोतसँग सम्बद्ध विकासमा समेत बौद्धिक सम्पत्ति अधिकारको महत्त्वपूर्ण योगदान पुऱ्याएको छ ।

नेपालमा पनि ज्ञान, सीप र दक्षताको प्रवर्द्धन गर्दै उद्योग व्यवसायमैत्री वातावरण सिर्जना, विदेशी लगानी अभिवृद्धि, रोजगारीका अवसरहरूको सिर्जना र प्रविधि हस्तान्तणको माध्यमबाट आर्थिक, सामाजिक रूपान्तरण गर्नका लागि बौद्धिक सम्पत्तिको विकास, संरक्षण र कार्यान्वयन गर्न प्रभावकारी नीतिगत कानुनी संस्थागत र प्रक्रियागत व्यवस्था गर्नु अपरिहार्य हुँदै गएको छ । राष्ट्रिय हित र स्रष्टाहरूको अधिकारलाई संरक्षण गर्दै द्विपक्षीय, क्षेत्रीय, बहुपक्षीय र अन्तर्राष्ट्रिय सन्धि सम्झौताको पालनाको लागि बौद्धिक सम्पत्तिसम्बन्धी नीति तथा कानुनहरू अद्यावधिक गर्नुपर्ने हुँदा नेपालले बौद्धिक सम्पत्तिको अवधारणालाई संवैधानिक रूपमै अङ्गीकार गरेको छ । यसैअनुरूप बौद्धिक सम्पत्तिलाई राष्ट्रिय प्राथमिकतामा राखी मुलुकको समग्र विकास नीतिको अभिन्न अङ्गको रूपमा यो राष्ट्रिय बौद्धिक सम्पत्ति नीति तर्जुमा गरिएको छ ।

## २. विगतका प्रयास

बौद्धिक सम्पत्ति संरक्षणमा राज्यको प्रतिबद्धतास्वरूप नेपालमा वि.सं. १९९३ सालमा नै पेटेण्ट डिजाइन र ट्रेडमार्क कानुन प्रचलनमा आएको थियो । सो कानुनलाई पेटेण्ट, डिजाइन र ट्रेडमार्क ऐन, २०२२ ले प्रतिस्थापन गऱ्यो । यो ऐनले औद्योगिक सम्पत्तिको संरक्षणसम्बन्धी पेरिस महासन्धि (Paris Convention for the Protection of Industrial Property) १८८३ को प्रावधान अनुकूल औद्योगिक सम्पत्तिउपर एकाधिकार प्राप्त गर्ने प्रक्रिया एकाधिकारको अवधि र उल्लङ्घनको अवस्थामा प्राप्त हुने उपचारको समेत व्यवस्था गरेको छ । नेपालमा यससम्बन्धी कार्य उद्योग

मन्त्रालयअन्तर्गत उद्योग विभागबाट सम्पादन हुँदै आएको छ ।

प्रतिलिपि अधिकारको संरक्षणको लागि नेपालमा पहिलो पटक प्रतिलिपि अधिकार ऐन, २०२२ जारी भएको थियो । यसलाई प्रतिस्थापन गर्दै जारी भएको प्रतिलिपि अधिकार ऐन २०५९ बाट हाल प्रतिलिपि अधिकार संरक्षणको कार्य भैरहेको छ। प्रतिलिपि अधिकारको संरक्षण तथा प्रवर्द्धनसम्बन्धी कार्यहरू विभिन्न निकायबाट हुँदै आएकोमा सो प्रयोजनका लागि २०६१ सालमा नेपाल प्रतिलिपि अधिकार रजिष्ट्रारको कार्यालयको स्थापना भएको छ । बौद्धिक सम्पत्ति संरक्षणको क्षेत्रमा भएका अन्तर्राष्ट्रिय प्रयासमा सहभागी हुन नेपालले सन् १९९७ मा विश्व बौद्धिक सम्पत्ति सङ्गठन (World Intellectual Property Organization WIPO) को सदस्यता प्राप्त गऱ्यो ।

औद्योगिक सम्पत्ति संरक्षणसम्बन्धी पेरिस महासन्धि (Paris Convention for the Protection of Industrial Property 1883) को पनि नेपाल सन् २००१ मा पक्ष बनेको छ। यसैगरी सन् २००४ मा विश्व व्यापार सङ्गठन (World Trade Organization WTO) को सदस्यता प्राप्त गरेसँगै यसको अभिन्न अङ्गको रूपमा रहेको व्यापारसम्बद्ध बौद्धिक सम्पत्ति अधिकार सम्झौता (Agreement of Trade Related Aspects of Intellectual Property Rights - TRIPs) को समेत पक्ष राष्ट्र भएको छ । त्यसैगरी, बौद्धिक सम्पत्तिको महत्त्वपूर्ण विधाको रूपमा रहेको प्रतिलिपि अधिकार संरक्षणमा अन्तर्राष्ट्रिय सहभागिताका लागि साहित्यिक तथा कलात्मक श्रृजनाको संरक्षणसम्बन्धी वर्न महासन्धि (Berne Convention for the Protection of Literary and Artists Works) १८८६ को सन्. २००६ मा पक्ष बनेको छ। बौद्धिक सम्पत्तिसम्बन्धी अन्य क्षेत्रीय एवं अन्तर्राष्ट्रिय सन्धि सम्झौताको भने सदस्यता लिइसकेको छैन ।

नेपालले बौद्धिक सम्पत्ति संरक्षणलाई महत्त्वका साथ अघि बढाउन समयानुकूल प्रयास र आफू पक्ष भएको सन्धि सम्झौताको प्रावधानहरू पालना गर्दै अतिकम विकसित मुलुकहरूका लागि व्यवस्था गरेको लचकताको अत्यधिक उपयोग र विकसित मुलुकहरूबाट प्राप्त हुने प्राविधिक तथा आर्थिक सहयोगको परिचालन गर्न सकिने अवसरसमेत रहेको हुँदा नीतिगत र कानुनी व्यवस्थामा परिमार्जन गर्नुपर्ने भएको छ ।

## ३. वर्तमान अवस्था

नेपालको संविधानको धारा २५ मा सम्पत्तिको हकअन्तर्गत बौद्धिक सम्पत्तिलाई मौलिक हकको रूपमा व्यवस्था गरिएको छ । नेपालमा हाल पेटेण्ट डिजाइन र ट्रेडमार्क ऐन, २०२२ र प्रतिलिपि अधिकार ऐन, २०५९ तथा प्रतिलिपि अधिकार नियमावली, २०६१ द्वारा क्रमशः औद्योगिक सम्पत्ति

(पेटेण्ट डिजाइन र ट्रेडमार्क) र प्रतिलिपि अधिकार संरक्षणको व्यवस्था भैरहेको छ । औद्योगिक सम्पत्ति क्षेत्रमा ट्रेडमार्कको दर्ता उत्साहजनक छ भने पेटेण्ट र डिजाइनको दर्ता भने न्यून छ । नेपाल हालसम्म चिन्ह दर्ताका लागि वस्तु र सेवाहरूको अन्तर्राष्ट्रिय वर्गीकरणसम्बन्धी नीस सम्झौता (Nice Agreement Concerning the International Classification of Goods and Services for the purposes of the Registration of Marks, 1975) को पक्ष नभए तापनि यस सम्झौताले निर्धारण गरेबमोजिम वस्तु र सेवाहरूलाई वर्गीकरण गरी व्यापार र सेवा चिन्हको दर्ता हुँदै आएको छ । व्यापार र सेवा चिन्ह दर्ता तथा प्रशासनसम्बन्धी सम्पूर्ण कार्य स्वचालित पद्धति (Automated System) बाट हुने सकेको छैन । साथै औद्योगिक नीति, २०६७ र वाणिज्य नीति, २०७२ मा पनि बौद्धिक सम्पत्ति संरक्षणको व्यवस्था गर्ने विषय उल्लेख गरिएको छ ।

नेपालमा बीउ विजन ऐन २०४५ ले वनस्पतिको नयाँ प्रजातिको प्रजनकलाई सो नयाँ जातको बीउ बिजनको स्वामित्वको अधिकार प्रदान गर्ने मौलिक किसिमको Sui generis संरक्षण प्रणालीको अवलम्बन गरी राष्ट्रिय बिउ बीजन समितिको व्यवस्थासमेत गरेको छ ।

नेपालले जैविक विविधतासम्बन्धी महासन्धि (Convention on Biological Diversity CBD) १९९१ मा हस्ताक्षर गरी अनुमोदन गरेको छ । यसअनुरूप आनुवांशिक सम्पदामाथि पहुँच र लाभको बाँडफाँडसम्बन्धी व्यवस्था गर्नुपर्ने भएको छ ।

### ४. समस्या तथा चुनौती

नेपालमा बौद्धिक सम्पत्तिको संरक्षणमा देखिएका समस्याहरू उल्लेख गर्नुपर्दा बौद्धिक सम्पत्तिको संरक्षण तथा उल्लङ्घनको अवस्थामा सोको उपचार सम्बन्धी स्पष्ट नीतिको अभाव हुनु, भएका कानुनको प्रभावकारी कार्यान्वयन हुन नसक्नु अन्तरार्ष्ट्रिय रूपमा भएको विकासक्रमअनुसार बौद्धिक सम्पत्तिका विभिन्न विधाहरूलाई समायोजन गर्न नसकिनु आदि समस्याहरू रहेकाछन् भने बौद्धिक सम्पत्ति अधिकारको दुरुपयोग गर्ने प्रवृत्ति जनचेतनाको अभाव जस्ता चुनौतीहरूसमेत रहेका छन् ।

### ५. नयाँ नीतिको आवश्यकता

नेपालले बौद्धिक सम्पत्ति प्रवर्द्धन तथा संरक्षणबाट सम्वृद्धिको सम्भावना र अवसर सिर्जना गर्न बौद्धिक सम्पत्तिको पहिचान, प्राप्ति अधिकार अनधिकृत उपयोग उल्लङ्घनमा उपचारको व्यवस्था गर्नुका साथै राष्ट्रिय विकास प्राथमिकतासँग तालमेल हुने गरी विश्व व्यापार सङ्गठनको सदस्यता

हुँदा गरिएका प्रतिबद्धतालगायत अन्तराष्ट्रिय सन्धि सम्झौताबाट सिर्जित दायित्वसमेत पूरा हुने गरी आवश्यक कानुनी तथा संस्थागत संयन्त्रको विकास गर्नुपर्ने आवश्यकता रहेको छ ।

नेपालमा हालसम्म बौद्धिक सम्पत्ति अधिकारको संरक्षणसम्बन्धी अलग्गै नीति नभएको र बौद्धिक सम्पत्ति संरक्षणमा जिम्मेवार निकायहरू विभिन्न मन्त्रालयहरूअन्तर्गत रहँदा निकायगत प्राथमिकतामा भिन्नता रहेको, मानव स्रोत विकासका लागि योजनाबद्ध प्रयास हुन नसकेको, विषयगत विशेषज्ञता हासिल हुन नसकेको र समन्वितरूपमा कार्य हुन नसकेको अवस्था छ । फलस्वरूप बौद्धिक सम्पत्तिको संरक्षण विकास र प्रवर्द्धन कार्य प्रभावकारी रूपमा हुन नसकेको हुँदा आगामी दिनमा राष्ट्रिय विकासमा बौद्धिक सम्पत्तिको उपयोग गरी अधिकतम लाभ लिनुपर्ने देखिएको छ ।

राष्ट्रिय विकास प्राथमिकता र अन्तर्राष्ट्रिय सन्धि सम्झौताअनुरूप मुलुकमा सिर्जनशीलता प्रवर्द्धन सर्जकहरूको हक अधिकारको संरक्षण उद्योग व्यवसायमैत्री वातावरण निर्माण विदेशी लगानी र प्रविधि आकर्षण रोजगारीका अवसरहरू सिर्जनाका साथै नक्कली उत्पादन रोकी गुणस्तर र उपभोक्ताको हित संरक्षण गर्नका लागि पनि बौद्धिक सम्पत्ति संरक्षणको नीतिगत संस्थागत र कानुनी व्यवस्था गर्न यससम्बन्धी एकीकृत नीतिको आवश्यकता रहेको छ ।

## ६. दूरदृष्टि Vision परिदृश्य Mission तथा लक्ष्य Goal

दूरदृष्टि Vision

बौद्धिक सम्पत्ति अधिकारको संरक्षण र प्रवर्द्धनको माध्यमबाट नेपाललाई सृजनशील राष्ट्रका रूपमा स्थापित गर्ने ।

परिदृश्य Mission

बौद्धिक सम्पत्तिका विभिन्न विधाहरूको संरक्षण, संवर्द्धन र उपयोग गर्दै आर्थिक सम्वृद्धि हासिल गर्ने ।

लक्ष्य Goal

बौद्धिक सम्पत्तिको संरक्षण, प्रवर्द्धन एवं उपयोगद्वारा नेपाली समाजको आर्थिक सामाजिक तथा सांस्कृतिक समुन्नति हासिल गर्ने ।

## ७. **उद्देश्यहरू** Objectives

यस नीतिका प्रमुख उद्देश्यहरू देहायबमोजिम रहेका छन् :

१) बौद्धिक सम्पत्ति अधिकारको संरक्षण, प्रवर्द्धन तथा विकासलाई प्रोत्साहित गर्ने ।

२) बौद्धिक सम्पत्तिका सर्जक तथा सामाजिक हितका बीचमा सन्तुलित प्रणालीको विकास गर्ने ।

३) समाजको आर्थिक, सामाजिक तथा सांस्कृतिक समुन्नतिका लागि बौद्धिक सम्पत्तिको महत्वबारे जनस्तरमा चेतना अभिवृद्धि गर्ने ।

४) बौद्धिक सम्पत्तिका विधाहरूको व्यावसायिकरणका लागि प्रोत्साहित गर्ने ।

५) बौद्धिक सम्पत्तिको संरक्षण तथा अधिकार प्रचलन (Enforcement) लागि सशक्त कानुनी, संस्थागत तथा मानव श्रोतको विकास गर्ने ।

## ८. नीतिहरू

८.१ बौद्धिक सम्पत्ति अधिकारको संरक्षण, प्रवर्द्धन तथा विकासलाई प्रोत्साहित गर्ने उद्देश्य (१)सँग सम्बन्धित नीतिहरू

१) समाज र व्यवहारोपयोगी सिर्जना गर्ने स्रस्टालाई निजको सिर्जनामाथिको अधिकार तथा सुविधाहरूलाई बौद्धिक सम्पत्तिको रूपमा अङ्गीकार गरिनेछ ।

२) प्रतिलिपि अधिकार, पेटेण्ट डिजाइन, ट्रेडमार्क, भौगोलिक सङ्केत, इन्टि्रग्रेटेड सर्किटको लेआउट डिजाइन, विरुवाको नयाँ प्रजातिको संरक्षण, व्यापारिक गोप्यता (Trade Secrecy) परम्परागत ज्ञान, परम्परागत सांस्कृतिक अभिव्यक्ति, बौद्धिक सम्पत्तिजनित आनुवांशिक श्रोत तथा जैविक विविधताको पहिचान प्रोत्साहन गरिनेछ ।

३) बौद्धिक सम्पत्तिका हरेक विधा एवं पक्षको पहिचान गरी सो को संरक्षणको लागि राष्ट्रिय आवश्यकताअनुरूप कानुनको व्यवस्था गरिनेछ ।

४) विद्यमान परम्परागत ज्ञान, जैविक विविधता र भौगोलिक सङ्केतलाई अधिकतम उपयोग गर्दै बौद्धिक सम्पत्तिलाई राष्ट्रिय विकासको औजारको रूपमा समेत अवलम्बन गरिनेछ ।

५) बौद्धिक सम्पत्तिलाई वातावरणमैत्री, प्रविधि हस्तान्तरण, विदेशी लगानी आकर्षण, अनुसन्धान प्रवर्द्धन, प्राविधिक क्षमताको विकास र ज्ञान आर्जनको स्रोतको रूपमा उपयोग गरिनेछ ।

६) उत्पादित वस्तु तथा सेवाको प्रतिस्पर्धात्मक क्षमता, गुणस्तर तथा उत्पादकत्व बढाउन अधिकतम मात्रामा बौद्धिक

सम्पत्तिको उपयोग हुने खालका नयाँ प्रविधिको विकास तथा ग्रहणलाई प्राथमिकता दिइनेछ ।

८.२ बौद्धिक सम्पत्तिका सर्जक तथा सामाजिक हितका लागि सन्तुलित प्रणालीको विकास गर्ने उद्देश्य (२) सँग सम्बन्धित नीतिहरू बौद्धिक सम्पत्तिको संरक्षण तथा प्रवर्द्धन गर्न आवश्यक कानुन एवं संयन्त्रहरूको व्यवस्था गर्न देहायबमोजिमको नीति लिइनेछ :

क) प्रतिलिपि अधिकार नीति

१. कला, साहित्य, संस्कृति, परम्परागत ज्ञान, परम्परा, सांस्कृतिक अभिव्यक्ति विज्ञान तथा प्रविधिक विकासमा प्रोत्साहनन गरी व्यक्ति, समुदाय तथा संस्थाको प्रतिलिपि अधिकारको संरक्षण, रचनात्मकतालाई प्रोत्साहन र विकास गर्ने वातावरणको सिर्जना गर्दै देशको अर्थतन्त्रमा उल्लेखनीय योगदान दिन सक्ने गरी विकास गरिनेछ ।

२) प्रतिलिपि अधिकार तथा सम्बन्धित अधिकार संरक्षण र प्रंवर्द्धन गर्न विधि, पद्धति, संयन्त्र निर्माण एवं सरोकारवालाहरूवीचको आपसी समन्वय कायम गरी कुशल, रचनात्मक समाज विकास गरी प्रतिलिपि अधिकारवालाको सिर्जनात्मक कार्यलाई प्रोत्साहन गर्दै लगिनेछ ।

३) माथि बुँदा नं. (१) र (२) मा उल्लेखित कार्यहरूका लागि अन्तर्राष्ट्रिय सन्धि सम्झौताको पक्ष राष्ट्र बन्ने राष्ट्रिय कानुनलाई समयानुकूल परिमार्जन गर्दै लगिनेछ ।

४) सिर्जनामाथि स्वचालित संरक्षण (Automatic Protection) को व्यवस्था गरिनेछ ।

५) व्यावसायिक प्रस्तुति एवं सार्वजनिक प्रयोग र प्रसारण आदिबाट रचनाका सर्जक, प्रस्तोता, उत्पादक एवं अन्य सम्बद्धपक्षले समन्यायिक लाभ प्राप्त गर्ने प्रणालीको विकास गरिनेछ ।

६) नयाँ प्रविधिको विकाससँगै रचनाको सिर्जना, प्रस्तुति, उत्पादन, प्रसारण, वितरणलगायतका कार्यहरूमा ती प्रविधिको प्रयोग गरी प्रतिलिपि अधिकार धनीहरूलाई सहजतापूर्वक लाभ प्राप्त गर्ने गरी अन्तर्राष्ट्रिय सम्पर्क एवं उपयुक्त प्रणालीको विकास गरिनेछ ।

ख) पेटेण्ट नीति

७) नवीन आविष्कारमूलक, व्यवहार उपयोगी सिर्जनाका रूपमा रहने नवीन उपाय वा वस्तुमा निहित अमूल्य सम्पत्तिलाई पेटेण्टको रूपमा स्वीकार गरी सोको व्यावसायिक उपयोगका सम्बन्धमा सीमित अवधिको एकाधिकार प्रदान गर्ने कानुनी व्यवस्था गरिनेछ। उपयोगी नमुना (Utility Model) वा (Petty Patent) को दर्ता तथा संरक्षणको सम्बन्धमा आवश्यक व्यवस्था गरिनेछ । तर राष्ट्रिय सुरक्षा वा रोगव्याधिको महामारी वा यस्तै किसिमको राष्ट्रिय सङ्कटको सार्वजनिक हितका लागि राज्यले पेटेण्टको हक नियन्त्रणमा लिन सक्ने व्यवस्थासमेत गरिनेछ ।

८) आविष्कारको पेटेण्ट दर्ताका लागि देशका वैज्ञानिक तथा आविष्कारक, औद्योगिक प्रतिष्ठान, अनुसन्धानात्मक कार्यमा संलग्न निकाय वा संस्था, विश्वविद्यालय एवं निजी अनुसन्धान संस्थाहरूलाई प्रोत्साहित गरिनेछ ।

ग) औद्योगिक डिजाइन नीति

९) उत्पादन गरिएका उपकरण वा वस्तुको प्रारूप वा आकारमा निहित मौलिक एवं नवीन अमूर्त सम्पत्तिलाई औद्योगिक डिजाइन (Industrial Design) को रूपमा पहिचान गरी सोको व्यावसायिक उत्पादनको एकाधिकार संरक्षण गर्न विद्यमान कानुनमा समयानुकूल परिमार्जन गरिनेछ ।

घ) ट्रेडमार्क नीति

१०) व्यापार, व्यवसाय एवं सेवाको क्षेत्रमा प्रस्तुत गरिएका वस्तु वा सेवालाई पृथक जनाउन उपयोग गरिएको व्यापार चिन्हमा निहित अमूर्त सम्पत्तिलाई ट्रेडमार्क (Trade Mark) को रूपमा पहिचान गरी सोको अभ्यास एवं प्रयोगको एकाधिकार संरक्षण गर्न ट्रेडमार्कसम्बन्धी विद्यमान कानुनमा समयानुकूल परिमार्जन गरिनेछ ।

११) वस्तु वा सेवालाई पृथक जनाउन त्यस्तो वस्तु वा सेवामा उपयोग गरिएका शब्द, चित्र, रङ्ग, आकार, ध्वनी, चलचित्र, व्यावसायिक नारालगायत साङ्केतिक रूपमा अभिव्यक्त गर्न सकिने चिन्ह वा प्रस्तुतिलाई ट्रेडमार्कको रूपमा अङ्गीकार गरिनेछ ।

१२) वस्तु वा सेवालाई पृथक जनाउन प्रयोग गरिने व्यापार चिन्ह (Trade Mark), सेवा चिन्ह (Service Mark), समूह चिन्ह

(Collective Mark), ध्वनी चिन्ह (Sound Mark), रङ्गजनित चिन्ह (colour Mark), व्यापारिक सङ्केत वा स्वरूप (Trade Dress), प्रमाणीकरण चिन्ह (Certification Mark), ख्यातिप्राप्त चिन्ह (Well-known Mark) जस्ता चिन्हको संरक्षणको व्यवस्था गरिनेछ ।

१३) ट्रेडमार्कमा निहित ख्यातिको गैरकानुनी लाभ लिई उपभोक्तालाई झुक्यानमा पारी उपयोग गरेको अवस्थामा त्यस्तो ट्रेडमार्क दर्ता नभएको भए पनि ट्रेडमार्क संरक्षणसम्बन्धी अन्तर्राष्ट्रिय मान्यता तथा सिद्धान्तबमोजिम पासिङ्ग अफ (Passing Off) लगायतका बौद्धिक सम्पत्ति संरक्षणको प्रभावकारी प्रणालीको अवलम्बन गर्न आवश्यक कानुनको तर्जुमा गरिनेछ ।

१४) ट्रेडमार्क संरक्षणका लागि सो उपयोग गर्ने वस्तु वा सेवालाई आवश्यक तथा प्रभावकारी वर्गीकरणको लागि अन्तर्राष्ट्रिय मान्यतामा आधारित प्रणालीको अवलम्बन गरिनेछ ।

ङ) भौगोलिक सङ्केत नीति

१५) निश्चित भौगोलिक क्षेत्रमा उत्पादन हुने प्राकृतिक वा मानव सृजित वस्तुको उत्पत्तिको जनाकारीसहितको सङ्केत दिँदै त्यस्तो वस्तु सम्बद्ध भौगोलिक क्षेत्रको पहिचानसहित पृथकता जनाउनका लागि सेवा वस्तुमा उपयोग गरिएको नाम वा चिन्हमा निहित अमूर्त सम्पत्तिलाई बौद्धिक सम्पत्तिको रूपमा संरक्षण गर्न भौगोलिक संकृत (Geographical Indication) सम्बन्धी कानुनको व्यवस्था गरिनेछ ।

१६) भौगोलिक सङ्केतले प्रदान गर्ने बौद्धिक सम्पत्तिसम्बन्धी अधिकारलाई अहस्तान्तरणीय अधिकारको रूपमा व्यवस्था गरिनेछ ।

च) वनस्पतिका प्रजाति संरक्षणसम्बन्धी नीति

१७) वनस्पतिका नयाँ प्रजातिमा निहित मौलिक एवं नवीन अमूर्त सम्पत्तिलाई बौद्धिक सम्पत्तिको रूपमा संरक्षण गर्ने आवश्यक कानुनको व्यवस्था गरिनेछ ।

१८) Genetically Modified Organism बाहेकका वनस्पतिका नयाँ प्रजातिलाई बौद्धिक सम्पत्तिको रूपमा पहिचान गर्न आवश्यक प्रणालीको व्यवस्था गरिनेछ । वनस्पतिजन्य प्रजातिको चोरी (Bio-piracy) नियन्त्रण गर्न जैविक विविधता र परम्परागत ज्ञानको स्रोतहरूमा पहुँच, सदुपयोग तथा संरक्षण गर्न

आवश्यक कानुनी व्यवस्था गरिनेछ ।

छ) व्यापारिक गोप्यतासम्बन्धी नीति

१९) व्यापारिक गोप्य सूचनामा आधारित मौलिक अमूर्त सम्पत्तिलाई बौद्धिक सम्पत्तिको रूपमा संरक्षण गर्न आवश्यक कानुनी व्यवस्था गरिनेछ ।

२०) व्यापारिक गोप्य सूचनामाथि बौद्धिक सम्पत्ति अधिकार प्राप्त गर्ने स्वचालित संरक्षण (Automatic Protection) प्रणालीको विकास गरिनेछ ।

ज) एकीकृत संस्कृतिको लेआउट डिजाइनसम्बन्धी नीति

२१. एकीकृत सर्किटको लेआउट डिजाइनको अधिकारलाई संरक्षण गर्न आवश्यक कानुनी व्यवस्था गरिनेछ ।

झ) परम्परागत तथा मौलिक ज्ञानसम्बन्धी नीति

२२) नेपाली समाजमा उपयोगी ठहरिएका परम्परागत ज्ञान (Traditional Knowledge) तथा मौलिक ज्ञान (Indigenous Knowledge) को पहिचान, संरक्षण, विकास तथा उपयोगको लागि अभिलेखीकरण (Inventory) र परम्परागत ज्ञानको विद्युतीय पुस्तकालय (Traditional Knowledge Digital Library) विकास गरिनेछ ।

ञ) परम्परागत, सांस्कृतिक अभिव्यक्ति तथा अमूर्त सांस्कृतिक सम्पदाको बौद्धिक सम्पत्ति सम्बद्ध नीति

२३) परम्परागत सांस्कृतिक अभिव्यक्ति (Traditional Cultural Expression) लोकवार्ता (Folklore) समेतको अमूर्त सांस्कृतिक सम्पदालाई बौद्धिक सम्पत्तिको रूपमा संरक्षण गरी मौलिक पहिचानमा दखल नगर्ने गरी प्रयोग गर्ने अधिकार तथा व्यावसायिक प्रयोगमा समन्यायिक लाभ बाँडफाँडको दावीको अधिकारसहितको कार्यविधि तयार गरी आवश्यक व्यवस्था गरिनेछ ।

२४) परम्परागत सांस्कृतिक अभिव्यक्ति तथा अमूर्त सांस्कृतिक सम्पदाको संरक्षण तथा अभ्यासमा उचित सीमा एवं संरक्षणको अपवादको व्यवस्था गरी सन्तुलित परम्परागत सांस्कृतिक अभिव्यक्ति तथा अमूर्त सांस्कृतिक सम्पदा संरक्षण प्रणालीको विकास गरिनेछ ।

ट) जैविक विविधता तथा आनुवांशिक श्रोतको बौद्धिक सम्पत्ति

सम्बद्ध पक्षसम्बन्धी नीति

२५) निश्चित भौगोलिक क्षेत्रका जैविक विविधता तथा आनुवांशिक श्रोतमा आधारित भै व्यावसायिक अध्ययन, अनुसन्धान तथा प्रयोगबाट प्राप्त हुने बौद्धिक सम्पत्तिमाथि सम्बद्ध पक्षको अधिकार र व्यावसायिक प्रयोगबाट प्राप्त हुने लाभको समन्यायिक बाँडफाडको व्यवस्था गरिनेछ ।

२६) जैविक विविधता तथा आनुवांशिक श्रोतहरूको अध्ययन, अनुसन्धान तथा प्रयोग गर्नुपरेमा सम्बन्धित निकायको पूर्वस्वीकृति लिनुपर्ने व्यवस्था गरी त्यस्ता श्रोतको संरक्षण गरिनेछ ।

२७) नेपालमा स्थानीय पशुपन्छी र जैविक विविधताको संरक्षण गरी आनुवांशिक श्रोतको पहिचान तथा दिगो उपयोगबाट कृषकहरूलाई आर्थिक लाभका साथै जीविकोपार्जनमा सकारात्मक प्रभाव पार्न आवश्यक प्रणाली विकास गरिनेछ ।

२८) खोज तथा अनुसन्धानको नतिजाबाट प्राप्त नयाँ प्रजातिका किटाणु, जीवाणु, विषाणुलगायतका जीवको पेटेण्ट अभिलेखीकरण तथा संरक्षण सम्बन्धमा आवश्यक व्यवस्था गरिनेछ ।

ठ) बौद्धिक सम्पत्ति अधिकारको संरक्षण, प्रवर्द्धन एवं उपयोगसम्बन्धी अन्य नीतिहरू

२९) बौद्धिक सम्पत्तिको अधिकार प्राप्त गर्ने कार्यविधि एवं पूर्वसर्तहरू निर्धारण गर्दै सबै किसिमका बौद्धिक सम्पत्तिमाथि आर्थिक तथा नैतिक अधिकार प्राप्त गर्ने मान्यतालाई अङ्गीकार गरिनेछ ।

३०) बौद्धिक सम्पत्तिलाई सामाजिक हितको साधनका रूपमा अङ्गीकार गर्दै समन्यायिक व्यवहार तथा अनिवार्य अनुमतिसम्बन्धी व्यवस्था गरिनेछ ।

३१) बौद्धिक सम्पत्ति अधिकारको संरक्षण गर्दा आर्थिक तथा नैतिक अधिकारहरूको सुनिश्चितता गरी स्वामित्व, अभ्यास तथा उपयोगमा संरक्षणको प्रत्याभूति गरिनेछ ।

३२) बौद्धिक सम्पत्ति अधिकारको अनाधिकृत उल्लङ्घनउपर नियन्त्रण र उपचारको व्यवस्था गरिनेछ ।

३३) बौद्धिक सम्पत्तिको अधिकार उल्लङ्घनउपर देवानी तथा फौजदारी दायित्वको सिर्जना गर्दै सजाँय तथा क्षतिपूर्तिको व्यवस्था गरिनेछ ।

३४) बौद्धिक सम्पत्तिको धनी वा सोको हकवालाको हकहितको सरल एवं सुलभ प्रचलन (Enforcement) को लागि वैकल्पिक विवाद समाधानको व्यवस्था गरिनेछ ।

३५) प्रतिलिपि अधिकार, पेटेण्ट, औद्योगिक डिजाइन, वनस्पतिका नयाँ प्रजाति संरक्षण, परम्परागत ज्ञान, परम्परागत सांस्कृतिक अभिव्यक्ति तथा अमूर्त सांस्कृतिक सम्पदा, जैविक विविधता एवं आनुवांशिक श्रोतहरूको विकासका लागि सम्बन्धित बौद्धिक सम्पत्तिका धनीहरू वा अधिकारवालाहरूको सामूहिक सौदाबाजी गर्ने कार्यमा सहयोग पुऱ्याउन र अलग क्षमता भएका व्यक्तिहरूको सम्बन्धित बौद्धिक सम्पत्ति संरक्षणमा समान प्रत्याभूति गर्नका लागि सबल एवं सशक्त बौद्धिक सम्पत्ति समाजहरू (Intellectual property society, Collective Management Organizations-CMOs, Lawyers Society) स्थापनाका लागि प्रोत्साहित गरिनेछ ।

३६) बौद्धिक सम्पत्तिको संरक्षण तथा अभ्यासमा सीमा एवं संरक्षणका अपवादको सन्तुलित व्यवस्था स्थापित गर्न आवश्यक प्रणालीको विकास गरिनेछ ।

८.३ समाजको आर्थिक, सामाजिक तथा सांस्कृतिक समुन्नतिका लागि बौद्धिक सम्पत्तिको महत्त्वबारे जनस्तरसम्म चेतना अभिवृद्धि गर्ने उद्देश्य (३)सँग सम्बन्धित नीतिहरू

१) बौद्धिक सम्पत्तितर्फ जिज्ञासु र प्रतिभाशाली व्यक्तिहरू सबैलाई आकर्षित गर्न सीप र क्षमता अभिवृद्धिको क्रियाकलापहरू सञ्चालन गरिनेछन् ।

२) बौद्धिक सम्पत्ति विषयलाई माध्यमिक तह तथा विश्वविद्यालय तहका पाठ्यक्रममा समावेश गर्न र व्यावसायिकताको विकासका लागि प्रयत्न गरिनेछ ।

३) विश्वविद्यालय शैक्षिक तथा अनुसन्धानात्मक निकायहरूमा आ-आफ्नै बौद्धिक सम्पत्तिसम्बन्धी नीति विकास गरी लागू गर्न प्रोत्साहन गरिनेछ ।

४) अनुसन्धानकर्ता, स्रस्टा, प्रयोगकर्ता, उपभोक्तासहित सर्वसाधारण जनताबीच बौद्धिक सम्पत्तिका विविध पक्षमा आमसञ्चारका विभिन्न माध्यम (छापा, इलेक्ट्रोनिक, रेडियो टेलिभिजनसहित) मार्फत चेतना अभिवृद्धि गरिनेछ ।

५) बौद्धिक सम्पत्ति सम्बद्ध सरोकारवालाहरूको लागि विभिन्न किसिमका गोष्ठी, अन्तर्क्रिया, तालिम कार्यक्रहरू नियमित रूपमा सञ्चालन गरिनेछ ।

६) सिर्जनात्मक उद्योगहरूको आवधिक रूपमा राष्ट्रिय लेखामा गणना गरिनेछ ।

८.४ बौद्धिक सम्पत्तिका, हरेक विधाहरूको व्यावसायिकरणका लागि प्रोत्साहित गर्ने उद्देश्य (४) सँग सम्बन्धित नीतिहरू

१) बौद्धिक सम्पत्तिको पहिचान र प्राथमिकता निर्धारण गरी त्यस्ता बौद्धिक सम्पत्ति सिर्जना र प्रवर्द्धनको लागि आवश्यक पूर्वाधार विकास गरिनेछ ।

२) अनुसन्धानात्मक तथा सिर्जनात्मक क्रियाकलाप सञ्चालनका लागि साधन स्रोतहरूमा पहुँच वृद्धि गरी कार्यक्रमहरू सञ्चालन गरिनेछ ।

३) बौद्धिक सम्पत्तिको अभिलेखीकरण र व्यवस्थापनलाई आधुनिकीकरण गरिनेछ ।

४) बौद्धिक सम्पत्तिको उपयोगसम्बन्धमा उत्पादन क्षेत्र, अनुसन्धान गर्ने निकाय र विश्वविद्यालयलगायतका क्षेत्रको अन्तरसम्बन्धलाई गहन र सुदृढ पारिनेछ ।

५) सुरक्षण, विनियम र क्षतिपूर्तिसमेतमा सहयोग गर्न बौद्धिक सम्पत्तिको मूल्याङ्कन एवं उपयोग गर्ने कार्यको थालनी गरिनेछ ।

६) बौद्धिक सम्पत्तिको उपयोगमा स्रष्टा र उपयोकर्ताको अधिकार र कर्तव्यका बीचमा सन्तुलन कायम गर्न साधारण उपभोक्ताको हितअनुरूप हुने गरी परिचालन गर्न उपभोक्ता, उत्पादक र व्यापारिक जगतबीच अन्तरसम्बन्ध र पारस्परिक सहयोगलाई थप सुदृढ गरिनेछ ।

८.५ बौद्धिक सम्पत्तिको संरक्षण तथा अधिकार प्रचलन (Enforcement) का लागि सशक्त कानुनी संस्थागत तथा मानव श्रोतको विकास गर्ने उद्देश्य (५) सँग सम्बन्धित नीतिहरू

१) नेपालको संविधानको धारा २५ मा सम्पत्तिको हकअन्तर्गत बौद्धिक सम्पत्तिलाई मौलिक हकको रूपमा व्यवस्था गरेको हुँदा

सो बमोजिम कानुनी व्यवस्था गरी संरक्षण प्रदान गरिनेछ ।

२) बौद्धिक सम्पत्तिको प्रभावकारी संरक्षणका लागि क्षतिपूर्ति, प्रभावकारी देवानी एवं फौजदारी उपचारको व्यवस्था गरिनेछ ।

३) बौद्धिक सम्पत्ति संरक्षणका क्षेत्रमा अन्तर्राष्ट्रियरूपमा आपसी सहयोग आदान प्रदान गर्न बहुपक्षीय तथा द्विपक्षीय बौद्धिक सम्पत्ति संरक्षण सम्झौता गरिनेछ ।

४) बौद्धिक सम्पत्तिको प्रभावकारी संरक्षणको प्रत्याभूतिका लागि अन्तर्राष्ट्रिय सम्झौता, सन्धि तथा महासन्धिको पक्षराष्ट्र भै तदअनुरूप नीतिगत एवं कानुनी व्यवस्था गरिनेछ ।

५) नेपाल पक्ष भएका बौद्धिक सम्पत्तिसम्बन्धी अन्तर्राष्ट्रिय सन्धि सम्झौताबाट सिर्जना भएका दायित्वहरू परिपालना गर्न प्राथमिकता दिइनेछ ।

६) बौद्धिक सम्पत्ति अधिकारका सबै विधाहरूलाई संरक्षण, प्रवर्द्धन, नियमन तथा व्यवस्थापनका लागि एकीकृत कार्यालय स्थापना गरिनेछ ।

७) बौद्धिक सम्पत्ति संरक्षणसम्बन्धी न्याय निरूपण कार्यलाई छिटो, छरितो र प्रभावकारी बनाइनेछ ।

८) बौद्धिक सम्पत्तिको अधिकार व्यवस्थापनका लागि बौद्धिक सम्पत्ति प्रशासनलाई समयसापेक्ष, सुलभ र सबल एवं प्रभावकारी बनाइनेछ ।

९) बौद्धिक सम्पत्तिसम्बन्धी विधाको विकासमा सहयोग पुऱ्याउन जनशक्तिको विकासमा जोड दिइनेछ । बौद्धिक सम्पत्ति विधामा विशेषज्ञता हासिल गरेका र तालिम प्राप्त जनशक्तिलाई यस क्षेत्रमा उपयोग गरिनेछ ।

१०) बौद्धिक सम्पत्तिसम्बद्ध स्रष्टाहरूको क्षेत्रीय तथा अन्तर्राष्ट्रियस्तरको सङ्घ संस्थामा सहभागी हुन नेपाली स्रष्टाहरू सम्बद्ध सङ्घ संस्थाहरूलाई प्रोत्साहन गरिनेछ ।

११) बौद्धिक सम्पत्तिको क्षेत्रमा क्षेत्रीय एवं अन्तर्राष्ट्रियस्तरमा भएको विकासमा नेपालको सहभागिता बढाउँदै यसबाट अत्याधिक लाभ हासिल गर्न प्रयत्न गरिनेछ ।

१२) बौद्धिक सम्पत्तिको क्षेत्रमा दक्षिण एशियाली मुलुकहरू र क्षेत्रीय स्तरमा भएको विकासमा नेपालले सहभागिता जनाउँदै संरक्षणका

लागि क्षेत्रीयस्तरमा समन्वयको प्रयासको थालनी गरिनेछ ।

**९. कार्यनीतिहरू**

स्वच्छ तथा प्रतिस्पर्धात्मक वातावरणमा बौद्धिक सम्पत्तिको विकास गरी माथिका उद्देश्य तथा नीतिहरू पूरा गर्न देहायका कार्यनीतिहरू अवलम्बन गरिनेछन् :

९.१ बौद्धिक सम्पत्ति अधिकारको संरक्षण, प्रवर्द्धन तथा विकासलाई प्रोत्साहित गर्ने उद्देश्य (१) को नीतिहरूसँग सम्बन्धित कार्यनीतिहरू

१) बौद्धिक सम्पत्तिको अवधारणा र उपयोगितालाई अङ्गीकार गरी बौद्धिक सम्पत्ति अधिकार संरक्षण गर्ने रणनीति तयार गरिनेछ ।

२) बौद्धिक सम्पत्तिको संरक्षण प्रणालीको विकास गर्न व्यापार सम्बद्ध बौद्धिक सम्पत्ति अधिकार सम्झौता (Agreement on Trade Related Aspects of Intellectual Property Rights (TRIPs) र बौद्धिक सम्पत्ति अधिकारको गैरव्यापार सम्बद्ध क्षेत्र (Non-trade Related Aspects of Intellectual Property Rights) को पालना र संरक्षणको लागि उचित कानुनी प्रबन्ध गरिनेछ ।

३) बौद्धिक सम्पत्ति संरक्षणका लागि मौलिक किसिमको Sui Generis पद्धतिमा आधारित कानुनी व्यवस्था र कार्यप्रकृया समेत अवलम्बन गरिनेछ ।

४) सिर्जनात्मक उद्योगको अवधारणामा संस्कृतिमा आधारित उद्योगको पहिचान, प्रवर्द्धन र विकासमा प्रोत्साहित गरिनेछ ।

५) फरक किसिमको क्षमता भएका, महिला, दलित पिछडिएको वर्गको निम्ति बौद्धिक सम्पत्ति र संरक्षणसम्बन्धमा निःशुल्क रूपमा कानुनी तथा प्राविधिक परामर्श सेवा उपलब्ध गराउने व्यवस्था गरिनेछ ।

६) वनपैदावर र कृषिमा आधारित वस्तुहरू, हस्तकला एवं खाद्य तथा पेयवस्तुहरू उत्पादन गरेर व्यवसायलाई समूह चिन्ह वा भौगोलिक सङ्केतको प्रयोगबाट पहिचान निर्माण गरी बजारको पहुँच र मूल्य अभिवृद्धि गर्न सहयोग गरिनेछ ।

७) बेग्लै खालका शारीरिक तथा मानसिक क्षमता भएका व्यक्तिहरूको लागि सङ्गीत, गायन, हस्तकला जस्ता विषयहरूमा तालिम दिई प्रतिभालाई प्रष्फुरण गराई बौद्धिक सम्पत्तिको धनीको रूपमा स्थापित गर्दै रोजगारीका अवसरहरूमा वृद्धि गरिनेछ ।

८) विभिन्न समुदायमा परम्परादेखि प्रचलनमा रहेका लोकसंस्कृतिलाई ग्रामीण पर्यटनसँग आबद्ध गरी ग्रामीण क्षेत्रका बासिन्दाहरूको आयआर्जनमा थप सहयोग पुऱ्याइनेछ ।

९) प्रविधि हस्तान्तरण सेवा उपलब्ध गराउने सरकारी तथा गैरसरकारी संस्थाको क्षमता वृद्धिमा सहयोग पुऱ्याइनेछ ।

१०) वातावरणीय समस्यालाई सम्बोधन गर्ने नयाँ प्रविधिको विकास र आयातमा सहुलियत प्रदान गरिनेछ ।

११) वातावरण संरक्षण गर्नुपर्दा जीवनोपयोगी औषधी (Life Saving Medicine) र सार्वजनिक सरोकारका अत्यावश्यक वस्तु उत्पादन गर्दा, गैरप्रतिस्पर्धात्मक क्रियाकलाप हटाउनुपर्दा, सम्बन्धित धनी आफैँले सञ्चालन नगरेको वा स्वीकृति नदिएको अवस्थामा व्यापारिक उद्देश्यरहित ढङ्गले नेपालमै उत्पादन गराउन वा देशमा खपतको लागि विदेशबाट उपलब्ध गराउन मात्र अनिवार्य लाइसेन्सिङ्ग (Compulsory Licensing) को पद्धति अपनाइनेछ ।

१२) बौद्धिक सम्पत्ति कार्यालयले बौद्धिक सम्पत्ति उपयोगकर्ता र स्रष्टाहरूका बीच सम्पर्क गराउने सेवा प्रदान गर्नेछ ।

९.२ बौद्धिक सम्पत्तिका सर्जक तथा सामाजिक हितका लागि सन्तुलित प्रणालीको विकास गर्ने उद्देश्य (२) को नीतिहरूसँग सम्बन्धित कार्यनीतिहरू

१) बौद्धिक सम्पत्तिको संरक्षणका लागि यसका विविध विधाहरूबीचको अन्तर्सम्बन्धलाई निम्नबमोजिम अङ्गिकार गरिनेछः

क) पेटेण्ट संरक्षणको आधारभूत कागजात, पेटेण्ट स्पेसीफिकेसन र सोमा प्रस्तुत गरिएको Drawing उपाय प्रतिलिपि अधिकार संरक्षण नहुने ।

ख) प्रतिलिपि अधिकार प्राप्त कलात्मक रचनालाई औद्योगिक डिजाइनको लागि उपयोग गर्ने प्रतिलिपि अधिकार धनीबाट अनुमति प्राप्त गरी दर्ता गरिएको औद्योगिक डिजाइनको छुट्टै स्वतन्त्र संरक्षण भएकोमा त्यस्तो कलात्मक रचनामाथि प्रतिलिपि अधिकार संरक्षणमा प्रतिकूल असर नगर्ने ।

ग) प्रतिलिपि अधिकार प्राप्त कलात्मक रचना ट्रेडमार्कको

रूपमा उपयोग गर्न अनुमति दिएपछि त्यस्तो ट्रेडमार्कको रूपमा उपयोग गरिएको कलात्मक रचनाको हकमा यस्ता रचनाको रचयिताले प्रतिलिपि अधिकार दाबी गर्न नपाउने । तर ट्रेडमार्कको रूपमा उपयोग गरिएको कलात्मक रचनाको प्रतिलिपि अधिकार उल्लङ्घनको उपचार दाबी गर्ने स्वतन्त्र अधिकारलाई यसले कुनै असर नपर्ने ।

घ) आविष्कार गरिएका उपकरणको गैरआधारभूत प्रारूप (Non-functional shape) माथि प्रतिलिपि अधिकार प्राप्त हुने ।

ङ) कुनै वस्तुमा पेटेण्ट प्राप्त भएमा त्यस्ता पेटेण्ट (Product Patent) प्राप्त वस्तुको आधारभूत प्रारूप (Functional Shape) माथि औद्योगिक डिजाइनको संरक्षण प्राप्त नहुने

च) बारमा ख्यातिप्राप्त औद्योगिक डिजाइनको अधिकारवालाले आफ्नो उत्पादनको पहिचानको रूपमा प्रस्तुत गर्न सफल भएको अवस्थामा त्यस्तो डिजाइनलाई ट्रेडमार्कमा दर्ता गर्न सकिने ।

छ) ट्रेडमार्कको रूपमा उपयोगमा ल्याएको दर्ता नगरिएको वा ट्रेडमार्कमा दर्ता गरिएको कलात्मक रचना चिन्हमाथि प्रतिलिपि अधिकार संरक्षण प्राप्त गर्न सक्ने ।

ज) ट्रेडमार्कमा दर्ता भएको चिन्ह भौगोलिक सङ्केतका रूपमा संरक्षण नहुने र भौगोलिक सङ्केतमा दर्ता भएको वा भौगोलिक उत्पत्तिको सङ्केत गर्ने चिन्ह ट्रेडमार्कको रूपमा संरक्षण प्राप्त नहुने ।

झ) प्रमाणीकरण चिन्ह (Certification Mark) को रूपमा दर्ता गरिएको चिन्ह भौगोलिक सङ्केतका रूपमा संरक्षण नहुने ।

ञ) प्रतिलिपि अधिकार संरक्षणयोग्य रचना व्यापारिक गोप्यताको विषयवस्तुका रूपमा उपयोग गरेको अवस्थामा सो उपर प्रतिलिपि अधिकार संरक्षण प्राप्त हुने ।

ट) व्यापारिक गोप्यताको रूपमा रहेको कुनै गोप्य सूचना व्यावसायिक उपयोग गरिसकेको अवस्थामा सोउपर स्वतन्त्र रूपमा खोज अनुसन्धान गरी अर्को व्यक्तिले अध्ययन अनुसन्धान गर्न र सोबाट थप आविष्कार गरी पेटेण्ट दाबी गर्न पाइने ।

ठ) व्यापारिक गोप्यताको रूपमा रहेको कुनै गोप्य सूचना व्यावसायिक उपयोग गरिसकेको अवस्थामा सो उपर पेटेण्ट

दाबी गरी पेटेण्ट दर्ता गर्न पाइने ।

ड) एकीकृत सर्किटको लेआउट डिजाइन संरक्षणले एकीकृत सर्किटमाथि पेटेण्ट दाबी गर्न कुनै बाधा नपुग्ने ।

ढ) परम्परागत सांस्कृतिक एवं लोकसांस्कृतिक प्रस्तुति, सामूहिक अभिव्यक्ति तथा अमूर्त सांस्कृतिक सम्पदामा प्रतिलिपि अधिकार वा ट्रेडमार्क वा औद्योगिक डिजाइनका रूपमा उपयोग गरिएको अवस्थामा सोको पहिचानको संरक्षण तथा लाभ दाबी गर्न पाउने ।

ण) परम्परादेखि प्रचलनमा रहेको प्राविधिक विधि वा उपकरणमा आधारित अनुसन्धानबाट प्राप्त आविष्कारमाथि पेटेण्ट दाबी गर्दा सो अनुसन्धानको आधारका रूपमा उपयोग गरिएको परम्परागत ज्ञानको सन्दर्भ प्रस्तुत गर्नुपर्ने र सोको पेटेण्टबाट प्राप्त बाँडफाँड गरी लिन पाउने अधिकारको दाबी गर्न पाउने ।

त) जैविक विविधता तथा सोमा निहित आनुवांशिक श्रोतमा आधारित अनुसन्धानबाट प्राप्त आविष्कारमाथि पेटेण्ट वा वनस्पतिको नयाँ प्रजातिका रूपमा बौद्धिक सम्पत्ति दाबी गर्दा सो अनुसन्धानको आधारको रूपमा उपयोग गरिएको जैविक विविधता तथा सोमा निहित आनुवांशिक श्रोतको सन्दर्भ प्रस्तुत गर्नुपर्ने र त्यस्तो पेटेण्ट वा वनस्पतिको नयाँ प्रजातिको बौद्धिक लाभ बाँडफाँड गरी लिन पाउने अधिकारको दाबी गर्न पाउने ।

२) कुनै संस्थामा कार्यरत कर्मचारीबाट भएका आविष्कार एवं सिर्जनामा बौद्धिक सम्पत्तिको हक प्रदान गर्दा सम्बन्धित कर्मचारीसमेत लाभमा सहभागी हुने गरी सम्झौता गर्न प्रोत्साहित गरिनेछ ।

३) रोयल्टी सङ्कलनसँग सम्बन्धित समाजलाई समयानुकूल विकास गर्न त्यस्तो समाजलाई आवश्यक सहयोग गरिनेछ । समाजद्वारा सङ्कलन भएको रोयाल्टीमध्ये केही अंश संरक्षण कार्यमा प्रयोग गर्न प्रोत्साहित गरिनेछ ।

९.३ समाजको आर्थिक, सामाजिक तथा सांस्कृतिक समुन्नतिका लागि बौद्धिक सम्पत्तिको महत्त्वबारे जनस्तरमा चेतना अभिवृद्धि गर्ने उद्देश्य (३) का नीतिहरूसँग सम्बन्धित कार्यनीतिहरू :

१) बौद्धिक सम्पत्तिको सिर्जना, उपयोग र प्रवर्द्धनका लागि विश्वविद्यालय अनुदान आयोग, विश्वविद्यालय अनुसन्धान निकाय र सांस्कृतिक संस्थाहरूबीचको समन्वयलाई प्रोत्साहन गरिनेछ ।

२) बौद्धिक सम्पत्ति संरक्षणसँग सम्बद्ध र सो क्षेत्रमा सक्रिय सङ्घ संस्थाहरूसँग आवश्यक समन्वय गरी बौद्धिक सम्पत्तिको विषयवस्तुमा जनचेतनाका लागि आवश्यक तालिम, कार्यशाला, गोष्ठी, क्षमता अभिवृद्धि कार्यक्रम तथा अध्ययन अध्यापनको कार्यक्रम गरिनेछ ।

३) विश्व बौद्धिक सम्पत्ति सङ्गठन, विश्व व्यापार सङ्गठन लगायत अन्य अन्तर्राष्ट्रिय सङ्घ सङ्गठनसँग सहकार्य तथा समन्वय गरी बौद्धिक सम्पत्तिको अध्ययन अनुसन्धान तथा तालिमका कार्यक्रहरू सञ्चालन गरी आवश्यक व्यवस्था गरिनेछ ।

४) बौद्धिक सम्पत्तिको विषयलाई विभिन्न विधाका पाठ्यक्रममा समावेश गरी अध्ययन अध्यापनलाई प्रोत्साहित गरिनेछ ।

५) बौद्धिक सम्पत्तिको विषयमा आमसञ्चारका माध्यमबाट चेतनामूलक कार्यक्रहरू सञ्चालन गरिनेछ ।

९.४ बौद्धिक सम्पत्तिका विधाहरूको व्यावसायिकरणका लागि प्रोत्साहित गर्ने उद्देश्य (४)का नीतिहरूसँग सम्बन्धित कार्यनीतिहरू

१) बौद्धिक सम्पत्तिसम्बन्धमा सूचना सेवा सञ्चालन गरिनेछ र बौद्धिक सम्पत्तिको दर्ता तथा व्यवस्थापनमा सूचना प्रविधिको प्रयोग गरी आवेदन लिने र सूचना प्रवाह गर्ने व्यवस्था मिलाइनेछ ।

२) बौद्धिक सम्पत्तिको जानकारी (Search) सेवा बौद्धिक सम्पत्ति कार्यालयबाट उपलब्ध गराइनेछ र दर्ताको प्रक्रियालाई सहजीकरण गरिनेछ ।

३) बौद्धिक सम्पत्ति अधिकारको उल्लङ्घन गर्नेबाट क्षतिपूर्ति असुल गर्न बौद्धिक सम्पत्तिको मूल्याङ्कन गर्ने प्रणालीको विकास गरिनेछ ।

४) सरकारी तथा निजी क्षेत्रको सहभागितामा बौद्धिक सम्पत्ति प्रवर्द्धन कोषको स्थापना र सञ्चालन गरिनेछ ।

५) नेपालका विद्यालय तथा विश्वविद्यालयहरूलाई प्रतिलिपि अधिकार, पेटेण्ट वा उपयोगी नमुना औद्योगिक डिजाइन जस्ता बौद्धिक सम्पत्ति दर्ता गर्न प्रोत्साहन गरिनेछ ।

६) स्थानीय स्रोत साधनमा आधारित कच्चा पदार्थबाट निर्मित वस्तुहरूका लागि स्वदेश वा विदेशमा समूह चिन्ह र भौगोलिक सङ्केत दर्ता गराउँदा लागेको दर्ताशुल्क नेपाल सरकारले बहन गर्ने व्यवस्था गरिनेछ ।

७) नयाँ प्रविधि सिर्जना गर्न उद्योग व्यवसायले अनुसन्धान तथा विकास (Research and Development) कार्य गरी बौद्धिक सम्पत्ति सिर्जना गरेमा सोमा लागेको खर्चलाई करयोग्य आय रकमबाट कट्टा गर्न पाउने व्यवस्था मिलाइनेछ ।

८) बौद्धिक सम्पत्तिको विकास र प्रयोग गर्न निजी क्षेत्रलाई प्रोत्साहित गरिनेछ ।

९) बौद्धिक सम्पत्तिको सिर्जनामा विश्वविद्यालय, बौद्धिक सम्पत्ति कार्यालय र औद्योगिक प्रतिष्ठानहरूबीच सहकार्य गरिनेछ ।

१०) बैंक तथा वित्तीय संस्थाहरूले बौद्धिक सम्पत्तिलाई धितोको रूपमा स्वीकार गर्न सक्ने व्यवस्था मिलाइनेछ ।

११) उपभोक्ताहरूको हकहित संरक्षणका लागि औषधीको समानान्तर आयातसम्बन्धी (Prallel Importation) कानुनी व्यवस्था गरिनेछ ।

९.५ बौद्धिक सम्पत्तिको संरक्षण तथा अधिकार प्रचलनका लागि कानुनी, संस्थागत तथा मानव श्रोतको विकास गर्ने उद्देश्य (५) का नीतिहरूसँग सम्बन्धित कार्यनीतिहरू

१) बौद्धिक सम्पत्तिसम्बन्धी मुद्दालाई छिटो, छरितो सुनुवाइ र किनाराको व्यवस्था गरिनेछ । बौद्धिक सम्पत्तिसम्बन्धी देवानी प्रकृतिका विवादहरूलाई मध्यस्थकर्ता, वार्ता तथा मेलमिलापको माध्यमबाट किनारा लगाउने पद्धति अवलम्बन गरिनेछ । नियतवश गम्भीर प्रकृतिका एवं पटक-पटक बौद्धिक सम्पत्ति अधिकार उल्लङ्घन गर्नेलाई फौजदारी दायित्वअन्तर्गत कारबाहीको व्यवस्था गरिनेछ ।

२) अस्वस्थ प्रतिस्पर्धा नियन्त्रण गर्न बौद्धिक सम्पत्ति अधिकार सम्बन्धी कानुनको प्रभावकारी कार्यान्वयन गरिनेछ ।

३) बौद्धिक सम्पत्ति प्रशासनको प्रभावकारी संरक्षण र व्यवस्थापनका लागि एकीकृत बौद्धिक सम्पत्ति कार्यालयको स्थापना गरिनेछ ।

४) बौद्धिक सम्पत्तिको संरक्षणमा आधुनिक प्रविधिको उपयोग गरी आवेदन दर्ता एवं अन्य बौद्धिक सम्पत्ति प्रशासनको व्यवस्था गरिनेछ ।

५) बौद्धिक सम्पत्ति कार्यालयमा कार्यरत जनशक्तिको क्षमता अभिवृद्धि, विकास, तालिम, डाटावेसको प्रयोग र बौद्धिक सम्पत्ति प्रशासनका क्षेत्रमा आपसि समन्वय तथा सहकार्य गर्नका लागि बौद्धिक सम्पत्तिसँग सम्वद्ध अन्तर्राष्ट्रिय सङ्घ संस्थाहरूसँग सम्बन्ध विस्तार गरिने छ ।

६) बौद्धिक सम्पत्ति अधिकार कार्यान्वयन (Enforcement) लाई प्रभावकारी बनाउन बौद्धिक सम्पत्तिसम्बन्धी कानुनको प्रयोगमा सम्बद्ध निकायका बीचमा सम्पर्क र समन्वय कायम गरिनेछ । गैरकानुनी रूपमा आयातीत सामान भन्सार बिन्दुमा रोकी उचित छानबीन गर्नको लागि भन्सार कार्यालयको भूमिका सशक्त तुल्याइनेछ ।

७) बौद्धिक सम्पत्तिसम्बद्ध विषयवस्तुमा आवश्यक परामर्श तथा सहयोगका लागि द्विपक्षीय तथा अन्तरदेशीय सहयोग तथा समन्वयको व्यवस्था गरिनेछ ।

८) बौद्धिक सम्पत्तिसम्बद्ध अन्तर्राष्ट्रिय सङ्घ संस्थामा सहभागिता जनाउँदै राष्ट्रिय हित अनुकूल हुने गरी अन्तर्राष्ट्रिय सन्धि सम्झौताको पक्ष बन्दै जाने कार्यनीति लिइनेछ ।

९) बौद्धिक सम्पत्ति विकासका लागि आवश्यकतानुसार सार्वजनिक निजी साझेदारी (Public- Private Partnership) कार्यक्रमको विकास गरिनेछ ।

१०) बौद्धिक सम्पत्तिको संरक्षणको क्षेत्रमा क्षमता विकासका लागि विश्व व्यापार सङ्गठन र विश्व बौद्धिक सम्पत्ति सङ्गठनलगायतका अन्तर्राष्ट्रिय सङ्घ संस्थाहरूबाट सहायता परिचालन र नेपालको बौद्धिक सम्पत्ति संरक्षणलाई उपयोगी हुने प्रविधि हस्तान्तरणका प्रयत्नहरू गरिनेछ ।

## १०. संस्थागत संरचना

प्रस्तुत नीतिको प्रभावकारी रूपमा कार्यान्वयन गर्न देहायबमोजिमको संस्थागत संरचनाको विकास गरिनेछ :

क) राष्ट्रिय बौद्धिक सम्पत्ति परिषद्

बौद्धिक सम्पत्तिसम्बन्धी नीतिगत सुधार र संस्थागत समन्वयको लागि देहायबमोजिम एक राष्ट्रिय बौद्धिक सम्पत्ति परिषद् रहनेछ :

| | |
|---|---|
| १. मन्त्री, उद्योग मन्त्रालय | अध्यक्ष |
| २. सदस्य, राष्ट्रिय योजना आयोग (उद्योग हेर्ने) | सदस्य |
| ३. उपकुलपति, नेपाल विज्ञान तथा प्रविधि प्रज्ञा प्रतिष्ठान | सदस्य |
| ४. उपकुलपति, नेपाल प्रज्ञाप्रतिष्ठान | सदस्य |
| ५. उपकुलपति, नेपाल ललितकला प्रज्ञा प्रतिष्ठान | सदस्य |
| ६. उपकुलपति, नेपाल सङ्गीत तथा नाट्य प्रज्ञा प्रतिष्ठान | सदस्य |
| ७. मुख्य सचिव, नेपाल सरकार | सदस्य |
| ८. सचिव, अर्थ मन्त्रालय | सदस्य |
| ९. सचिव, उद्योग मन्त्रालय | सदस्य |
| १०. सचिव, कृषि विकास मन्त्रालय | सदस्य |
| ११. सचिव, कानुन न्याय तथा संसदीय मामिला मन्त्रालय | सदस्य |
| १२. सचिव, परराष्ट्र मन्त्रालय | सदस्य |
| १३. सचिव, पशुपंक्षी विकास मन्त्रालय | सदस्य |
| १४. सचिव, वन तथा भू संरक्षण मन्त्रालय | सदस्य |
| १५. सचिव, वाणिज्य मन्त्रालय | सदस्य |
| १६. सचिव, विज्ञान तथा प्रविधि मन्त्रालय | सदस्य |
| १७. सचिव, संस्कृति पर्यटन तथा नागरिक उड्डयन मन्त्रालय | सदस्य |
| १८. सचिव, शिक्षा मन्त्रालय | सदस्य |
| १९. सचिव, स्वास्थ्य मन्त्रालय | सदस्य |
| २०. बौद्धिक सम्पत्ति विज्ञहरूमध्येबाट एक जना | सदस्य |
| २१. बौद्धिक सम्पत्ति संरक्षणसम्बद्ध संस्थाका प्रतिनिधिमध्येबाट एक जना | सदस्य |
| २२. अध्यक्ष, बौद्धिक सम्पत्तिसम्बन्धी पेशागत सङ्गठन | सदस्य |

२३. प्रमुख, बौद्धिक सम्पत्ति कार्यालय सदस्य-सचिव

परिषद्को बैठकमा नेपाल उद्योग वाणिज्य महासङ्घ, विश्वविद्यालय, अनुसन्धानमूलक निकाय, नेपाल प्रहरी, भन्सार विभाग र अन्य निकायका प्रतिनिधिलाई आमन्त्रित गर्न सकिन्छ । यस परिषद्को कार्यविधि परिषद्ले निर्णय गरेबमोजिम हुनेछ ।

बौद्धिक सम्पत्तिसम्बन्धी कार्यकारी निर्णय गर्नका लागि परिषद्ले बौद्धिक सम्पत्ति कार्यकारी समिति गठन गरी सो समितिको काम, कर्तव्य र अधिकार तोक्न सक्नेछ ।

ख) बौद्धिक सम्पत्ति कार्यालय

बौद्धिक सम्पत्तिसम्बन्धी प्रवर्द्धन, अभिलेखीकरण, संरक्षण र अन्य आवश्यक कार्यका लागि नेपाल सरकार उद्योग मन्त्रालयअन्तर्गत एक एकीकृत बौद्धिक सम्पत्ति कार्यालय रहनेछ । सो कार्यालयले औद्योगिक सम्पत्तिको दर्ता र प्रशासन, प्रतिलिपि अधिकार तथा सम्बद्ध अधिकारको संरक्षण गर्न प्रवर्द्धनसम्बन्धी कार्य गर्नेछ । कार्यालयलाई बौद्धिक सम्पत्ति सम्बद्ध विवाद समाधानको लागि सहजकर्ताको भूमिकासमेत प्रदान गरिनेछ । यस कार्यालयलाई बौद्धिक सम्पत्तिको हक वेहकको प्रश्न निरूपण गर्ने बाहेकको बौद्धिक सम्पत्ति प्रशासन सम्बद्ध अर्धन्यायिक अधिकार प्रदान गरिनेछ ।

बौद्धिक सम्पत्ति कार्यालयलाई आवश्यकताअनुसार अत्याधुनिक र स्रोतसाधन सम्पन्न बनाइनेछ। यसको निमित्त राष्ट्रिय तथा अन्तर्राष्ट्रिय दातृ निकायहरूबाट समेत वित्तीय श्रोत परिचालन गर्न सकिनेछ ।

ग) बौद्धिक सम्पत्ति न्यायाधीकरण एवं बौद्धिक सम्पत्ति इजलाश

बौद्धिक सम्पत्तिसम्बद्ध विवादको प्रभावकारी समाधान गर्नका लागि आवश्यकतानुसार बौद्धिक सम्पत्तिसम्बन्धी न्यायाधिकरणको स्थापना गरिनेछ । त्यस्तो न्यायाधिकरण स्थापना नभएसम्मका लागि उच्च अदालतमा बौद्धिक सम्पत्ति इजलाशको व्यवस्था गरिनेछ ।

घ) जनशक्ति विकास

बौद्धिक सम्पत्तिसँग सम्बद्ध जनशक्ति विकासका लागि सरकारी र निजी क्षेत्रमा आवश्यक संस्थागत व्यवस्था गरिनेछ ।

**११. आर्थिक व्यवस्था**

१) बौद्धिक सम्पत्ति प्रवर्द्धनका लागि बौद्धिक सम्पत्ति प्रवर्द्धन कोषको व्यवस्था गरिनेछ । सो कोषमा देहायअनुसारका रकम रहनेछन् :

क) नेपाल सरकारको अनुदान,

ख) बौद्धिक सम्पत्तिको आवेदन र दर्ता दस्तुरबाहेक विभिन्न सेवा शुल्कबापत उठेको रकम,

ग) स्वदेशी तथा विदेशी दातृ निकायबाट प्राप्त रकम, र

घ) अन्य विविध स्रोतबाट उठेको रकम ।

२) कोषको सञ्चालन नेपाल सरकारद्वारा स्वीकृत नियमावलीबमोजिम हुनेछ ।

३) कोषको रकम जनचेतना अभिवृद्धि तालीम सञ्चालन, भौतिक सामग्रीको आपूर्ति जस्ता बौद्धिक सम्पत्ति प्रवर्द्धन र विकासका काममा खर्च गरिनेछ ।

## १२. कानुनी व्यवस्था

१) यो नीति कार्यान्वयन गर्न औद्योगिक सम्पत्ति र प्रतिलिपि अधिकार तथा अन्य बौद्धिक सम्पत्तिसम्बन्धी कानुनहरू तर्जुमा एवं परिमार्जन गरिनेछ र आवश्यकतानुसार बौद्धिक सम्पत्तिका थप विधाहरूमा कानुन निर्माण गर्दै लगिनेछ ।

२) बौद्धिक सम्पत्तिसम्बन्धी कानुनहरू तर्जुमा गर्दा विश्व व्यापार सङ्गठनको व्यापार सम्बद्ध बौद्धिक सम्पत्ति सम्झौताअन्तर्गत अतिकम विकसित मुलुकलाई प्राप्त छुट, सहुलियत र सुविधाको प्रभावकारी उपयोग गर्ने नीति लिइनेछ ।

## १३. नीति कार्यान्वयनको समयावधि

प्रस्तुत नीतिको कार्यान्वयनका लागि बौद्धिक सम्पत्ति कार्यकारी समितिले विस्तृत कार्ययोजना बनाई दुई वर्षभित्र आवश्यक कानुनी व्यवस्था गरी लागू गरिनेछ ।

## १४. अनुगमन तथा मूल्याङ्कन

बौद्धिक सम्पत्ति कार्यान्वयन र सम्बद्ध मन्त्रालयहरूले संयुक्त रूपमा नीति कार्यान्वयनको स्थितिको वार्षिक मूल्याङ्कन गर्नेछन् ।

## १५. नीतिको पुनरावलोकन र परिमार्जन

नीति कार्यान्वयनको प्रभावकारिता, उपयुक्तता र उपादेयताबारे प्रत्येक

पाँच वर्षमा मूल्याङ्कन गरी नीतिमा समसामयिक पुनरावलोकन तथा सुधार गरिनेछ । बौद्धिक सम्पत्तिसँग सम्बद्ध अन्य नीति तथा कानुनहरूसमेत आवश्यकतानुसार पुनरावलोकन र परिमार्जन गरिनेछ ।

# अपाङ्गता भएका व्यक्तिका लागि समावेशी शिक्षा नीति, २०७३

**१. पृष्ठभूमिः**

शिक्षा पाउनु सबै बालबालिकाको अधिकार हो । नेपालको संविधानले सामाजिक न्याय स्थापित गर्न समावेशी र सहभागितामूलक सिद्धान्तका आधारमा समतामूलक समाजको निर्माण गर्ने सङ्कल्प गरेको छ साथै प्रत्येक नागरिकलाई अनिवार्य र निःशुल्क आधारभूत शिक्षा पाउने हकको व्यवस्था गरेको छ । नेपालले बाल अधिकार महासन्धि सन् १९८९ तथा अपाङ्गता भएका व्यक्तिहरूको अधिकारसम्बन्धी महासन्धि सन् २००६ अनुमोदन गरेको छ। यसैगरी सबैका लागि शिक्षको अन्तर्राष्ट्रिय अभियानमा आफ्नो प्रतिबद्धता जनाउँदै अपाङ्गता भएका बालबालिकालाई शैक्षिक मूल प्रवाहमा समावेश गरी शिक्षको अधिकार सुनिश्चित गर्न अपाङ्गता भएका व्यक्तिका लागि समावेशी शिक्षा नीति, २०७३ जारी गरिएको छ ।

समावेशी शिक्षा सबै बालबालिकाका लागि विभेदरहित वातावरणमा सांस्कृतिक, वर्गीय, जातीय एवम् भौगोलिक विविधतालाई सम्मान गर्दै आफ्नै समुदायमा जीवनोपयोगी शिक्षा प्राप्त गर्ने अधिकारलाई सुनिश्चित गर्ने शैक्षिक पद्धतिको विकास प्रक्रिया भएकाले यसले समुदायको स्वामित्वलाई महत्व दिँदै विद्यालयमा बालबालिकाको आवश्यकता अनुकूल उपयुक्त वातावरण र सहयोग पाएमा सबैले सिक्न सक्दछन् भन्ने मान्यतामा विश्वास गर्दछ ।

समावेशी शिक्षा पद्धतिले कुनै पनि परिस्थितिजन्य कारणले शैक्षिक अवसरबाट वञ्चित एवम् विद्यालयमा रहेर पनि अनुकूल र पहुँचयुक्त वातावरण तथा सहयोगको अभावमा विद्यालय छाड्ने जोखिममा रहेका बालबालिकाको सिकाइको अवसर निर्माणमा सहयोग गर्दछ । यी आधारमा समावेशी शिक्षाले अपाङ्गता भएका बालबालिकाको पहिचान गरी सामाजिक, सांस्कृतिक र शैक्षिक आवश्यकता पूरा गर्न बाल केन्द्रित शिक्षण सिकाइ प्रक्रिया अवलम्बन गर्न प्रोत्साहन गर्दछ ।

**२. विगतका प्रयासहरू**

नेपालले अपाङ्गता भएका बालबालिकाको शिक्षा प्रवर्द्धनका लागि विभिन्न कानूनी तथा कार्यक्रमगत व्यवस्था गरी कार्यान्वयनमा अगाडि बढाइएको छ ।

शिक्षा ऐन, २०२८ (संशोधनसहित) मा विशेष शिक्षको सञ्चालन साधारण शिक्षा सरह हुने कुरा उल्लेख छ भने शिक्षा नियमावली २०५९ मा शिक्षा मन्त्रीको अध्यक्षतामा विशेष शिक्षा परिषद्को गठन गरी विशेष शिक्षा सञ्चालनसम्बन्धी व्यवस्था गरिएको छ । विशेष शिक्षातर्फका नीतिगत र कार्यक्रमगत विषयका क्षेत्रमा नियमित कार्य गर्न विशेष शिक्षा परिषद् क्रियाशील छ ।

विशेष शिक्षा नीति २०५३ ले दृष्टिविहीन, बहिरा, बौद्धिक अपाङ्गता र शारीरिक अपाङ्गता भएका बालबालिकालाई आवास सुविधासहितको शिक्षको अवसर दिने कुरा उल्लेख गरेको छ । शिक्षा नियमावली, २०५९ को नियम ६० मा अपाङ्गता भएका बालबालिकालाई विशेष शिक्षा प्रदान गर्न सकिने र सोही नियमावलीको नियम ६६ एवम् अपाङ्ग संरक्षण तथा कल्याण नियमावली, २०५१ को नियम १५ मा विशेष शिक्षा दिने संस्थालाई नेपाल सरकारले निर्धारण गरेबमोजिम सुविधा दिइने व्यवस्था उल्लेख छ । त्यस्तै, शिक्षा, नियमावली, २०५९ को नियम १५१(२) मा संस्थागत विद्यालयले कुल विद्यार्थी सङ्ख्याको कम्तीमा दश प्रतिशतमा नघटाई जेहेन्दार, गरिब, अपाङ्गता भएका व्यक्ति, महिला, दलित र जनजाति समुदायका विद्यार्थीलाई छात्रवृत्तिको व्यवस्था गरेको छ। यसै सम्बन्धमा विशेष शिक्षा सञ्चालनसम्बन्धी निर्देशिका, २०६० जारी भई कार्यान्वयनमा रहेको छ ।

अपाङ्गता भएका बालबालिकाको छात्रवृत्तिसहित विभिन्न सामुदायिक विद्यालयहरू, स्रोत कक्षाहरू एवम् विशेष विद्यालयहरूमा अध्ययन गर्ने अवसर पाएका छन् । स्रोत कक्षा तथा विशेष विद्यालयहरूमा विशेष आवश्यकता भएका बालबालिकाका लागि आवास र स्रोत शिक्षकको व्यवस्था मिलाइएको छ । अपाङ्गता भएका बालबालिकाका लागि निःशुल्क पाठ्य पुस्तक, शिक्षाण सामग्री एवं उपकरणहरू वितरण गर्ने गरिएको छ । साथै अपाङ्गता पहिचान गर्न, अपाङ्गतासम्बन्धी आवश्यक सेवा, सहयोग, सरसल्लाह र अन्य कार्यक्रम तर्जुमा गर्न ६२ जिल्लाहरूमा लेखाजोखा केन्द्र स्थापना भएका छन् ।

संयुक्त राष्ट्र सङ्घीय मानव अधिकारसम्बन्धी घोषणापत्र सन् १९४८ र बाल अधिकारसम्बन्धी महासन्धि सन् १९८९ ले आधारभूत तहसम्म अधिकारको रूपमा निःशुल्क शिक्षा सबैले पाउनुपर्ने उल्लेख गरेको छ । अपाङ्गता भएका व्यक्तिका लागि समतामूलक अवसर सुनिश्चित गर्नेसम्बन्धी संयुक्त राष्ट्र सङ्घीय प्रमाणिक नियमहरू सन् १९९३, एसिया तथा प्रशान्त क्षेत्रका अपाङ्गता भएका व्यक्तिहरूको दशक सन् १९९३-२००२, सालामान्का घोषणा सन् १९९४, संयुक्त राष्ट्र सङ्घीय अपाङ्गता भएका व्यक्तिको अधिकारसम्बन्धी महासन्धि, सन् २००६ ले अपाङ्गता भएका व्यक्तिलगायत विशेष शिक्षको आवश्यकता भएका सबैलाई शिक्षको राष्ट्रिय कार्यक्रमको

मूलधारमा समावेश गर्नुपर्ने कुरामा जोड दिएका छन् । साथै इन्चोन घोषणा, सन् २०१५ ले विशेष आवश्यकता भएका बालबालिकाको शिक्षा प्रवर्द्धन गर्नका लागि नीतिगत सुधार गर्न सरकारलाई प्रेरित गरेको छ ।

नेपालले जोमटिन घोषणा सन् १९९०, डाकार सम्मेलन सन् २००० र सहस्राब्दी विकास लक्ष्य सन् २००० लगायतका विभिन्न अन्तर्राष्ट्रिय मञ्चहरूमा सबैका लागि शिक्षको प्रतिबद्धता जाहेर गरी अपाङ्गता भएका बालबालिकाको शिक्षा प्रवर्द्धनका लागि समेत नीतिगत एवम् कानुनी सुधारका प्रयासहरू गर्दै आएको छ । यिनै आधारमा अपाङ्गता भएका व्यक्तिका लागि समावेशी शिक्षा नीतिको आवश्यकता भई यो नीति प्रस्ताव गरिएको हो ।

### ३. वर्तमान स्थिति

नेपालमा २०२१ सालमा दृष्टिविहीन बालबालिकाका लागि एकीकृत विद्यालय, २०२३ सालमा बहिरा बालबालिकाका लागि विशेष विद्यालय, २०२६ सालमा दृष्टिविहीन तथा शारीरिक अपाङ्गता र २०३८ सालमा बौद्धिक अपाङ्गता भएका बालबालिकाहरूका लागि विशेष विद्यालयको सुरुवात भएको थियो । नेपाल सरकारले २०५३ सालमा अपाङ्गता भएका बालबालिकाका लागि शिक्षामा पहुँच विस्तार गर्न उनीहरूको शारीरिक, मानसिक र कार्यगत क्षमताको आधारमा शिक्षा प्रदान गर्न विशेष शिक्षा नीति तर्जुमा गरी लागू गरेको हो ।

अपाङ्गता भएका बालबालिकालाई आफ्नो पहिचान र अपाङ्गताको प्रकृतिको आधारमा विशेष व्यवस्थाका साथ उपलब्ध गराइने शिक्षा पद्धतिलाई विशेष शिक्षको रूपमा स्वीकार गरी बहिरा, शारीरिक, दृष्टिविहीन र बौद्धिक अपाङ्गता भएका बालबालिकाका लागि विशेष विद्यालयको व्यवस्था गरिएको छ । अपाङ्गता भएका बालबालिकाको सन्दर्भमा पहुँचयुक्त र विद्यालयसम्म पुग्ने वातावरणको विकास गर्न विविध कार्यक्रमहरू सञ्चालनमा रहेका छन् । जसअन्तर्गत स्रोत कक्षहरूको सञ्चालन, लेखाजोखा केन्द्रहरूको स्थापना ब्रेललिपि र पहुँचयुक्त पाठ्यपुस्तकका साथै साङ्केतिक भाषासहितका पाठ्यसामग्रीको व्यवस्था गरिएको छ । विद्यालयका भवनहरूलाई सबैखाले अपाङ्गतामैत्री तुल्याउने नीति अवलम्बन गरिएको छ ।

मुलुकभरि दृष्टिविहीन, बहिरा तथा सुस्तश्रवण र बौद्धिक अपाङ्गता गरी ३८० स्रोत कक्षा, ३२ विशेष विद्यालयहरू र २/२ एकीकृत विद्यालयहरू सञ्चालनमा रहेका छन् । हाल नेपालमा प्रारम्भिक बाल शिक्षादेखि माध्यमिक तहसम्म विभिन्न किसिमका अपाङ्गता भएका ७४,८२९ जना विद्यार्थी अध्ययनरत छन् ।

## ४. समस्या र चुनौतीहरू

अपाङ्गता भएका बालबालिकाको गुणस्तरीय शिक्षा प्राप्तिमा निम्नलिखित समस्या र चुनौतीहरू रहेका छन् :

४.१ अपाङ्गता भएका बालबालिकालाई शैक्षिक अवसर प्रदान गर्ने विविध प्रयास भए पनि परिवार, समुदाय र विद्यालयले जिम्मेवारी बोध गर्ने कार्यमा कमी हुँदा अपाङ्गता भएका बालबालिका शिक्षको मूलधारमा पूर्णरूपमा समेटिन नसकेका ।

४.२ अपाङ्गता भएका व्यक्तिहरूको सामाजिक समावेशीकरणको प्रवर्द्धन गर्ने ध्येय राखिएको भए तापनि गुणस्तरीय जीवन यापन र आत्मनिर्भर गराउने कार्यमा अपेक्षित उपलब्धि हासिल हुन नसकेको ।

४.३ बाल केन्द्रित क्रियाकलापमा दौँतरी (Peer Learning) तथा सहयोग गर्ने कार्य समावेशी संस्कृतिअनुरूप प्रभावकारी हुन नसक्दा शिक्षको मूल प्रवाहीकरण तथा सामाजिक समावेशीकरण हुन नसक्ने जोखिम कायमै रहेको ।

४.४ अपाङ्गता भएका बालबालिकाको गुणस्तरीय शिक्षा र तालिमका लागि आवश्यक मात्रामा दक्ष जनशक्ति उत्पादन र व्यवस्थापन गर्ने कार्य अझै अधुरो रहेको ।

४.५ विविध प्रकारका अपाङ्गता भएका बालबालिकाको तथ्याङ्क तथा सूचना व्यवस्थापन गर्ने कार्य व्यवस्थित हुन नसकेको ।

४.६ अपाङ्गता भएका बालबालिकाको आवश्यकता र सिकाइलाई सहज बनाउने नवीनतम सूचना प्रविधिको अवलम्बन र उपयोग गर्ने कार्य व्यवस्थित हुन नसकेको ।

४.७ अपाङ्गता अनुकूल मूल्याङ्कन, परीक्षा प्रणाली र सिकाइको व्यवस्थापनका लागि पर्याप्त खोज, अनुसन्धान तथा अभ्यास हुन नसकेको ।

## ५. नयाँ नीतिको आवश्यकता

विशेष शिक्षा नीति, २०५३ जारी भई लागू भएको, सन् १९९४ मा सालामान्का घोषणाले सबै बालबालिकाले शिक्षको अवसर प्राप्त गर्ने कुरालाई आफ्नो विषय बनाएअनुरूप सबैका लागि शिक्षको अभियानलाई पूरा गर्ने सन्दर्भमा समावेशी शिक्षको अवधारणालाई अङ्गीकार गरेको, अपाङ्गता भएका व्यक्तिहरूको अधिकारसम्बन्धी संयुक्त राष्ट्रसङ्घीय महासन्धि र यसको इच्छाधीन आलेख, २००६ को धारा २४ ले अपाङ्गता भएका बालबालिकाका

लागि सबै तहमा समावेशी शिक्षा पद्धति लागू गर्ने कुरा उल्लेख गरेको छ । उल्लिखित अन्तर्राष्ट्रिय प्रतिबद्धतासहित एसिया प्रशान्त क्षेत्रमा सन् २०१३ देखि २०२२ सम्मको दशकमा अपाङ्गता भएका व्यक्तिहरूको अधिकारलाई वास्तविक जीवनमा रूपान्तरण गर्न पारित गरिएको १० वर्षे इन्चोन रणनीति तथा कार्य योजनालाई नेपालले आत्मसात् गरेको छ । नेपालको संविधानको धारा ३१ को उपधारा (३) र (४) को शिक्षासम्बन्धी प्रावधानले अपाङ्गता भएका बालबालिकालाई विद्यालय तहमा अनिवार्य रूपमा समावेशी शिक्षा पद्धति अवलम्बन गर्न निर्देशित गरेको छ । नेपालमा भएको राजनीतिक परिवर्तनबाट समावेशी चरित्रको लोकतान्त्रिक अभ्यास सुरु भएको छ । यसमा अपाङ्गता भएका बालबालिकाको समेत सामाजिक समावेशीकरण हुनुपर्ने र यसका लागि समावेशी शिक्षा उपयुक्त माध्यम हुने हुँदा यो नीति तर्जुमा गर्न वाञ्छनीय भएको छ ।

## ६. दूरदृष्टि

प्रत्येक अपाङ्गता भएका व्यक्तिहरू अधिकारमा आधारित गुणस्तरीय शिक्षको माध्यमबाट सशक्त, स्वतन्त्र र मर्यादित जीवन यापन गर्न सक्षम भएका हुने ।

## ७. उद्देश्यहरू

अपाङ्गता भएका सबै प्रकारका व्यक्तिका लागि अधिकारमुखी अवधारणाका आधारमा गुणस्तरीय शिक्षा सुनिश्चित गरी जीवन पर्यन्त शिक्षका माध्यमबाट सक्षम (नेतृत्व प्रदान गर्न योग्य) र प्रतिस्पर्धी नागरिक तयार गर्नु अपाङ्गता भएका नागरिकका लागि समावेशी शिक्षा नीतिको मूल उद्देश्य रहेको छ । यो मूल उद्देश्य हासिल गर्न निम्नलिखित उद्देश्यहरू तय गरिएका छन् :

७.१ अपाङ्गता भएका बालबालिकाका लागि गुणस्तरीय शिक्षका अवसरहरूमा समतामूलक पहुँच सुनिश्चित गर्ने ।

७.२ अपाङ्गता भएका नागरिकका लागि आवश्यकता अनुकूल गुणस्तरीय, जीवनोपयोगी, सीपमूलक र रोजगारमुखी शिक्षको अवसर प्रदान गर्ने ।

७.३ अपाङ्गता भएका नागरिकका लागि जीवनपर्यन्त निरन्तर शिक्षको व्यवस्था गर्ने ।

८. **नीतिहरू**

८.१ अपाङ्गता भएका हरेक बालबालिकाका लागि सबै तहमा क्षमता र योग्यताका आधारमा निःशुल्क शिक्षका अवसरहरू खुला गरिनेछ (७.१)

८.२ विद्यालय, विश्वविद्यालय तथा शिक्षालयहरूमा अपाङ्गता भएका विद्यार्थीहरू भर्ना गर्दा वैज्ञानिक प्रणालीमा आधारित वस्तुगत परीक्षण (Functional Assessment) गर्ने व्यवस्था गरिनेछ । (७.१)

८.३ प्रारम्भिक बाल शिक्षादेखि उच्च शिक्षासम्म पाठ्यक्रम, पाठ्यपुस्तक, सिकाइ सामग्री, सन्दर्भ सामग्रीहरू र परीक्ष तथा मूल्याङ्कन प्रणाली अपाङ्गताअनुकूल हुने गरी सुनिश्चित गरिनेछ । (७.१)

८.४ अपाङ्गता भएका विद्यार्थीको सर्वाङ्गीण विकासका लागि सबै प्रकारका विद्यालय, विश्वविद्यालय तथा शिक्षालयलाई अपाङ्गता मैत्री, छात्रामैत्री, बालमैत्री र हिंसारहित सिकाइ केन्द्रका रूपमा विकास गरिनेछ । (७.१)

८.५ राष्ट्रिय तथा अन्तर्राष्ट्रिय परिवेशअनुरूप दक्ष एवम् प्रतिस्पर्धी नागरिक तयार गर्न अपाङ्गतामैत्री प्रविधि अनुकूल पाठ्ययक्रम, पाठ्य सामग्री तथा शैक्षिक सामग्रीहरू विकास गरी समावेशी र समतामूलक गुणस्तरीय शिक्षा सुनिश्चित गरिनेछ । (७.२)

८.६ अपाङ्गता भएका नागरिकहरूलाई प्राविधिक शिक्षामा समान, सहज र सुगम पहुँच सुनिश्चित गरी श्रमबजारका लागि सक्षम जनशक्ति निर्माण गरिनेछ । (७.२)

८.७ दिगो विकासका लागि अपाङ्गताका प्रकारअनुकूल हरित सीप (Green Skills) मा आधारित जीवनोपयोगी र सीपमूलक गुणस्तरीय शिक्षा उपलब्ध गराइनेछ । (७.२)

८.८ पहुँचयुक्त नवीनतम् सूचना प्रविधिमा आधारित अपाङ्गमैत्री शिक्षाण सिकाइ कार्यलाई व्यवस्थित गरिनेछ । (७.२)

८.९ विपद् व्यवस्थापनका सबै चरणमा अपाङ्गता भएका व्यक्तिहरूको सुरक्षाका लागि आवश्यक व्यवस्था गरिनेछ । (७.२)

८.१० अपाङ्गता भएका नागरिकहरूको अधिकारलाई वास्तविक जीवनमा रूपान्तरण (Make the Right Real and Functional) गर्न अपाङ्गताअनुकूलको शिक्षा सुनिश्चित गरिनेछ । (७.३)

८.११ समावेशी शिक्षका सन्दर्भमा समय सापेक्ष खोज, अध्ययन, अनुसन्धान

तथा योजना तर्जुमाका लागि तथ्याङ्कीय सूचनाको आधार (Database) तयार गरी अपाङ्गता (बहुअपाङ्गता, डाउनसिन्ड्रम, मस्तिष्क पक्षघात, अटिज्म, बौद्धिक अपाङ्गता, हेमोफिलिया, बहिरा तथा सुस्तश्रवण, दृष्टिविहीन, श्रवणदृष्टिविहीन, शारीरिक अपाङ्गता, स्वर बोलाइ अपाङ्गता, सिकाइसम्बन्धी अपाङ्गता) भएका नागरिकका लागि आवश्यकतामा आधारित गुणस्तरीय जीवन पर्यन्त शिक्षा सुनिश्चित गरिनेछ । (७.३)

८.१२ अपाङ्गता भएका नागरिक तथा व्यक्तिका शिक्षा हासिल गर्न पाउने अधिकार सुनिश्चित गर्न तथा समावेशी शिक्षालाई समय सापेक्ष गर्न एक समावेशी शिक्षा परिषद् रहनेछ । (७.३)

८.१३ अपाङ्गता भएका बालबालिका, नागरिक तथा व्यक्तिका लागि शिक्षको अवसर सुनिश्चित गर्न आवश्यक मानव संसाधन, संरचना एवम् संयन्त्रको विकास तथा व्यवस्था गरिनेछ । (७.१, ७.२ र ७.३)

## ९. रणनीतिहरू

अपाङ्गता भएका हरेक नागरिकलाई गुणस्तरीय शिक्षको माध्यमबाट सक्षम र प्रतिस्पर्धी नागरिकका रूपमा तयार गर्नका लागि तय गरिएका समावेशी शिक्षा नीतिको प्रभावकारी कार्यान्वयन गर्न निम्नलिखित रणनीतिहरू अवलम्बन गरिनेछन् :

९.१ अपाङ्गता भएका हरेक बालबालिकाको प्रतिस्पर्धात्मक क्षमता विकास हुने गरी औपचारिक, अनौपचारिक, खुला तथा दूरशिक्षा र निरन्तर सिकाइको व्यवस्था गर्ने । (८.१)

९.२ अपाङ्गता भएका बालबालिकाहरूका लागि विभिन्न निकायहरूबाट प्राप्त हुने छात्रवृत्तिलाई एकद्वार प्रणालीबाट वितरण गर्ने ।(८.१)

९.३ अपाङ्गता भएका विद्यार्थीहरूलाई विद्यालय, विश्वविद्यालय तथा शिक्षालयहरूका विभिन्न तहमा भर्ना गर्दा उनीहरूको शारीरिक, मानसिक, इन्द्रियजन्य र बौद्धिक क्षमताको लेखाजोखा (Functional Assessment) गर्ने । (८.२)

९.४ प्रारम्भिक बाल शिक्षादेखि उच्च तहको शिक्षासम्म अपाङ्गताको आवश्यकतानुसार पहुँचयुक्त ढाँचा (Accessible Format) मा बहु पाठ्य सामग्रीको व्यवस्थासहित विषय छनोटको अवसर सुनिश्चित गर्ने । (८.३)

९.५ प्रारम्भिक बाल शिक्षादेखि उच्च शिक्षासम्म अपाङ्गताको आवश्यकतामा आधारित पहुँचयुक्त ढाँचा (Accessible Format) मा परीक्ष तथा मूल्याङ्कन प्रणाली समायोजन गर्ने । (८.३)

९.६ सबै सार्वजनिक, सामुदायिक तथा संस्थागत रूपमा सञ्चालित शैक्षिक संस्थाहरूलाई हिंसारहित र समावेशी संस्कृति (Inclusive Culture) को मूल्य मान्यताअनुकूल बनाउने । (८.४)

९.७ अपाङ्गता र वातावरणबीच हुने अन्तर्क्रिया स्वरूप व्यक्तिको सहभागितामा हुन गएको अवरोध न्यूनीकरण गर्न तथा पहुँचयुक्त वातावरण निर्माण र उपयुक्त सहायता सेवा प्रदान गरी शैक्षिक अवसरहरू सुनिश्चित गर्ने । (८.४)

९.८ श्रमबजारको माग र अपाङ्गताका विशिष्टताअनुसार विद्यालय तथा विश्वविद्यालयका प्राविधिक शिक्षामा भर्ना प्रक्रियालाई सहज बनाउने । (८.५)

९.९ पाठ्यक्रम र शैक्षिक सामग्रीहरू नवीनतम प्रविधिमा आधारित बनाई गुणस्तरीय शिक्षा सुनिश्चित गर्ने । (८.६)

९.१० अपाङ्गता भएका नागरिकहरूलाई आत्मनिर्भर बनाउन दिगो विकासका लागि हरित सीप (Green Skills) मा आधारित जीवनोपयोगी सीपमूलक शिक्षा र तालिमको अवसर सुनिश्चित गर्न पाठ्यक्रम, शिक्षक तयारी र संस्थागत संरचनाको पुनरावलोकन गर्ने । (८.७)

९.११. अपाङ्गतामैत्री शिक्षाण सिकाइ क्रियाकलाप गर्न नवीनतम सूचना प्रविधिमा आधारित दक्ष मानवस्रोतको विकास गर्ने । (८.८)

९.१२ अपाङ्गता भएका व्यक्तिहरूलाई विपद् व्यवस्थापनको पूर्वतयारी, उद्धार, राहत, पुनर्स्थापना र पुनर्निर्माणमा प्राथमिकता दिने । (८.९)

९.१३ राष्ट्रिय स्वयंसेवा परिचालन कार्यक्रममा सहभागिता तथा जीवनपर्यन्त निरन्तर शिक्षा सुनिश्चित गर्न नमुना साझेदारी प्रणाली विकास गर्ने । (८.१०)

९.१४ समावेशी शिक्षासम्बन्धी खोज, अध्ययन, अनुसन्धान तथा योजना तर्जुमाका लागि एकीकृत तथ्याङ्कीय सूचना व्यवस्थापन प्रणालीको विकास गर्ने । (८.११)

९.१५ विशेष शिक्षा परिषद्को अनुदानमा सञ्चालित विद्यालयहरूलाई सामुदायिक विद्यालय सरह व्यवस्थित गर्नका लागि एकै पद्धति र

प्रक्रिया अवलम्बन गर्ने । (८.११)

९.१६ अपाङ्गता भएका व्यक्ति तथा बालबालिकाका शिक्षका लागि नीति तथा कार्यक्रमहरू निर्माण गरी सम्बद्ध निकायमा सिफारिस गर्न अपाङ्गता भएका व्यक्तिका लागि एक समावेशी शिक्षा परिषद् गठन गर्ने । (८.१२)

९.१७ विभिन्न सरकारी तथा गैरसरकारी निकायद्वारा अपाङ्गताको क्षेत्रमा सञ्चालन हुने कार्यक्रमहरूमा समन्वय र सहजीकरण गर्न सङ्घीय संरचनाअनुरूप केन्द्रमा एक नीति समन्वय समिति र प्रदेश तथा स्थानीय तहमा उपयुक्त संरचनाको व्यवस्था गर्ने । (८.१३)

## १०. कार्यनीतिहरू

१०.१ औपचारिक शिक्षा, खुला तथा दूरशिक्षा र जीवनपर्यन्त निरन्तर शिक्षा प्रदान गर्न मौजुदा संरचनामा समावेशी सिद्धान्तका आधारमा समाहित गरिनेछ । (९.१)

१०.२ मौजुदा संरचनाका अतिरिक्त आवश्यकतानुसार वैकल्पिक ढाँचा (Alternative Mode) सहितको नयाँ संरचना निर्माण गरिनेछ । (९.१)

१०.३ बौद्धिक अपाङ्गता, अटिज्म, डाउन सिन्ड्रोम, श्रवणदृष्टिविहीन लगायतका विकासात्मक अपाङ्गता र बहु अपाङ्गता भएका बालबालिकाका लागि अध्ययन वर्ष र सिकाइका आधारमा खुला तहमा आधारित विद्यालयहरू सञ्चालनको व्यवस्था गरिनेछ । (९.१)

१०.४ अपाङ्गता भएका बालबालिकाहरूका लागि अपाङ्गताको अवस्था, भौगोलिक अवस्था तथा दूरी, गरिबीको अवस्था र प्रतिभाका आधारमा छात्रवृत्ति वितरण गरिनेछ । (९.२)

१०.५ अपाङ्गतासहितका सुविधाविहीन अनाथ, गरिब, पिछडिएका तथा बहिष्करणमा परी दोहोरो मार (Double Disadvantaged) को अवस्थामा रहेका बालबालिकाहरूका लागि प्राथमिकतामा राखी छात्रवृत्ति एवम् शैक्षिक सहुलियतका कार्यक्रमहरू सञ्चालन गरिनेछ । (९.२)

१०.६ अपाङ्गता भएका बालबालिकाहरूलाई स्थानीय निकायमार्फत छात्रवृत्ति वितरण गरिनेछ सोका लागि स्थानीय निकायहरूमा निश्चित अनुपातमा बजेट विनियोजन गर्ने व्यवस्था गरिनेछ ।

(९.२)

१०.७ अपाङ्गता भएका नागरिकहरूको शारीरिक, मानसिक, इन्द्रियजन्य र बौद्धिक क्षमताको लेखाजोखा अपाङ्गता भएका व्यक्तिको परिचयपत्र वितरणसम्बन्धी निर्देशिका २०६५ बमोजिम गठित परिचयपत्र सिफारिस समितिको सिफारिसमा जिल्लास्थित महिला तथा बालबालिका कार्यालयले प्रदान गरेको परिचयपत्रको आधारमा गरिनेछ । (९.३)

१०.८ अपाङ्गता भएका नागरिकरुको कार्यगत तथा बौद्धिक क्षमता लेखाजोखा (Cognitive Assessment) गर्ने कार्यसमेतका लागि सम्बन्धित जिल्लामा रहेका लेखाजोखा केन्द्रहरूको सुदृढीकरण एवम् पुनःसंरचना गरिनेछ । (९.३)

१०.९ अपाङ्गता भएका नागरिकहरूका लागि अपाङ्गताले पार्ने प्रभावका आधारमा विषय र भाषा छनोटको अवसर प्रदान गरिनेछ । (९.४)

१०.१० श्रवण दृष्टिविहीनका लागि स्पर्श सञ्चार माध्यमका पाठ्यसामग्री, बहिराका लागि साङ्केतिक भाषा, बौद्धिक अपाङ्गता, डाउन सिन्ड्रोम र अटिज्म भएका व्यक्तिका लागि चित्रात्मक (Visual Support) र सरल पाठ्य सामग्री, दृष्टिविहीनका लागि ब्रेललिपि तथा श्रव्य पुस्तकहरू, सुस्त श्रवणका लागि नोट टेकर र न्यून दृष्टियुक्तका लागि ठूलो छापासहित डिजिटल सामग्रीको विकास गरिनेछ । (९.४)

१०.११ अपाङ्गताको विशिष्ट आवश्यकताका आधारमा वैयक्तिक सिकाइ योजना तथा शिक्षाण विधिहरू अपनाइने छ । (९.४)

१०.१२ अपाङ्गता अनुकूल हुने गरी वैकल्पिक मूल्याङ्कनका विविध विधिहरू अपनाइने छ । (९.५)

१०.१३ परीक्षा तथा मूल्याङ्कन पद्धतिका अधिकतम रूपमा सूचना प्रविधिको उपयोग गरिनेछ । (९.५)

१०.१४ शैक्षिक संस्थाहरूलाई हिंसारहित वातावरण र समावेशी संस्कृति (Inclusive Culture) को मूल्य र मान्यताबारे अभिमुखीकरण गरिनेछ । (९.६)

१०.१५ समावेशी शिक्षासँग सम्बन्धित आधारभूत मानकहरू (Inclusive Education Minimum Enabling Conditions) निर्धारण गरिनेछ । (९.६)

१०.१६ समावेशी शिक्षका लागि विद्यार्थी तयारी, परिवार तयारी, शिक्षक तयारी, विद्यालय तयारी एवम् समग्र शिक्षा प्रशासनको तयारीका लागि अभिमुखीकरण, प्रवोधीकरण र आवश्यक निर्देशिकाहरू निर्माण गरिनेछ । (९.६)

१०.१७ अपाङ्गता भएका नागरिकका लागि शैक्षिक संस्थाभित्र रहने भौतिक संरचनाहरू (भवन, कक्ष कोठा, पुस्तकालय, खाजा घर,शौचालय, प्रयोगशाला, खेल मैदान) अपाङ्गतामैत्री एवम् अवरोधमुक्त बनाइनेछ । (९.७)

१०.१८ शिक्षाण संस्थाहरूमा सञ्चालन गरिने खेलकुद तथा मनोरञ्जनका क्रियाकलापहरूमा अपाङ्गताका प्रकृतिअनुसारको पहुँच सुनिश्चित गरिनेछ । (९.७)

१०.१९ अपाङ्गता भएका व्यक्तिहरूलाई शैक्षिक क्रियाकलापहरूमा सहभागी हुन आवश्यक पर्ने पथ प्रदर्शक, वाचक, साङ्केतिक भाषा दोभाषे, नोट टेकर, क्याप्सनर (लिपी सङ्केतक) लगायतका वैयक्तिक सहयोग, सहायक प्रशिक्षक, सामग्री र उपकरण निःशुल्क उपलब्ध गराइनेछ । (९.७)

१०.२० अपाङ्गता भएका नागरिकका लागि प्राविधिक शिक्षामा सहज पहुँच सुनिश्चित गर्न प्राविधिक विषयका विद्यालयहरू, विश्वविद्यालयहरू र शिक्षालयहरूको क्षमता अभिवृद्धि र श्रमबजारमुखी सीप विकाससम्बन्धी कार्यक्रमहरू निर्माण गरिनेछ । (९.८)

१०.२१ मापदण्डमा आधारित गुणस्तर सुधार र न्यूनतम सिकाइको वातावरण निर्माण गरी सिकाइ सामग्रीहरूको चयन नवीनतम प्रविधिमा आधारित बनाइनेछ । (९.९)

१०.२२ हरित सीप (Green Skills) र कुशल सीप (Soft Skills) मा आधारित गुणस्तरीय शिक्षा सुनिश्चित गर्न शैक्षिक अवसरहरूको विविधीकरण गरिनेछ । (९.१०)

१०.२३ सूचना तथा सञ्चार प्रविधिलाई समावेशी शिक्षको अभिन्न अङ्ग बनाई अपाङ्गताअनुकूल प्रभावकारी शिक्षाण सिकाइ क्रियाकलाप सञ्चालन गरिनेछ । (९.११)

१०.२४ अपाङ्गता भएका नागरिकका लागि शिक्षाण गर्ने सबै प्रकारका शिक्षक तथा प्रशिक्षकलाई समावेशी शिक्षासम्बन्धी स्तरयुक्त तालिम निरन्तर प्रदान गर्ने र सहयोगी कर्मचारी तथा आयका लागि अभिमुखीकरण गरिनेछ । (९.११)

१०.२५ अपाङ्गताको प्रकृतिअनुरूप सिकाइ दक्षता अभिवृद्धि गर्न आवश्यक मानव संसाधन विकासका कार्यक्रमहरू सञ्चालन गरिनेछ । (९.११)

१०.२६ साङ्केतिक भाषा, स्पर्श सञ्चार र अन्य अपाङ्गताअनुकूल सञ्चारका वैकल्पिक सञ्चारका माध्यमहरूको विकास र स्तरीयकरण गरिनेछ । ९.११)

१०.२७ अपाङ्गता भएका नागरिकहरूअनुकूल जीवन पर्यन्त निरन्तर शिक्षा सुनिश्चित गर्न मौजुदा शैक्षिक ढाँचाको पुनरावलोकन तथा नयाँ संरचनाको विकाससहित घुम्ती शिक्षा प्रणालीको व्यवस्था गरिनेछ । (९.११)

१०.२८ विशेष शिक्षा परिषद्को अनुदानमा सञ्चालित विद्यालयहरूलाई सामुदायिक विद्यालय सरह व्यवस्थित गरी सोमा कार्यरत शिक्षक तथा कर्मचारीहरूको सेवा सुविधा र सर्तमा समसामयिक सुधार गरिनेछ । (९.१२)

१०.२९ शैक्षिक संस्था एवम् छात्रवासहरूलाई भूकम्प प्रतिरोधी बनाई अन्य प्रकोपसमेतको जोखिम न्यूनीकरण गर्न अपाङ्गता भएका बालबालिका र सम्बन्धित शैक्षिक संस्थालाई सुरक्षा तयारीका सीप प्रदान गरिनेछ । (९.१२)

१०.३० सम्भावित प्रकोपको क्षति न्यूनीकरणका लागि आवश्यक उपाय अवलम्बन गर्न तथा प्रकोपको समयमा सुरक्षित उद्दार र राहत उपलब्ध गराउन सम्बन्धित अभिभावक र स्वयंसेवकहरूलाई प्राथमिकतासहित क्षमता अभिवृद्धि गराइनेछ । (९.१२)

१०.३१ विपद्पश्चात् अपाङ्गता भएका व्यक्तिहरूलाई सामान्य जीवनमा पुनस्थापित गर्न परामर्श सेवा, मनोसामाजिक सल्लाह लगायतका उपायहरू अवलम्बन गरिनेछ । (९.१२)

१०.३२ विपद्पश्चात् गरिने पुनस्थापना र पुननिर्माणको चणमा बन्ने अस्थायी र स्थायी भौतिक संरचनाहरू अपाङ्गतामैत्री बनाइने छ । (९.१२)

१०.३३ सार्वजनिक क्षेत्र, निजी क्षेत्र, रोजगार प्रदायक संस्था, गैरसरकारी क्षेत्र, स्थानीय निकाय र विकास साझेदारहरूसँगको सहकार्यबाट प्राविधिक शिक्षा तथा सीपका अवसरहरू विस्तार गरिनेछ । (९.१३)

१०.३४ नमुना साझेदारीको अवधारणा विकास गर्न संस्थागत

सामाजिक उत्तरदायित्व (Corporate Social Responsiblity) लाई संस्थागत गरिनेछ । (९.१३)

१०.३५ अपाङ्गता भएका नागरिकहरूलाई उनीहरूको सीपमा आधारित राष्ट्रिय स्वयंसेवा परिचालन कार्यक्रममा सहभागिताका अवसरहरू विस्तार गरिनेछ । (९.१३)

१०.३६ अपाङ्गता भएका नगारिकहरूको अधिकारलाई वास्तविक जीवनमा रूपान्तरण गर्न (Make the Right, Real and Functional) अपाङ्गताअनुकूल जीवनपर्यन्त निरन्तर शिक्षा सुनिश्चित हुने गरी तदनुकूलको सिकाइ तथा शैक्षिक ढाँचा र संरचनाको विकास गरिनेछ । (९.१३)

१०.३७ समावेशी शिक्षका सन्दर्भमा समय सापेक्ष अनुसन्धान गर्नका लागि शिक्षा मन्त्रालय र अन्तर्गतका केन्द्रीय निकायहरू र जिल्ला शिक्षा कार्यालयहरूमा समावेशी अनुसन्धान एकाइ स्थापना गरी ती एकाइहरूलाई तथ्याङ्क तथा सूचनाको उपयोग गरी अनुसन्धनात्मक, जनचेतनामूलक एवम् प्रवर्द्धनात्मक कार्य गर्न जिम्मेवार बनाइने छ । (९.१४)

१०.३८ विशेष शिक्षा परिषद्को अनुदानबाट सञ्चालित विद्यालयहरूमा कार्यरत शिक्षक तथा कर्मचारीहरूलाई सामुदायिक विद्यालयको नियमित दरबन्दीमा रूपान्तरण गरिनेछ । (९.१५)

१०.३९ अपाङ्गता भएका नागरिकका लागि शिक्षण गर्ने शिक्षकहरू र हेरचाह गर्ने आय तथा सहयोगीहरूका लागि सामुदायिक विद्यालयका शिक्षक तथा कर्मचारीसरहको पारिश्रमिकलगायतका सेवा सुविधा उपलब्ध गराइनेछ । (९.१५)

१०.४० विशेष शिक्षा नीति, २०५३ बमोजिम गठित विशेष शिक्षा परिषद्लाई पुनसंरचना गरी शिक्षामन्त्रीको अध्यक्षतामा विषयगत मन्त्रालयहरू तथा अन्य सम्बद्ध निकायहरूको समेत प्रतिधित्व हुने गरी समावेशी शिक्षा परिषद् गठन गरिनेछ । (९.१६)

१०.४१ समावेशी शिक्षा परिषद्ले अपाङ्गता भएका नागरिकका लागि विभिन्न निकायहरूबाट सञ्चालित कार्यक्रमहरूलाई समन्वयात्मक एवम् एकद्वार प्रणालीअन्तर्गत सञ्चालन गर्ने व्यवस्था मिलाइने छ । (९.१७)

१०.४२ यो नीति, रणनीति र कार्यनीतिको समन्वय, नियमन, कार्यान्वयन, अनुगमन तथा मूल्याङ्कनका लागि सम्बन्धित

सरकारी निकाय र अपाङ्गता भएका व्यक्ति र निजका अभिभावकद्वारा सञ्चालित संस्थाहरू, गैरसरकारी संस्थाहरूका प्रतिनिधि, अपाङ्गताको शिक्षा एवम् तालिमसँग सम्बन्धित व्यक्ति, विज्ञ र निकायहरूसमेत रहने गरी केन्द्रीय तहमा नीति समन्वय समिति तथा कार्यक्रम समन्वय समिति र सोको समग्र कार्यान्वयनका लागि स्थानीय तथा जिल्ला तहमा कार्यक्रम कार्यान्वयन समिति गठन गरिनेछ । (९.१७)

## ११. संस्थागत संरचना

हाल कायम रहेको विशेष शिक्षा परिषद्लाई पुनःसंरचना गरी शिक्षामन्त्रीको अध्यक्षतामा विषयगत मन्त्रालयहरू तथा अन्य सम्बद्ध निकायहरूको समेतको प्रनिनिधित्व हुने गरी अपाङ्गता भएका व्यक्तिका लागि समावेशी शिक्षा परिषद् गठन गरिनेछ ।

यी नीति, रणनीति र कार्यनीतिको कार्यान्वयनका लागि समन्वय तथा अनुगमन र मूल्याङ्कन गर्नका लागि शिक्षा मन्त्रालय, योजना महाशाखाका प्रमुखको संयोजकत्वमा एक नीति समन्वय समिति, शिक्षा विभागका महानिर्देशकको संयोजकत्वमा एक कार्यक्रम समन्वय समिति र सोको समग्र कार्यान्वयनका लागि प्रादेशिक एवम् स्थानीय तहमा कार्यक्रम कार्यान्वयन समिति गठन हुने गरी संस्थागत संरचना निर्माण गरिनेछ । उल्लिखित समितिमा सम्बन्धित सरकारी निकाय, अपाङ्गता भएका बालबालिकाको शिक्षका लागि काम गर्ने अपाङ्गता भएका व्यक्तिले स्थापना गरेका गैरसरकारी संस्थाहरू एवम् सम्बन्धित विज्ञ तथा विशेषज्ञहरू रहने छन् । शिक्षा मन्त्रालय र अन्तर्गत रहेका विभागस्तरीय निकायहरू, स्थानीय तहका निकाय र स्वायत्त निकायहरूमा अपाङ्गता र समावेशी शिक्षा हेर्नका लागि एकाइको व्यवस्था वा सम्पर्क बिन्दु (Focal Point) तोक्ने व्यवस्था गरिनेछ । अपाङ्गता भएका व्यक्तिका लागि समावेशी शिक्षा नीति, २०७३ बमोजिमको संरचनागत व्यवस्था सम्बद्ध कानूनमा संशोधन गरी व्यवस्थित गरिनेछ । यो नीति कार्यान्वयन तालिका अनुसूची १ मा राखिएको छ ।

## १२. आर्थिक पक्ष

सरकारी स्रोत, स्थानीय निकायको स्रोत, वैदेशिक सहयोग तथा ऋण एवम् राष्ट्रिय तथा अन्तर्राष्ट्रिय गैरसरकारी संस्थाहरू तथा निजी क्षेत्रसमेतको लगानी र सहयोग समग्रमा यस नीति कार्यान्वयनका आर्थिक स्रोत हुनेछन् । हाल सञ्चालित कार्यक्रमहरूलाई प्रभावकारी रूपमा कार्यान्वयन गर्नका लागि

थप व्ययभार नपर्ने तर यस नीतिका आधारमा बन्ने योजना कार्यान्वयनका लागि स्थानीय तह र विकास साझेदारहरूसँग समन्वय र सहकार्यमा लगानी वृद्धि गर्न जोड दिइनेछ ।

## १३. कानूनी व्यवस्था

यस नीतिको कार्यान्वयनका लागि सम्बन्धित ऐन र नियमहरू पुनरावलोकन गरी समसामयिक सुधार र परिमार्जन गरिनेछ । नेपालको संविधानअनुसार अपाङ्गता भएका व्यक्तिका लागि समावेशी शिक्षा नीति कार्यान्वयन गर्न आवश्यक निर्देशिका र कार्यविधिहरू जारी गरिनेछ ।

## १४. अनुगमन र मूल्याङ्कन

१४.१ यस नीतिअनुरूप सञ्चालन गरिने कार्यक्रमहरूको प्रत्येक तहमा नियमित रूपले अनुगमन र मूल्याङ्कनका लागि सरोकारवाला सङ्घ/संस्थाहरूको समेत सहभागिता रहने गरी चुस्त र प्रभावकारी संयन्त्र बनाई नतिजामा आधारित अनुगमन तथा मूल्याङ्कन ढाँचा कार्यान्वयनमा ल्याइनेछ ।

१४.२ शैक्षिक व्यवस्थापन सूचना प्रणालीलाई अनुगमन र मूल्याङ्कन कार्यसँग आबद्ध गरिनेछ ।

## १५. सम्भावित जोखिम र समाधानका उपाय

अपाङ्गता भएका बालबालिकाहरूका लागि समावेशी शिक्षा नीति, २०७३ कार्यान्वयनका क्रममा आउन सक्ने सम्भावित जोखिमहरू न्यूनीकरणका लागि देहायका कार्यहरू गरिनेछन् :

| क्र. सं. | जोखिम | सम्बोधन गर्ने उपाय | जिम्मेवार निकाय |
|---|---|---|---|
| १ | प्रदेश र स्थानीय सरकारबाट लगानीको प्रतिबद्धता र जिम्मेवारी बोध | बजेटको प्राथमिकीकरण गरी केन्द्रीय सरकारबाट समन्वय गर्ने | सङ्घीय र प्रदेश स्तरका विषयगत मन्त्रालय तथा निकायहरू |

| | | | |
|---|---|---|---|
| २. | अपाङ्गताको प्रकारअनुसार बालबालिकाको शिक्षासम्बन्धी विस्तृत रूपमा पृथक तथ्याङ्कको उपलब्धता | शैक्षिक व्यवस्थापन सूचना प्रणालीको सुदृढीकरण मार्फत एकीकृत सूचना प्रणाली निर्माण गरेर | केन्द्रीय तथ्याङ्क विभाग, विश्वविद्यालय अनुदान आयोग वा उच्च शिक्षा आयोग, शिक्षा मन्त्रालय र शिक्षा विभाग र स्थानीय तहका विषयगत निकायहरू |

## १६. **खारेजी**

विशेष शिक्षा नीति, २०५३ खारेज गरिएको छ ।

अनुसूची १

नीति कार्यान्वयन तालिका

| क्र. सं. | कार्यहरू | जिम्मेवार निकाय | सहयोगी निकाय | सूचक |
|---|---|---|---|---|
| १ | अपाङ्गता भएका हरेक बालबालिकाका लागि सबै तहमा क्षमता र योग्यताका आधारमा निःशुल्क शिक्षाको व्यवस्था गर्ने | शिक्षा मन्त्रालय | स्थानीय तहका निकायहरू, विषयगत मन्त्रालयहरू, शिक्षाण संस्थाहरू | निःशुल्क शिक्षा पाउने विद्यार्थी सङ्ख्या |
| २ | विद्यार्थीहरू भर्नामा वैज्ञानिक प्रणालीमा आधारित वस्तुगत परीक्षण (Functional Assessment) को व्यवस्था गर्ने | प्रादेशिक र स्थानीय तहका निकायहरू | शिक्षा मन्त्रालय र स्वास्थ्य मन्त्रालय | परीक्षण गरिएका विद्यार्थी सङ्ख्या |
| ३ | पाठ्यक्रम, पाठ्यपुस्तक, सिकाइ सामग्री, सन्दर्भ सामग्रीहरू र परीक्षा तथा मूल्याङ्कन प्रणालीमा अपाङ्गता अनुकूल समायोजन गर्ने | राष्ट्रिय परीक्ष बोर्ड र पाठ्यक्रम विकास केन्द्र | प्रदेश तथा स्थानीय तहका पाठ्यक्रम तथा मूल्याङ्कनसँग सम्बद्ध समितिहरू | समायोजित पाठ्यक्रम र मूल्याङ्कन विधि |

| | | | | |
|---|---|---|---|---|
| ४ | शिक्षाण संस्थाको भौतिक पूर्वाधार एवम् वातावरण अपाङ्गतामैत्री, छात्रामैत्री, बालमैत्री र हिंसारहित बनाउने | शिक्षा विभाग र केन्द्रीय कार्यक्रम कार्यान्वयन एकाइ (CLPICU) | प्रदेश र स्थानीय तहका विषयगत निकायहरू र कार्यक्रम कार्यान्वयन एकाइहरू | शैक्षिक संस्थाहरूको सङ्ख्या |
| ५ | राष्ट्रिय तथा अन्तर्राष्ट्रिय परिवेशअनुरूप दक्ष एवम् प्रतिस्पर्धी नागरिक तयार गर्न अपाङ्गतामैत्री अनुकूल पाठ्यक्रम, पाठ्यसामग्री विकास गर्ने | पाठ्यक्रम विकास केन्द्र | राष्ट्रिय परीक्ष बोर्ड र प्रदेश तथा स्थानीय तहहरू | पाठ्यक्रमतथा पाठ्यसामग्री |
| ६ | अपाङ्गता भएका नागरिकहरूलाई प्राविधिक कार्यहरू | शिक्षा मन्त्रालय, जिम्मेवार निकाय | प्राविधिक शिक्षा तथा व्यावसायिक सहयोगी निकाय | प्राविधिक शिक्षा तथा सूचक |
| | शिक्षामा पहुँच सुनिश्चित गर्ने | | तालिम परिषद् र तालिम प्रदायक संस्थाहरू तथा निजी क्षेत्रहरू | व्यावसायिक तालिम प्राप्त सङ्ख्या |
| ७ | अपाङ्गताअनुकूल हरित सीप (Green Skills) मा आधारित जीवनोपयोगी, जीवनपर्यन्त तथा सीपमूलक शिक्षा उपलब्ध गराउने | शिक्षा मन्त्रालय | अनौपचारिकशिक्षा केन्द्र प्राविधिक शिक्षा तथा व्यावसायिक तालिम परिषद् र तालिम प्रदायक संस्थाहरू तथा निजी क्षेत्रहरू | लाभान्वित सङ्ख्या |
| ८ | सूचना प्रविधिमा आधारित अपाङ्गमैत्री शिक्षण सिकाइको व्यवस्था गर्ने | शिक्षा विभाग | प्रदेश तथा स्थानीय तहहरू, शैक्षिक संस्थाहरू र सम्बद्ध संस्थाहरू | विद्यालय सङ्ख्या |

| | | | | |
|---|---|---|---|---|
| ९ | विपद् जोखिमबाट अपाङ्गता भएका व्यक्तिहरूको सुरक्षाको लागि आवश्यक व्यवस्था गर्ने | प्रदेश तथा स्थानीय तहहरू | गृह मन्त्रालय, शिक्षा मन्त्रालय र विषयगत मन्त्रालयहरू, शैक्षिक संस्थाहरू, अन्य सङ्घ संस्थाहरू | सुरक्षित शैक्षिक संस्था |
| १० | अपाङ्गता भएका नागरिकहरूलाई वास्तविक जीवनमा रूपान्तरण (Make the Right Real and Functional) गर्न अपाङ्गताअनुकूलको शिक्षा सुनिश्चित गर्ने | शिक्षा मन्त्रालय | विषयगत मन्त्रालयहरू, प्रदेश तथा स्थानीय तहहरू, शैक्षिक संस्थाहरू र सम्बद्ध संस्थाहरू | लाभान्वित सङ्ख्या |
| ११ | अपाङ्गसम्बन्धी तथ्याङ्कीय कार्यहरू | शिक्षा विभाग, जिम्मेवार निकाय | विषयगत सहयोग निकाय | तथ्याङ्कीय सूचक |
| | सूचनाको आधार (Database) तयार गर्ने | | मन्त्रालयहरू, प्रदेश तथा स्थानीय तहहरू, शैक्षिक संस्थाहरू र सम्बद्ध संस्थाहरू | सूचनाको आधार (Database) स्थापना |
| १२ | अपाङ्गतासम्बन्धी कार्यक्रम कार्यान्वयनका लागि समन्वय तथा सहजीकरण गर्न संरचनागत व्यवस्था गर्ने | शिक्षा मन्त्रालय | विषयगत मन्त्रालयहरू, शिक्षा विभाग र प्रदेश तथा स्थानीय तहहरू | गठित परिषद् तथा समितिहरू |

# मौरी प्रवर्द्धन नीति–२०७३

१. **पृष्ठभूमि**

आदिमकालदेखि नेपालमा स्थानीय एपिस फ्लोरिया, एपिस डोर्साटा, एपिस लेबोरियोसा, एपिस सेराना जातका मह उत्पादक मौरीहरूको बासस्थान रही आएको छ । मौरी प्रकृतिको अनुपम वरदान हो । यसले प्रकृति दोहन गरी सुपाच्य खाद्यवस्तुको रूपमा मौरीजन्य वस्तु उत्पादन गर्दछ । मौरीबाट मानिसहरूले मह, कटु, शाहीखुराक, प्रपोलिस, मौरी विष प्राप्त गर्न सकिन्छ । मौरी सुसभ्य सामाजिक जीवनशैलीको एक अनुकरणीय प्रतिक बनेको छ । मौरीले परागसेचन सेवाबाट खेतीबालीको उत्पादकत्व र जैविक विविधताको संवर्द्धनमा पनि अहम् भूमिका निभाउँछ । केही दशकयता विदेशबाट ल्याइएको यूरोपेली मौरी एपिस मेलिफेराको व्यावसायिक पालन गरिँदै आएको छ । यहाँ जैविक विविधताको सुनिश्चितताको लागि तथा परासेचित बालीहरूमा उत्पादकत्व वृद्धि गराउन मौरीको योगदान अपरिहार्य रहेता पनि परागसेचनको लागि अति महत्त्वपूर्ण मानिएका स्थानीय जङ्गली मौरीहरूको घट्दो सङ्ख्या र घरपाला एपिस सेरानाको र एपिस मेलिफेराको कमजोर गोला व्यवस्थापनका कारण दिनानुदिन पर्यावरणीय सेवा (परागसेचन) र मह उत्पादन दुवैमा नकारात्मक प्रभाव पर्न थालेको छ । यसको लागि नीतिगत व्यवस्था गरी मह उत्पादनमा वृद्धि र पर्यावयरणीय सेवामा अभिवृद्धि गर्न मौरीको विकास तथा प्रवर्द्धन गर्नु आजको आवश्यकता रहिआएको छ । यसैअनुरूप मौरीपालन व्यवसायलाई दिशानिर्देश गर्न राष्ट्रिय कृषि नीति २०६१, कृषि व्यवसाय प्रवर्द्धन नीति २०६८, कृषि जैविक विविधता नीति २०७० र कृषि विकास रणनीति २०७२ लाई समेत आधार बनाई मौरी प्रवर्द्धन नीति २०७३ लागू गरिएको छ ।

२. **विगतका प्रयासहरू**

संस्थागत विकास क्रमलाई हेर्दा नेपालमा आर्थिक वर्ष २०२२/०२३ देखि कृषि विभागबाट सामान्य सेवा टेवा प्रदान गर्दै वि.सं. २०२९ सालबाट आयोजना स्तरमा मौरीपालनको आधुनिकीकरण प्रारम्भ भएको हो । क्रमशः प्रत्येक वर्षको वार्षिक कार्यक्रम र बजेटमा मौरीपालन कार्यक्रमको विस्तार गरिँदै आएको छ । नेपालमा सर्वप्रथम वि.सं. २०४० मा मौरीपालन विकास शाखा, गोदावरीको विधिवत स्थापना भयो । सो कार्यक्रमलाई थप विस्तार गर्न नेदरल्याण्ड सरकारको सहयोगमा वि.सं. २०४४ देखि २०५० सम्म

मौरीपालन तालिम तथा प्रसार सेवा आयोजना लागू भई मौरीसम्बन्धी चेतना अभिवृद्धि गरेको हो । मौरीसम्बन्धी कार्यक्रमहरू मौरीपालन विकास शाखा गोदावरी, मौरीपालन विकास कार्यालय, भण्डारा चितवन (तत्कालीन मौरीपालन केन्द्र गोकर्ण) र ७५ वटा जिल्ला कृषि विकास कार्यालयबाट मौरीपालन सेवा विस्तार भइरहेको छ ।

## ३. वर्तमान स्थिति

नेपालमा व्यावसायिक रूपमा बजारमुखी तवरबाट मौरीपालनको व्यापकता नभए पनि सुरुवात भने भएको छ । केही वर्षयता आधुनिक मौरीपालन प्रविधि भित्रिए पनि ग्रामीण स्तरमा अझै त्यस्तो प्रविधिको विस्तार गर्न बाकी छ । सरकारी निकायहरूले मौरी व्यवसाय प्रवर्द्धनको लागि आर्थिक वर्ष २०७०/०७१ देखि युवा लक्षित मौरीपालन कार्यक्रम सञ्चालन गर्दै आएका छन् । व्यावसायिक कीट विकास निर्देशनालयको पछिल्लो आकलन (२०७१/०७२) अनुसार नेपालमा २१३२०० मौरीगोला रहेको र यीमध्ये करिब ३५००० एपिस मेलिफोरा र १७७२०० एपिस सेराना रहेको अनुमान छ । यसबाट नेपालमा हाल वर्षेनी २०५० मे.ट. मह उत्पादन भई आयात प्रतिस्पधापन भई निर्यातको सम्भावना रहेको स्थिति छ । (व्यावसायिक कीट विकास निर्देशनालय, २०७१/०७२) स्पष्ट नीति र पर्याप्त आर्थिक, प्राविधिक एवं नैतिक समर्थनसहितको उच्च प्राथमिकता प्राप्त भएमा विद्यमान प्राकृतिक भौगोलिक र वानस्पतिक विविधताहरूको सदुपयोग गरेर नेपालमा (सेराना ५ लाख र मेलिफेरा ५ लाख) दश लाखसम्म मौरीगोला पाल्न र (सेराना ५ लाख, १० के.जी.का दरले ५ हजार मे.टन र मेलिफेरा ५ लाख, ४० के.जी. का दरले २० हजार मे.टन) २५ हजार मे.टनसम्म मह उत्पादन गर्न सकिने सम्भावना रहेको छ । चरन क्षेत्रका विकास र विस्तार एवं सुदृढीकरण गरेमा थप मौरीगोला विस्तार गरी सोही अनुसार मह उत्पादनमा वृद्धि गर्न सकिन्छ ।

## ४. समस्या र चुनौती

नेपालका मह र मैनलगायत अन्य मौरीजन्य उपजहरू उत्पादन र उत्पादकत्वको प्रशस्त सम्भावना भएर पनि अपेक्षित रूपमा यसको प्रवर्द्धन गर्न सकिएको छैन । महको आन्तरिक आवश्यकतालाई पुरा गरी गुणस्तरीय मह निर्यात गर्नु चुनौतीको रूपमा देखिएको छ । नेपालले महको निर्यात व्यापार विस्तार गर्न विश्व व्यापार सङ्गठन (WTO) लगायत युरोपियन युनियनका सम्बद्ध राष्ट्रहरूको महसम्बन्धी गुणस्तर मापदण्ड र विषादी तथा

अवशेष अनुगमन योजना र राष्ट्रिय नीति तथा आचारसंहिताको स्पष्ट एवं किटानी व्यवस्था गरी महको गुणस्तर कायम गर्न तथा मौरीजन्य उपजहरूको बजारको सवलीकरण गर्न आवश्यक छ । मौरी चरनमा कमी, वन क्षेत्रसँग संस्थागत साझेदारी प्रयास नहुनुले चरन क्षेत्रको विकास र विस्तार नहुनुका साथै यातायातको कठिनाइका कारण भैरहेको प्राकृतिक चरनको पनि पूर्ण उपयोग हुन सकेको छैन ।

## ५. नयाँ नीतिको आवश्यकता

कृषि व्यवसायसम्बन्धी विभिन्न मितिमा जारी भएका विभिन्न ऐन नियम तथा नीतिहरूले मौरीपालन प्रवर्द्धन र त्यसको आर्थिक पक्षलाई सामान्य रूपमा सम्बोधन गरे तापनि स्पष्ट नीतिको अभावमा अपेक्षित रूपमा उपलब्धि हासिल गर्न सकिएको छैन । नेपालको मौरीपालनलाई प्रतिस्पर्धात्मक व्यवसायको रूपमा रूपान्तरण गरी अतिरिक्त आयआर्जनको माध्यम बनाएर गरिबी न्यूनीकरणमा टेवा पुर्‍याउने तथा व्यावसायिक मौरीपालन र स्थानीय प्रजातिका मौरीहरूको संरक्षण गरी पर्यावरणीय सेवा (परागसेचन) प्रवर्द्धन गरी जैविक विविधता संवर्द्धन गर्ने परिदृश्यको परिकल्पना गरिएको छ ।

## ६. लक्ष्य

नेपालमा मौरीपालनलाई एउटा प्रतिस्पर्धात्मक र व्यावसायको रूपमा विकास गर्दै रोजगारीको अवसर सृजना गरी, महको आयात प्रतिस्थापन र निर्यात प्रवर्द्धन गर्ने यस नीतिको लक्ष्य रहेको छ ।

## ७. उद्देश्यहरू

७.१ मौरी चरनको सुधार, सुदृढीकरण र सुमचित प्रयोग, गोला व्यवस्थापन, आवश्यक पुँजी, पूर्वाधार, प्राविधिक ज्ञान र सीपमा सबै मौरीपालकहरूको पहुँचमा अभिवृद्धि गर्ने साथै उपजहरूको विविधीकरण गर्ने ।

७.२ मौरीजन्य उपजहरूको उत्पादन/उत्पादकत्व बढाउने, लागत घटाउने, गुणस्तर सुधार गर्ने, मौरीजन्य उपजहरूको राष्ट्रिय र अन्तर्राष्ट्रिय बजार प्रवर्द्धन गर्ने तथा व्यापार सन्तुलन गर्ने ।

७.३ रैथाने र स्थानीय मौरीहरूको संरक्षण संवर्द्धन गर्ने र मौरी गोलाहरूको सङ्ख्यात्मक वृद्धि गरी परागसेचन सेवाको अभिवृद्धि गर्ने ।

७.४ मौरी पालन पेशामा परम्परागत महशिकारी, आर्थिक तथा

सामाजिक रूपले पिछडिएका वर्गहरूलाई मूलप्रवाहीकरण गरी गरिबी न्यूनीकरणमा सहयोग पुऱ्याउने ।

## ८. मौरी प्रवर्द्धन नीतिहरू

उल्लेखित उद्देश्यहरू सम्बोधन गर्न देहायबमोजिम मौरी प्रवर्द्धन नीति र कार्यनीति निर्माण गरिएको छः

### उद्देश्य ७.१ सँग सम्बन्धित नीति र कार्यनीति

८.१ प्रजातिगत व्यवस्थापन

८.१.१ एपिस मेलिफेरा प्रजातीय छनोट गर्दै तराई, भित्री मधेस तथा सम्भाव्य पहाडी क्षेत्रमा र एपिस सेराना, सेरेनाको संरक्षण र प्रजातीय सुधार गरी उच्च पहाडी तथा पर्वतीय क्षेत्रमा विस्तार गरिनेछ ।

८.१.२ चरनको उपलब्धता, यातायातको सुविधा तथा भारवहन क्षमता (Carrying capacity) का आधारमा एपिस मेलिफेरा वा एपिस सेरानालाई सबै ठाउँ (तराई, पहाड, उच्च क्षेत्र) का चरनमा पूर्ण सदुपयोग हुने गरी स्थानान्तरण गरी अधिकतम उत्पादन लिइनेछ ।

८.१.३ उच्च पर्वतीय क्षेत्रमा पाइने एपिस सेरेना सेरना उपजाति (Sub-species) को संवर्द्धन प्रवर्द्धन गर्न तिनीहरूको प्रजनन केन्द्र स्थापना गरी अन्य क्षेत्रहरूमा प्रसारण गरिनेछ ।

८.१.४ उच्च पहाडी क्षेत्रमा क्रमश एपिस लेवोरियोसा, तराई भित्री मधेसमा एपिस डोर्साटा र कछाड र भित्री मधेस क्षेत्रमा एपिस फ्लोरियोसा, जस्ता स्थानीय जङ्गली मौरीहरूको संरक्षण र संवर्द्धन गरी परसेचित बाली तथा वन्य वनस्पतिहरूको जैविक विविधता वृद्धि गर्ने ।

८.१.५ नेपालमा उत्पादन तथा विकास गर्न नसकिएका नयाँ प्रजातिका गोला, रानु तथा प्याकेज मौरीलगायत आयत गर्नु अघि प्राविधिक, आर्थिक तथा पारिस्थितिक प्रभाव र परिणामहरूको अध्ययन र विश्लेषण गरिनेछ ।

८.२ मौरी चरन सुदृढीकरण र व्यवस्थापन

८.२.१ मौरी चरन क्षेत्रको सर्भेक्षण गरी पात्रो बनाई त्यसको आधारमा चरन क्षेत्रको (कृषि तथा वन) भौगोलिक नक्सा तयार गर्ने तथा चरन क्षेत्र तोकिने छ ।

८.२.२ चरन क्षेत्रको भारवहन क्षमताका आधारमा चरन उपलब्ध गराउन आचरसंहिता लागू गरिनेछ ।

८.२.३ कृषि वन खेती, वन, वृक्षरोपण, पार्क र राष्ट्रिय प्राकृतिक संरक्षण क्षेत्रहरूमा गरिने वृक्षरोपण कार्यक्रहरूमा कम्तीमा २५ प्रतिशत मौरी चरन वनस्पती समावेश गर्ने व्यवस्था मिलाइनेछ ।

८.२.४ मौरी चरन मौरीपालनको आधार भएकोले सबै मौरीपालकहरूले आफ्नो सेरोफेरोमा उत्कृष्ट मौरी चरन हुने वनस्पति लगाउन प्रोत्साहन गरिनेछ ।

८.२.५ मौरी आकर्षण हुने बोट विरुवाहरूको फूल फुल्न लागेका तथा फुलिरहेको अवस्थामा छँटनी कटानी नगर्नको लागि सम्बद्ध सरकारी गैरसरकारी एवं स्थानीय सामुदायिक संस्थाहरूमा चेतना अभिवृद्धि गराइनेछ ।

८.२.६ कृषि क्षेत्रको बालीहरूको चरनमा मौरी चराउन रोकतोक गर्न नहुने बाली पूर्णरूपमा फूल फुलेको बेला विषादी प्रयो्गलाई निरुत्साहित गर्न जनचेतनामूलक कार्यक्रहरू सञ्चालन गरिनेछ । यस्तो बेलामा विषादीको प्रयोग गर्नुपर्ने भएमा प्राविधिकहरूको अनिवार्य रूपमा सिफारिस लिनु पर्ने व्यवस्था गरिनेछ ।

८.२.७ च्यूरी, मौवा लगायत मौरी मैत्री वनस्पति हुर्काउने व्यक्ति, संस्थालाई अनुदान दिने व्यवस्था गरिनेछ ।

८.२.८ भारवहन क्षमता र आचारसंहिताको आधारमा वन क्षेत्र (सामुदायिक वन, निजी वन र राष्ट्रिय निकुञ्ज) हरूमा सहज रूपमा मौरी चरिचरन गर्न गराउन पाउने व्यवस्था गरिनेछ ।

८.२.९ बन क्षेत्रसँग जोडिएका गा.वि.स.हरूमा बसोबास गर्दै आएका स्थानीय बासिन्दा, कृषि उद्यमी वा वन उपभोक्ताहरूद्वारा मौरीपालन गर्नमा सहयोग पुऱ्याई दिगो विकासको पहल गरिनेछ ।

८.३ मौरी स्थानान्तरण व्यवस्थापन

८.३.१ मौरी स्थानान्तरणलाई मौरीपालन विकास कार्यालय, जिल्ला कृषि विकास कार्यालय, स्थानीय मौरीपालक कृषक समूह र उद्यमीहरू र अन्य सरोकारवालाको संयुक्त समितिबाट चरन पात्रोको आधारमा संयोजन गराइनेछ ।

८.३.२ मौरीपालक सञ्जाल, सङ्घ, सहकारी तथा व्यावसायिक मौरीपालकहरूलाई नै नयाँ-नयाँ चरन स्थलको खोजी गर्न उत्प्रेरित गरी सम्भाव्य क्षेत्रमा नेपालको कुनै पनि क्षेत्रमा चराउन लान पाउने व्यवस्था गरिनेछ ।

८.३.३ पहाडी भेकको चिउरीलगायत प्रशस्त चरन भएका क्षेत्रमा स्थानान्तरण पहुँच विकास गर्न सम्बद्ध निकायहरूमा पहल गरिनेछ ।

८.३.४ स्थानान्तरणको क्रममा रहेका मौरीलाई एम्बुलेन्स जस्तै अत्यावश्यक सेवा सरह बिना रोकतोक लैजान सक्ने व्यवस्था गराइनेछ ।

## ८.४. मौरी रोगव्याधि व्यवस्थापन

८.४.१ रोग सङ्क्रमित मौरी तथा मौरीजन्य उपकरणहरूको आयात एवं आन्तरिक वसार पसार गर्न रोक लगाइनेछ ।

८.४.२ मौरीको गोलामा प्रतिबन्धित प्रतिजैविक, गन्धक र सूर्तीजन्य पदार्थ साथै अवशेष रहने जोखिम भएका रसायनको प्रयोग निषेध गरिनेछ ।

८.४.३ प्रमुख उत्पादन क्षेत्रका मौरीपालकहरूको सरल पहुँचभित्र मौरी रोग पहिचान, परीक्षण तथा निदान सुविधा विकास गरिनेछ ।

८.४.४ रोगको रोकथाम तथा नियन्त्रणमा प्रतिजैविकी न्यूनतम प्रयोग गराउने र प्रतिजैविक प्रयोग गरेको ६ हप्तासम्म मह काड्न नहुने सचेतना विकास गरिनेछ ।

८.४.५ मौरीका रोगव्याधि व्यवस्थापनमा प्रयोग हुने कम जोखिमी औषधीको आयातमा भन्सार महसुल छुट गरिनेछ ।

८.४.६ मह परीक्षण प्रयोगशालालाई अन्तर्राष्ट्रिय मापदण्डअनुसार प्रवर्द्धन र व्यवस्थापन गरिनेछ ।

## ८.५ मह शिकार व्यवस्थापन एवं बासस्थानको संरक्षण

८.५.१ मह शिकारीहरूलाई व्यवस्थित गरी एपी टुरीजमको विकास गर्दै अन्य प्राकृतिक मौरीहरूको वासस्थानको समेत संरक्षण गरिनेछ ।

८.५.२ ठूला ठूला पूर्वाधार विकासको क्रममा गरिने वातावरणीय प्रभाव मूल्याङ्कन अध्ययनमा मौरीको बासस्थान आश्रयस्थल र तिनको स्थानान्तर समेत सम्बोधन गर्नुपर्ने व्यवस्था गरिनेछ ।

८.५.३ मह शिकारी वर्गलाई महशिकारको परम्परागत विधिलाई सांस्कृतिक महत्त्वको रूपमा जगेर्ना गर्ने र सुरक्षित र व्यवस्थित तरिकाले मह काढ्ने विधि अपनाउन विशेष तवरले प्रशिक्षित र प्रोत्साहित गरिनेछ ।

८.५.४ जङ्गली मौरीहरूको संरक्षणका कार्यक्रहरू सरोकारवाला निकायहरूसँगको सहकार्यमा सञ्चालन गरिनेछ ।

८.६ मह उत्पादन तथा बजार व्यवस्थापन

८.६.१ मह उत्पादन, विकासमा असल मौरीपालन अभ्यास (Good Beekeeping Practices) अवलम्बन गर्न प्रोत्साहित गरिनेछ ।

८.६.२ प्रमुख उत्पादन क्षेत्रको सरल पहुँचभित्र सरकारी, सहकारी, निजी क्षेत्र र मह सङ्कलकहरूलाई कम से कम महको प्रारम्भिक भौतिक अवस्था र चिसान परीक्षण गर्ने सुविधा उपलब्ध गराउन सहयोग पुऱ्याइनेछ ।

८.६.३ मह उत्पादन, सङ्कलन, प्रशोधन, वसार पसार एवं भण्डारण गर्ने उद्यमीहरूले प्रत्येक चरणमा स्रोत सूचक विवरणहरू सुरक्षित राख्ने र खाद्य मापदण्डअनुसारका औजार उपकरण, भाडा, वर्तनको प्रयोग गरी गुणस्तर कायम गर्न प्रोत्साहन गरिनेछ ।

८.६.४ विभिन्न प्रकारका महको उत्पादन तथा बजारीकरणको लागि बजारको सम्भाव्यता अध्ययन गरी बजारलाई सुनिश्चित र सुदृढीकरण गरिनेछ ।

८.६.५ पम्परागत उत्पादनका अतिरिक्त पर्याप्त पूर्वाधार सम्पन्न मौरीपालक कृषक, सञ्चालन समूह तथा उद्यमी व्यावसायीहरूलाई मौरी मैन, चोप (Propolis), कुट

शाहीखुराक (Royal Jelly) विशेष प्रकारको मह उत्पादन चाका, क्रिष्टल एकल स्रोतको मह आदि विशिष्ट सामग्री उत्पादनका लागि प्रोत्साहित गर्न तालिमका अवसरहरू प्रदान गरिनेछ । नेपालमा उत्पादित मह र मौरीजन्य उपजहरूको विविधीकरणको विषयमा प्रचार प्रसारको व्यवस्था गरिनेछ ।

८.६.६ महको भौगोलिक र वनस्पतिक श्रोत मौरीका प्रजाति र मह काढेको विधिका आधारमा महलाई लेबलिङ्ग गर्न प्रोत्साहन गरिनेछ ।

८.६.७ मह सङ्कलन, भण्डारण तथा प्रशोधनस्थल र बिक्री प्रवर्द्धनका लागि भौतिक पूर्वाधार विकासमा निजीक्षेत्रसँग सहकार्य गरिनेछ ।

८.६.८ महको आन्तरिक खपत प्रवर्द्धन गर्न आयुर्वेदिक उद्योग, राशन व्यवस्था गर्ने ठूला सरकारी निकाय, अस्पताल, विद्यालय, होटलसँग कारोबार गर्ने मह उत्पादन तथा व्यावसायीहरूलाई विशेष सहयोग गरिनेछ ।

८.७ प्रोत्साहन र अनुदान

८.७.१ तुलनात्मक लाभका आधारमा मौरीपालनको विकास र विस्तारमा सघनता र तीव्रता ल्याउन विद्यमान अनुदानको स्तर वृद्धि गरिनेछ ।

८.७.२ रानी उत्पादन, बैकिङ्ग र आपूर्ति गर्न चाहने क्षमतावान उत्साही उद्यमीहरूलाई रानी व्यवस्थापन सामग्री आयात गर्न र व्यवसाय स्थापना गर्न विशेष अनुदानसहित प्रोत्साहित गरिने ।

८.७.३ निजी क्षेत्रका मौरीपालनसम्बन्धी सञ्जाल, सहकारी, समूह तथा उद्यमीहरूलाई मह सङ्कलन, भण्डारण, मह प्रशोधन एकाइ, प्राथमिक रोग निदान सुविधाको विकास एव एपिस सेराना, एपिस सेराना, सेरेना र एपिस मेलीफेराको गोला छनौट तथा नश्ल सुधारका लागि विशेष तवरले प्रोत्साहित अनुदानको व्यवस्था गरिनेछ ।

८.७.४ मौरीजन्य व्यवसाय जस्तै घार र उपकरण निर्माण, मह वा मौरी उपजको सङ्कलन, प्रशोधन आदिमा निश्चित प्रतिशत

वा तोकिएको रकम अनुदान दिने व्यवस्था गरिनेछ ।

८.७.५ मौरीपालन व्यवसायको मूल्य श्रृङ्खलाको आधारमा व्यावसायीहरूको अभिलेख अध्यावधिक गरी छुट्टाछुट्टै तहमा अनुदान दिने व्यवस्था गरिनेछ । एकै व्यक्ति वा समूहले दोहोरो अनुदान लिने परिपाटीको अन्त्य गर्नका लागि कुनै पनि गैरसरकारी स्वदेशी वा विदेश सङ्घ संस्थाहरूले पनि कुनै स्थान विशेषका व्यावसायीहरूलाई अनुदान दिने खालका कार्यक्रहरू सञ्चालन गर्न चाहेमा नेपाल सरकारको मौरीपालनसम्बन्धी काम गर्ने सरकारी निकायको स्वीकृति र समन्वय गरेर मात्र आनुदान दिने व्यवस्थालाई कडाइका साथ लागू गरिनेछ ।

८.७.६ मौरीपालक कृषकहरूबाट विभिन्न कृषि बालीहरूमा परागसेचनबाट पुऱ्याएको योगदानको उच्च मूल्याङ्कन गर्दै सो बापतको अनुदान दिने व्यवस्थ मिलाइनेछ ।

८.७.७ प्रतिफलमा आधारित अनुदान प्रणालीको विकास गरिनेछ ।

८.८ मौरीपालनमा कर्जा

८.८.१ कृषि विकास बैंक, वाणिज्य बैंकहरू तथा अन्य वित्तीय संस्थाहरू मार्फत मौरीपालनमा लगानी गर्न व्यवस्था गरिनेछ ।

८.८.२ महिला, दलित एवं पिछडिएका समुदायलाई समूह जमानी तथा धितोमा ऋण प्रदान गर्न पहल गरिनेछ ।

८.८.३ प्रमुख उत्पादन क्षेत्रहरू (Growth Centers) मा मौरी पालक कृषक, कृषक सञ्जाल र निजी मह कारोबार, एवं श्रोतकेन्द्रहरूलाई अन्तरिम मह भण्डारण सञ्चालन गर्न सस्तो सरल ऋण सुविधा प्रदान गरिनेछ ।

८.९ बिमा नीति प्रवर्द्धन

मौरी पालन व्यवसाय र मह कारोबार एवं स्थानान्तरण र वसार पसार रहेका मौरी तथा मह समेतमा जोखिहरूबाट जोगाउन कम्पनीबाट बिमा नीति विकास, विस्तार र अवलम्बन गरिनेछ ।

८.१०. कर छुट नीति

८.१०.१ व्यावसायिक मौरी पालनका लागि कर छुटका व्यवस्थाहरू कर सम्बन्धित कानुनमा उल्लेख भएबमोजिम हुनेछ ।

८.११ मौरीपालन अनुसन्धानको व्यवस्था

८.११.१ मौरीपालनका विभिन्न पक्षहरूमा आवश्यक अनुसन्धानका लागि नेपाल कृषि अनुसन्धान परिषद्, कृषि वन विश्वविद्यालय, कृषि तथा पशु विज्ञान अध्ययन संस्थान, कृषि विभाग र सम्बद्ध कार्यक्रहरू तथा कार्यालयहरू, सम्बद्ध अन्य निकायलाई क्रियाशील तुल्याइनेछ ।

८.११.२ कृषि वन विश्वविद्यालय, कृषि तथा पशु विज्ञान अध्ययन संस्थान, कृषि अनुसन्धान परिषद एवं गैरसरकारी संस्थाहरूमा स्वदेशी विदेशी विश्वविद्यालयहरूसँग सम्बन्धन गरी अनुसन्धान र शोध प्रबन्ध तयार गर्न सक्ने व्यवस्था गर्न जोड दिइन छ ।

८.११.३ मौरीपालन अनुसन्धानको निमित्त प्रस्तावित सबै सरकारी, अर्धसरकारी एवं गैरसरकारी संस्थाहरूमा आवश्यक साधन र सुविधाको विकास गर्न जोड दिइनेछ ।

८.११.४ नेपाल कृषि अनुसन्धान तथा विकास कोष अन्तर्गत प्रस्तावहरू माग हुँदा मौरीपालनमा आवश्यक अनुसन्धानको लागि विशेष प्राथमिकता दिन जोड दिइनेछ ।

८.१२ जनशक्ति विकास

८.१२.१ मौरी रोग, मौरी प्रजनन, मौरी व्यवस्थापन, मौरीपालन प्रसार तथा तालिम, उत्पादन विकास, बजार व्यवस्थापन आदि विभिन्न पक्षमा दक्ष जनशक्तिको विकास गरिनेछ । यस कार्यमा मौरी पालक कृषकहरूलाई विशेष अवसरहरू उपलब्ध गराइनेछ ।

८.१२.२ कृषि अनुसन्धान परिषद् तथा कृषि र वन विश्वविद्यालय, कृषि तथा पशु विज्ञान अध्ययन संस्थानमा दक्ष जनशक्तिको विकास गरिनेछ ।

८.१२.३ गैरसरकारी क्षेत्र र निजी क्षेत्रका औद्योगिक प्रतिष्ठानहरूमा मौरीपालनको विभिन्न क्षेत्रमा स्तरीय सेवा प्रदान गर्ने दक्षता विकास गर्न प्रोत्साहन गरिनेछ ।

८.१२.४ मौरीपालन स्रोतकेन्द्रहरूबाट सेवा विस्तार गर्न तालिमका अवसर प्रदान गरी दक्षता बढाइनेछ ।

८.१२.५ कृषि विभाग, कृषि अनुसन्धान परिषद्, कृषि तथा पशु विज्ञान विश्वविद्यालय, कृषि वन विश्वविद्यालयको क्षमता अभिवृद्धि गर्ने खालका तालीम तथा पाठ्यक्रमको विकास गरिनेछ ।

८.१२.६ कृषिसम्बन्धी व्यावसायिक शिक्षण प्रशिक्षण प्रतिष्ठानहरूमा मौरीपालन विशेष पाठ्यक्रम निर्माण गरी समावेश गराउन सम्बद्ध निकायहरूसँग पहल गरिनेछ ।

उद्देश्य ७.२ सँग सम्बन्धित नीति र कार्यनीति

८.१३ महको गुणस्तर निर्धारण, प्रमाणीकरण र विषादी अवशेष नियन्त्रण ।

८.१३.१ नेपाली प्राकृतिक महको प्राङ्गारिक विशेषताहरू परिभाषित र प्रमाणित गरी तिनको संरक्षण व्यवस्था गरिनेछ ।

८.१३.२ महमा विषादी अवशेष, अन्तरपदार्थ (Inert material) गह्रौं धातुहरू (Heavy matel) एन्टीवायोटिक्स आदिको नियन्त्रण जस्ता अवशेष अनुगमन योजना (Residue monitoring plan) सँग सम्बन्धित कार्यक्रहरू विकास गरी कार्यान्वयनको व्यवस्था गरिनेछ ।

८.१३.३ अवशेष परीक्षण र प्रमाणीकरणका लागि मान्यता प्राप्त प्रयोगशालाको सेवा लिन सम्बद्ध निकायहरूसँग समन्वय गरिनेछ ।

८.१३.४ मौरीपालक तथा मह कारोबारीहरूलाई अन्तर्राष्ट्रिय समुदाय र बजारका गुणस्तर मापदण्ड, असल मौरीपालन अभ्यास (Good Beekeeping Practices) एवं सर्तहरूका सम्बन्धमा समुचित प्रशिक्षाण दिइनेछ ।

८.१३.५ नेपाली महको वर्तमान स्तरमान (Standard) तयार गरी परागको आधारमा व्यावहारिक र यथार्थ परक बनाइनेछ ।

८.१४ महको बजारीकरण व्यवस्थापन

८.१४.१ नेपाली महमा लाग्ने कर न्यूनीकरण र सरलीकरणका

लागि पहल गरिनेछ ।

८.१४.२ भन्सार महशुल वृद्धि गरी विदेशी मह आयातलाई व्यवस्थापन गरिनेछ ।

८.१४.३ उत्पादकत्व वृद्धि, गुणस्तर र उत्पादन लागत कम गराई नेपाली महको राष्ट्रिय तथा अन्तर्राष्ट्रिय क्षेत्रमा व्यापारिक प्रतिस्पर्धाता बढाउने प्रयास गरिनेछ ।

८.१४.४ राष्ट्रिय अन्तर्राष्ट्रिय मेला, प्रदर्शनीहरूमा नेपाली हिमाली मह, अर्गानिक मह, विशेष प्रकारका मह तथा गोलाको प्रदर्शन गराउनेतर्फ प्रोत्साहन गरिनेछ ।

८.१४.५ नेपाली महको पहिचान हुने गरी गुणस्तर व्यवस्थापन ट्रेड मार्क तथा साझा लोगोको विकास गरिनेछ ।

८.१४.६ जङ्गली मौरीको मह काढ्दा मौरी पर्यटन (bee tourism) को प्रवर्द्धन हुने खालका कार्यक्रमको निर्माण गरिनेछ ।

८.१५ स्तरीयकरण अनुगमन र नियमन

८.१५.१ मौरीपालनका विभिन्न स्तर र क्षमता परिभाषित गर्ने व्यवस्था मिलाइनेछ ।

८.१५.२ प्राकृतिक र प्रशोधित महको परिभाषा र गुणस्तर (Standard) को समीक्षा र आवश्यकताअनुसार परिमार्जन गरिनेछ ।

८.१५.३ यसरी निर्धारण गरिएका आधार तथ्याङ्कस्तर तथा मापदण्डहरू (Standards &Specifications) सरकारी निकायलगायत अन्य सबै सम्बद्ध सरोकारवालाहरूसमक्ष प्रसार र अनुगमन गरिनेछ । अनुगमन गर्दा गुणस्तरका मापदण्डहरू, अवलम्बन गरेका आधारहरू, अभिलेख र प्रंयोगशाला परीक्षणलाई समेत ध्यानमा राखिनेछ ।

८.१५.४ मौरीघार, उपकरण, निर्माण उद्योग र मौरीपालन स्रोत केन्द्रहरूको र उत्पादित सामग्रीसमेतको निश्चित मापदण्ड बनाई सो मापदण्डअनुसारका स्रोतकेन्द्रहरूले जिल्ला कृषि विकास कार्यालय वा मौरीपालन शाखा कार्यालयहरूको सिफारिसमा व्यावसायिक कीट विकास निर्देशनालयमा दर्ता तथा नवीकरण गराएर मात्र

कारोबार गर्न पाउने व्यवस्था गरिनेछ ।

**उद्देश्य ७.३ सँग सम्बन्धित नीति र कार्यनीति**

८.१६परागसेचनको लागि मौरी परिचालन तथा व्यवस्थापन

८.१६.१ कृषकहरूमा परागसेचनको महत्त्व र मौरीको उपादेयता बोध गराउन विशेष प्राथमिकता दिइनेछ ।

८.१६.२ बालीनालीमा फूल फुलेको बेला कीटनाशक विषादी छर्नु बाली उत्पादक र मौरीपालक कृषक दुवैलाई हानिकारक हुन्छ भन्ने चेतनाको विकास गराउने खालका कार्यक्रमलाई प्राथमिकता दिइनेछ ।

८.१६.३ बागवानी फार्म तथा फलफूल खेती कृषकहरू सबैलाई मौरी प्रयोगमा ल्याउन प्रोत्साहित गरिनेछ ।

८.१६.४ मौरीभित्र जीव भएकोले यसको बचावट र संरक्षण गर्न कृषकहरूलाई जागरुक गराउने खालका कार्यक्रमलाई प्राथमिकता दिइनेछ ।

८.१६.५ परागसेचनको आवश्यकता, यसको महत्व र उपादेयतासम्बन्धी अध्ययन अनुसन्धानको क्रममा मह नपार्ने मौरी, जङ्गली मौरी र अन्य परागसेचीसँगको प्रतिस्पर्धा हुने तवरबाट अगाडि बढाइनेछ ।

**उद्देश्य ७.४ सँग सम्बन्धित नीति र कार्यनीति**

८.१७ आर्थिक तथा सामाजिक रूपले पिछडिएका वर्गको मूल प्रवाहीकरण

८.१७.१ आर्थिक तथा सामाजिक रूपले पिछडिएका (महिला, दलित, आदिवासी, अपाङ्ग आदि) कृषक समूह र वर्गहरूलाई समूहगत रूपमा मौरीपालन अपनाउन विशेष तवरले प्रोत्साहित गरिनेछ ।

८.१७.२ मौरीपालनसम्बन्धी तालिम, शैक्षिक भ्रमण एवं अन्य प्रसार र सङ्गठनात्मक कार्यक्रहरूमा पिछडिएका वर्गको सहभागिता सुनिश्चित गरिनेछ ।

८.१७.३ महिला तथा पिछडिएका वञ्चित वर्गका लागि विशेष कार्यक्रम प्याकेज ल्याइनेछ । जसमा थप सहुलियत र प्रोत्साहन हुने छन् ।

८.१७.४ जङ्गली अवस्थामा रहेको मह शिकारको चेतना जगाई व्यवस्थित तवरबाट मह शिकार गरी मौरी पर्यटनलाई चाडको रूपमा ग्रहण गरी अगाडि बढाउने ।

८.१८ संस्थागत विकास

८.१८.१ महिला एवं पिछडिएका वञ्चित वर्गलाई संस्थागत रूपमा सङ्गठित गर्ने, मौरीपालन स्रोतकेन्द्रहरूको स्तर वृद्धि गर्ने, उनीहरूको लागि सेवा तथा आपूर्तिलाई सुदृढ गराउने खालका कार्यक्रमलाई प्राथमिकता दिइनेछ ।

८.१८.२ मौरीपालनको सर्वोपरी विकासको निमित्त प्रमुख उत्पादन क्षेत्रहरूको सहज पहुँचमा मौरी रोग निदान र व्यवस्थापनसहितका मौरी पालन कार्यालयहरू विस्तार गरिनेछ ।

८.१८.३ कार्यरत मौरीपालन श्रोतकेन्द्रहरूको मूल्याङ्कन गरी आवश्यकताअनुकूल स्तर वृद्धि गरिनेछ ।

८.१८.४ पिछडिएका वर्गका मौरीपालकहरूलाई समूह, सहकारी, सङ्घमा सङ्गठित गरी विशेष कार्यक्रम प्याकेज दिइनेछ ।

८.१८.५ मौरी प्रवर्द्धनको लागि आवश्यक पर्ने कार्यक्रहरूको कार्यान्वयन र विस्तार गर्दा एकद्वार प्रणाली मार्फत सम्बन्धित निकायमा पठाउने र कार्यान्वयन गराउने व्यवस्था मिलाइनेछ ।

८.१८.६ जिल्लाको परिचरन क्षेत्र सम्भाव्यता तथा आवश्यकताको आधारमा जिल्लाका मौरी पकेट क्षेत्रहरू छनौट गरी मौरीको मूल्य श्रृङ्खलाको आधारमा क्लष्टर निर्माण गरी महिला, युवा एवं पिछडिएका वर्गलाई प्रोत्साहन हुने गरी लक्षित कार्यक्रम निर्माण गरी अनुदानको व्यवस्था गरिनेछ ।

## ९. संस्थागत संरचना

सरकारी, निजी तथा सहकारीको साझेदारी अवधारणा (Public private

partnership) अनुसार हाल मौरीपालन तथा मौरीजन्य उत्पादन विकास कार्यक्रममा प्रत्यक्ष वा परोक्ष तवरले कृषक, सहकारी सङ्घ संस्थाहरूलाई समेट्ने गरी मौरीपालन सेवा विस्तार तथा मौरीजन्य उत्पादन विकाससम्बन्धी मौरी प्रवर्द्धन निर्देशक समिति गठन गर्न सकिनेछ । निर्देशक समितिको सिफारिसमा मौरी प्रवर्द्धन नीतिमा आवश्यकताअनुसार समय सापेक्ष परिमार्जन गर्न सकिनेछ ।

**१०. आर्थिक पक्ष**

यो नीति र यस नीतिबमोजिम मौरीपालनको क्षेत्रका कार्यक्रम कार्यान्वयन गर्न नेपाल सरकार वा विदेशी सङ्घ संस्थाहरूको तर्फबाट प्राप्त हुने अनुदानमा सरकारी बजेट प्रणालीमार्फत बजेटको माध्यमबाट व्यवस्थापन गरिनेछ । मौरीपालनतर्फ युवाहरूको आकर्षण वृद्धि भएकोले युवा लक्षित कार्यक्रमका लागि विशेष बजेटको व्यवस्था गरिनेछ ।

**११. कानुनी व्यवस्था**

यस नीतिको प्रभावकारी कार्यान्वयन गर्नको लागि आवश्यकताअनुसार ऐन, नियम तथा निर्देशिका, कार्यविधि वा मापदण्डहरू तर्जुमा गरिनेछ ।

**१२. अनुगमन र मूल्याङ्कन**

यस नीतिको प्रभावकारी कार्यान्वयन गर्नको लागि अनुगमन र मूल्याङ्कनमा संस्थागत संरचनामा उल्लेखित सरकारी कार्यालयहरू तथा अन्य सरोकारवाला सङ्घ संस्थाको संलग्नतालाई सुनिश्चित गरी सहभागितात्मक एवं समन्वयात्मक पद्धतिलाई बढावा दिइनेछ । अनुगमन र मूल्याङ्कनमा संयोजनको भूमिका कृषि विकास मन्त्रालय वा यसले तोकेबमोजिमको सरकारी निकायले गर्नेछ ।

**१३. जोखिम**

यस नीतिको प्रभावकारी कार्यान्वयनबाट महको उत्पादन तथा उत्पादकत्व वृद्धि, परागसेचन क्रिया प्रवर्द्धन भै बाली उत्पादनमा वृद्धि हुने तथा वातावरण संरक्षणमा सहयोग हुने हुनाले जोखिम हुने देखिँदैन ।

**१४. बाधा अड्काउ फुकाउने**

यस नीतिको कार्यान्वयनको सिलसिलामा कुनै बाधा अड्काउ परेमा

वा समस्या उत्पन्न भएमा कृषि विकास मन्त्रालयले त्यस्तो बाधा अड्काउ फुकाउन आवश्यक निर्णय गर्ने छ ।

# विकास सहायता नीति, २०७१

**१. पृष्ठभूमि**

१.१ विगत ६ दशकदेखि नेपालको समग्र विकास प्रयासमा विकास सहायताले महत्त्वपूर्ण योगदान पुऱ्याउँदै आएको छ । तथापि, यसको प्रभावकारिता अभिवृद्धि गरी अपेक्षित नतिजा हासिल गर्ने चुनौती भने विद्यमान नै छ । विकास साझेदार र सरकार दुवै पक्षको समझदारीमा सहायताको अधिकतम सदुपयोगका लागि निरन्तर सुधारको आवश्यकता रहेको र सुधारका लागि नेपालले अन्तर्राष्ट्रिय मञ्चहरूमा प्रतिबद्धता समेत व्यक्त गर्दै आएको छ ।

१.२ यसै सन्दर्भमा नेपालले सन् २००५ को पेरिस घोषणापत्र, सन् २००८ को आक्रा कार्ययोजना र सन् २०११ को बुसान प्रतिबद्धतालाई स्वीकार गरिसकेको तथा सन् २०१४ मा विकास प्रभावकारिताका लागि अन्तर्राष्ट्रिय साझेदारी जुटाउन मेक्सिकोमा सम्पन्न प्रथम उच्चस्तरीय बैठकमा सक्रिय सहभागिता जनाई सुधारका लागि अन्तर्राष्ट्रियस्तरमा भइरहेका सामूहिक प्रयासमा ऐक्यबद्धतासमेत जाहेर गरेको छ ।

१.३ वि.सं. २०७० सालमा सम्पन्न संविधानसभाको दोस्रो निर्वाचनले नयाँ संविधान बन्ने आधार तयार गरेको र देश सङ्क्रमणबाट स्थिरतातर्फ अघि बढेको वर्तमान परिप्रेक्ष्यमा आर्थिक विकासका कार्यक्रमहरूलाई नेपाल सरकारले उच्च प्राथमिकता दिएको छ । आर्थिक विकासका लक्ष्यहरू हासिल गर्नका लागि विकास सहायतालाई अझ बढी प्रभावकारी ढङ्गले परिचालन गर्नुपर्ने आवश्यकता छ ।

१.४ नेपालले लिएको लक्ष्यअनुसार सन् २०२२ सम्ममा अतिकम विकसित राष्ट्रबाट विकासशील राष्ट्रमा रूपान्तरण हुन एवम् सहायताप्रतिको निर्भरता क्रमशः घटाउँदै आत्मनिर्भर अर्थतन्त्र निर्माण गर्नको लागि समेत विकास सहायताको प्रभावकारी परिचालन गर्नुपर्ने आवश्यकता छ ।

१.५ वैदेशिक सहायता नीति, २०५९ मा समयानुकूल परिमार्जन गर्दै परिवर्तित राष्ट्रिय तथा अन्तर्राष्ट्रिय सन्दर्भमा समय सापेक्ष नयाँ नीति ल्याउनुपर्ने

आवश्यकतालाई सरकारले महसुश गरेको एवम् विकास सहायताका सरोकारवाला- विकास साझेदारहरू, अन्तर्राष्ट्रिय मञ्च, नागरिक समाज र सरकारी निकायहरूसमेतले समय समयमा नयाँ विकास सहायता नीतिको आवश्यकताका बारेमा सुझाव दिएका छन् । वि.सं. २०६२/६३ को जनआन्दोलनपछि जनतामा आर्थिक विकास र समृद्धिको अपेक्षा निकै बढेको छ । यसलाई सम्बोधन गर्नुपर्ने राज्यको दायित्व पनि छ । अतः राजनीतिक परिवर्तन एवम् सोबाट सिर्जित आकाङ्क्षाहरूलाई सम्वोधन गर्न, अन्तर्राष्ट्रिय मञ्चहरूको सुझाव र प्रतिबद्धतालाई आन्तरिकीकरण गर्न, दाताहरूको सहायता रणनीतिमा आएको परिवर्तनलाई समेट्न एवम् सहायतालाई छनौटपूर्ण तवरले प्राथमिकता प्राप्त क्षेत्रमा उपयोग गरी यसको परिचालनमा जवाफदेहिता र पारदर्शिता अभिवृद्धि गर्न र विकास सहायता परिचालनमा राष्ट्रिय प्रणालीको उपयोग बढाई मुलुकले लिएको लक्ष्यअनुरूप सन् २०२२ सम्ममा अति कम विकसित राष्ट्रबाट विकासशील राष्ट्रमा रूपान्तरित हुन सघाउ पुऱ्याउनसमेत एक नयाँ र गतिशील विकास सहायता नीति जारी गर्नुपर्ने आवश्यकता रहेको छ ।

## २. अवसर र चुनौतीहरू

२.१ नेपालले सन् १९९० को दशकदेखि आर्थिक सुधारका कार्यक्रमहरू लागू गर्दै आएको छ । यस अनुरूप निजी क्षेत्र र नागरिक समाजलाई विकास प्रयासमा सहभागी हुन अनुकूल वातावरण बनाउनुपर्ने अवस्था रहेको छ ।

२.२ सहायताको प्रभावकारिता अभिवृद्धि गर्नुपर्ने वर्तमान चुनौतीलाई सुधारका लागि अवसरका रूपमा समेत लिइएको छ । विकास सहायता संलग्न परियोजनाको स्वामित्व (Ownership) प्रापक सरकारमा रहेमा मात्र सहायताको प्रभावकारिता बढ्न सक्छ भन्ने कुरामा सरकार र विकास साझेदार सचेत रहेको अवस्था छ ।

२.३ विकास नतिजा (Development Result) लाई केन्द्र बिन्दुमा राखेर साधन श्रोतको विनियोँजन गर्ने सरकारको नीतिले विकास सहायता संलग्न कार्यक्रम निर्माण, कार्यान्वयन र अनुगमनमा समेत सकारात्मक प्रभाव पार्ने अपेक्ष गरिएको छ ।

२.४ विकास सहायताको सफलता वा असफलताप्रति विकास साझेदार र

सरकार एक अर्काप्रति र आ-आफ्ना करदाताप्रति जवाफदेही हुनुपर्ने पारस्परिक जवाफदेहिता (Mutual Accountability) को सिद्धान्तलाई व्यवहारमा उतार्न सयम समयमा हुने गरेका सामूहिक छलफल, अन्तरक्रिया, प्रगति समीक्षाका अभ्यासहरू र सहायता व्यवस्थापन प्रणालीलाई समेत आन्तरिकीकरण गर्नुपर्ने अवस्था छ ।

२.५ राष्ट्रिय प्राथमिकता र प्रणालीसँग सहायताको आबद्धता(Alignment)को प्रक्रियामा सुधार भए तापनि कार्यान्वयनको प्रगति मिश्रित रहेको छ । आबद्धताको सन्देश तल्लोतहसम्म पुऱ्याउने,सार्वजनिक वित्तीय व्यवस्थापनमा सुधार ल्याउने र आन्तरिक क्षमता बढाई राष्ट्रिय प्रणालीमा सबै विकास साझेदारहरूलाई आबद्ध गराउने चुनौती रहेको छ ।

२.६ शिक्षा र स्वास्थ्य जस्ता क्षेत्रमा विकास साझेदारहरूका बीच विकसित हुँदै गएको सामञ्जस्यता (Harmonizaton) को अभ्यासको मूल्याङ्कनका आधारमा आवश्यक सुधार ल्याई अन्य क्षेत्रमा पनि विस्तार गर्नुपर्ने आवश्यकता रहेको छ ।

२.७ साना-साना आयोजनाहरूमा विकास सहायता छरिँदा सहायतामा खण्डिकरण (Fragmentation) एवम् कारोबार लागत (Transaction Cost) बढाउनुका साथै सरकारका निकायहरू एवम् विकास साझेदारहरूलाई समेत अतिरिक्त बोझ थपिएको छ । विकासका साझेदारहरूले आपसमा तुलनात्मक लाभका आधारमा कार्य विभाजन गरेर एवम् आयोजनाहरूको सङ्ख्या घटाई गुणात्मकता बढाएर यो अवस्थामा सुधार ल्याउन पर्ने आवश्यकता छ ।

२.८ परम्परागत विकास सहायतामा मात्र भर नपरी निजी क्षेत्रको लगानी, व्यापार एवम् आन्तरिक श्रोत परिचालनबाट पनि विकासका लागि आवश्यक पर्ने साधन जुटाउनुपर्ने आवश्यकता छ । त्यसैगरी, विकास सहायता परिचालन गरिरहेका संस्था/देशहरूबाट सीप, ज्ञान, प्रविधि प्राप्त गरी मुलुकको आर्थिक, सामाजिक रूपान्तरणमा उपयोग गर्नुपर्ने अवस्था पनि विद्यमान छ । विकास सहायता परिचालनका विद्यमान चुनौतीहरू निराकरण गर्दै यसबाट प्राप्त हुने अवसरहरूको अधिकतम उपयोग गर्न विकास सहायता प्रभावकारिता अभिवृद्धि गर्दै राष्ट्रिय विकासका लक्ष्य हासिल गर्न र क्रमशः आत्मनिर्भर अर्थतन्त्र निर्माण गर्न

समेत सहयोग गर्ने दस्तावेजको रूपमा यो विकास सहायता नीतिलाई अगाडि सारिएको छ ।

## भाग एक
## परिचय

### १. नाम र प्रारम्भ (Name and Commencement)

यो नीतिको नाम "विकास सहायता नीति, २०७१" रहेको छ । यो नीति नेपाल सरकार मन्त्रिपरिषद्बाट पारित भएको मितिदेखि लागू हुनेछ ।

### २. दीर्घकालीन सोच (Vision)

विकास सहायताको प्रभावकारी परिचालनको माध्यमबाट आत्मनिर्भर अर्थतन्त्रको निर्माण गर्दै नेपाललाई एक समृद्ध लोकतान्त्रिक मुलुकमा रूपान्तरित गर्न सहयोग पुऱ्याउनु यो नीतिको दीर्घकालीन सोच हुनेछ ।

### ३. मूल लक्ष्य (Mission)

राष्ट्रिय क्षमताको विकास गर्दै अधिकतम लाभ लिने हिसाबले विकास सहायता परिचालन गरी राष्ट्रिय लक्ष्य हासिल गर्न सहयोग पुऱ्याउनु यो नीतिको मूल लक्ष्य हुनेछ ।

### ४. उद्देश्य (Objectives) :

यो नीतिका उद्देश्यहरू निम्नबमोजिम हुनेछन् :

(क) बाह्य स्रोतको परिचालन गरी आवधिक विकास योजनामा उल्लेखित विकासका लक्ष्यहरू हासिल गर्न सहयोग पुऱ्याउनु,

(ख) विकास सहायतालाई प्रभावकारी ढङ्गले उपयोग गरी सन् २०२२ सम्ममा नेपाललाई अल्पविकसित राष्ट्रबाट विकासशील राष्ट्रको रूपमा रूपान्तरण गर्न सघाउ पुऱ्याउनु,

(ग) सहायताको सही मूल्य (Best Value for Money) प्राप्त गरी विकास प्रभावकारिता हासिल गर्नु, र

(घ) विकास सहायताप्रतिको निर्भरता क्रमशः घटाउँदै आत्मनिर्भर अर्थतन्त्र निर्माणमा सघाउ पुऱ्याउनु ।

## ५. **रणनीति** (Strategies)

(क) फराकिलो, समावेशी र दिगो आर्थिक वृद्धि हासिल हुने, रोजगारी सिर्जना हुने र गरिबी घटाउने राष्ट्रिय नीति तथा प्राथमिकताका आधारमा अधिक प्रतिफल पाउनेगरी विकास सहायताको परिचालन गर्ने ।

(ख) छनौटपूर्णरूपले प्राथमिकता प्राप्त क्षेत्रमा सहायताको परिचालन गरी यसको माध्यमबाट राष्ट्रिय विकासको लक्ष्य हासिल गर्ने कार्यमा सहयोग पुऱ्याउने ।

(ग) जलविद्युत् र सडक जस्ता पूर्वाधारको विकास, कृषिको आधुनिकीकरण, पर्यटन,उद्योग तथा व्यापारका क्षेत्रहरूमा लगानी बढाई नेपालको सामाजिक आर्थिक विकासमा योगदान पुऱ्याउने ।

(घ) हालसम्म हासिल भएका सामाजिक विकास तथा मानव विकास सूचकाङ्क एवम् सहस्राब्दी विकास लक्ष्यको उपलब्धिलाई दिगो तुल्याउन र सन् २०१५ पछिका विकासका कार्यसूचीलाई कार्यान्वयन गर्न एव्म दिगो विकासका लागि आवश्यक पर्ने स्रोतको परिचालन गर्ने ।

(ङ) उत्पादनशील क्षेत्रमा विकास सहायताको प्रभावकारी उपयोगबाट निजी लगानी र व्यापारका लागि अनुकूल वातावरणको सिर्जना गर्दै तीव्र आर्थिक वृद्धि हासिल गर्ने ।

(च) सहायता प्रभावकारिताका लागि पेरिस घोषणापत्र, आक्रा कार्ययोजना, बुसान प्रतिबद्धता र मेक्सिको बैठकसमेतका उच्चस्तरीय अन्तर्राष्ट्रिय प्रतिबद्धताअनुरूप विकास सहायताको परिचालन गर्ने ।

(छ) राष्ट्रिय क्षमता विकास र ज्ञान तथा प्रविधि हस्तान्तरणमा योगदान पुऱ्याउने खालका विकास सहायता सुनिश्चित गर्ने र विकास सहायतालाई पारदर्शी ढङ्गले देशको राष्ट्रिय प्रणालीको माध्यमबाट उपयोग गर्ने ।

(ज) विकास सहायताको खण्डीकरणलाई घटाउन र उच्च खर्चमा कटौती गर्न विकास सहायताको न्यूनतम सीमा (Threshold) राख्ने ।

(झ) क्षेत्रीय असन्तुलन घटाउन सहयोग पुग्ने गरी विकास सहायता परिचालन गर्ने ।

(ञ) आन्तरिक राजस्व अभिवृद्धिमा योगदान पुग्ने गरी आत्मनिर्भर अर्थतन्त्रको निर्माण गर्ने कार्यमा विकास सहायताको उपयोग गर्ने ।

(ट) सहायता सूचना प्रणालीको सुदृढीकरण गर्ने, विकास सहायताको

पारदर्शिता अभिवृद्धि गर्ने र आम जनतामा सहायतासम्बन्धी सूचनाहरू प्रवाह गर्ने ।

## भाग दुई
## नीतिका प्रारूप

२.१ राष्ट्रिय प्राथमिकतासँग आबद्धता (Alignment with National Priority)
वैदेशिक सहायताको प्रभावकारितासम्बन्धी पेरिस सिद्धान्तअनुरूप आबद्धता (Alignment) मूलतः दुई प्रकारले हुन सक्दछ । पहिलो, दाताहरूले सहायता प्राप्त गर्ने मुलुकको विकास प्राथमिकता, नीति र रणनीतिका आधारमा सहयोग प्रदान गर्नुपर्दछ । यसलाई नीतिगत आबद्धता भनिन्छ । दोश्रो, वैदेशिक सहायता परिचालन यथासम्भव राष्ट्रिय प्रणालीमार्फत हुनुपर्दछ । यसलाई प्रणालीगत आबद्धता भनिन्छ । विकास सहायतालाई मुलुकको नीति तथा प्राथमिकता र राष्ट्रिय प्रणालीसँग आबद्ध गराई उपलब्धि हासिल गर्ने हो भने बलियो राष्ट्रिय नतिजा ढाँचा (National Result Framework) निर्माण गर्नु पनि जरुरी हुन्छ । यसका लागि राष्ट्रिय र क्षेत्रगत तहमा नतिजाको विद्यमान ढाँचालाई परिमार्जन गर्न अझ बढी सुधारको आवश्यकता छ । राष्ट्रिय नतिजा ढाँचासँगको आबद्धताका निम्ति सरकारी निकायलाई सघाउन दाताहरूको प्रतिबद्धता पनि जरुरी छ । विकास सहायतालाई राष्ट्रिय प्राथमिकतासँग आबद्ध गर्न निम्नानुसारका नीतिहरू अवलम्बन गरिनेछन् :

२.१.१ विकास सहायताको प्राथमिकीकरण र छनौट सरकारको आवधिक विकास योजना तथा समय-समयमा नेपाल सरकारले घोषणा गर्ने नीति तथा कार्यक्रममा उल्लेखित नीति र रणनीतिका आधारमा गरिनेछ ।

२.१.२ सरकारले आफ्ना आवश्यकता र प्राथमिकताअनुरूपका विकास सहायता परिचालन गर्न परियोजनाहरूको पहिचान गरी सूची तयार गर्नेछ । यसरी पहिचान गरिएका परियोजनाहरूको विवरण सम्बन्धित मन्त्रालय तथा निकायहरूले अर्थ मन्त्रालयमा रहने परियोजना बैंकमा अद्यावधिक गर्नुपर्नेछ ।

२.१.३ क्षेत्रगत तहका आवश्यकता सम्बोधन गर्न सरकारले कार्यक्रममा आधारित (Programmatic approach) र क्षेत्रगत कार्यक्रम (SWAp) हरूलाई प्रोत्साहन गर्नेछ र त्यस्ता कार्यक्रमहरूका

लागि सहायता प्रदान गर्न प्रोत्साहित गरिनेछ ।

२.१.४ समावेशी विकासमा योगदान पुऱ्याउने खालका र दुर्गम क्षेत्रका प्राथमिकता प्राप्त कार्यक्रमहरूको लागि विकास सहायताबाट स्रोत उपलब्ध गराउन प्राथमिकता दिइनेछ ।

२.१.५ प्रत्यक्ष वा अप्रत्यक्ष रूपमा मुलुकको राष्ट्रिय अखण्डता, सार्वभौमिकता, धार्मिक, जातीय र सामाजिक सद्भावमा खलल पुऱ्याउने वा राष्ट्रिय सुरक्षा नीतिमा प्रतिकूल असर पार्ने कुनै पनि सहायता स्वीकार गरिनेछैन । यस नीतिविपरित वैदेशिक सहायता स्वीकार वा परिचालन गरेमा प्रचलित कानूनबमोजिम कारबाही गरिनेछ ।

२.१.६ भौतिक पूर्वाधार विकास, रोजगारी सिर्जना, उत्पादन र उत्पादकत्व वृद्धि, व्यापार र लगानी वृद्धिका निम्ति निजी क्षेत्रको लागि अनुकूल वातावरणको सिर्जना र समष्टीगत आर्थिक स्थायित्व कायम गर्नमा पुऱ्याउने योगदानलाई ध्यानमा राखी सरकारले सम्भव भएसम्म विकास सहायताको मूल्याङ्कन गर्नेछ ।

२.१.७ सामाजिक समावेशीकरण, सीमान्तकृत जनताको जीवनस्तरमा वृद्धि, द्वन्द्व रोकथाम तथा व्यवस्थापन, लैङ्गिक समानता र समुदायको सामाजिक विकास जस्ता अन्तरसम्बन्धित विषयहरू (Crosscutting Issues) विकास सहायताबाट सञ्चालन हुने सबै परियोजना/कार्यक्रमका अभिन्न अङ्ग हुनेछन् ।

२.१.८ विकास नतिजाप्रति दाता र सरकार दुबै पक्ष उत्तरदायी हुनुपर्नेछ ।

२.२ सहायता परिचालनको ढाँचा (Aid Modality) विकास सहायता परिचालन गर्दा सरकारले तुलनात्मक लाभको सिद्धान्तको आधारमा कार्यक्रममा आधारित प्रणाली (Program Approach) र राष्ट्रिय प्राथमिकता र योजनामा समावेश हुने खालका एकल परियोजना प्रणाली (Stand Alone Project Approach) मा आधारित ढाँचालाई अवलम्बन गर्नेछ । यसको आधारमा विकास सहायताको कार्यान्वयन गर्न निम्नानुसारका ढाँचाहरू तय गरिएका छन् :

२.२.१ बजेट सहायता ढाँचा (General Budgetary Support) सरकारको

प्रमुख प्राथमिकतामा पर्ने सहायता ढाँचा हुनेछ । यसरी प्राप्त हुने स्रोतलाई सरकारले राष्ट्रिय प्राथमिकताअनुरूप उपयोग गर्नेछ ।

२.२.२ क्षेत्रगत बजेट सहायता (Sector Budget Support) सरकारको दोश्रो प्राथमिकतामा पर्ने सहायता ढाँचा हुनेछ । यस्तो सहायतालाई पनि राष्ट्रिय प्राथमिकतासँग आबद्ध गराइनेछ। स्रोत विनियोँजनमा यसैअनुरूप हुने गरी सतर्कता अपनाइनेछ ।

२.२.३ राष्ट्रिय योजनामा समावेश हुने एकल परियोजना (Aligned Stand Alone Project) ढाँचा सरकारको तेस्रो प्राथमिकतामा पर्ने सहायता ढाँचा हुनेछ । यस्तो ढाँचा उपयोग गर्दा न्यून कारोबार खर्च, नवीनता, र दिगोपना सुनिश्चित हुनुपर्नेछ। नवीन प्रविधि भित्र्याउने यस्ता एकल परियोजना सफल भएपछि तिनलाई दिगो बनाउने र राष्ट्रिय प्रणालीमा विस्तार गर्ने विषयको सुनिश्चितता हुनुपर्नेछ ।

२.२.४ कारोबार खर्च न्यून गर्न र कार्यान्वयनको ढिलाइलाई कम गर्न स-साना प्रकृतिका एकल परियोजनाहरूका निम्ति साझा कोष (Pool Fund) खडा गर्न विकास साझेदारहरूलाई प्रोत्साहन गरिनेछ ।

२.२.५ कार्यक्रममा आधारित (Programmatic Approach) वा क्षेत्रगत ढाँचा (Sectorwise Approach) को कार्यान्वयन गर्दा योजना, बजेट र अनुगमन प्रक्रियालाई एकीकृत गरिनेछ, तर कार्यान्वयनका प्रक्रियाहरू भने भिन्न हुन सक्नेछन् ।

२.२.६ मानवीय सहायता वा प्राकृतिक प्रकोपसम्बन्धी आवश्यक सामग्रीहरू, खाद्यान्न सहायता, प्रविधि, उन्नत मल, औषधिहरू जस्ता वस्तु वा सामग्रीहरू स्वीकार गर्ने वा आवश्यक परेमा सहायता उपलब्ध गराउन दाताहरूलाई सरकारले अनुरोध गर्नेछ ।

२.२.७ सहायताको सही मूल्य (Best Value forMoney) लिन सरकारले सर्तरहित (Untied) सहायतामा जोड दिनेछ । देशभित्र जनशक्ति उपलब्ध हुन नसकेको अवस्थामा मात्रै अन्तर्राष्ट्रिय परामर्श सेवा लिइनेछ र त्यस्तो सेवाको खर्च सकेसम्म न्यून हुनुपर्नेछ ।

२.२.८ विकाससहायता नीतिअनुसार नभएका र राष्ट्रिय प्रणालीमा पर्याप्त मात्रमा आबद्ध नभएका सहायता स्वीकार गरिनेछैन ।

२.२.९ विकास सहायता राष्ट्रिय बजेट प्रणालीमार्फत परिचालन गरिनेछ । यस्ता सबै सहायताहरूको लेखापरीक्षण महालेखा परीक्षकको कार्यालयबाट हुनेछ । तर यी विषयमा प्रचलित कानूनको अधीनमा रही द्विपक्षीय सम्झौतामा अन्यथा उल्लेख भएकोमा भने सम्झौता अनुसार नै हुनेछ ।

२.२.१० शिक्षा, स्वास्थ्य, जलवायु परिवर्तन आदि जस्ता क्षेत्रहरूमा सहयोग पु¥याउन अन्तर्राष्ट्रियस्तरमा स्थापना गरिएका कोषहरूबाट समेत सहायता प्राप्त गर्ने प्रयास गरिनेछ । जलवायु परिवर्तनका क्षेत्रमा सहायता लिँदा ऋणलाई भन्दा अनुदान सहायतालाई प्राथमिकता दिइनेछ ।

२.२.११ विकास साझेदारहरूसँग गरिने सहायता वार्ता (Negotiation) को समन्वय अर्थ मन्त्रालयले गर्नेछ । वार्ता टोलीको लागि आवश्यक पर्ने कार्य विवरण (Terms of Reference) अर्थ मन्त्रालयले तयार गर्नेछ ।

२.३ अनुदान सहायता (Grant) सरकारले यो नीतिमा उल्लेख भएका सहायता परिचालनका लागि प्राथमिकता खण्डमा उल्लेख भएका ढाँचाको परिधिभित्र रही अनुदान सहायता परिचालन गर्नेछ । अनुदान सहायता परिचालन गर्दा ग्रामीण पूर्वाधार निर्माण, सामाजिक विकासका क्षेत्रहरू जस्तैः स्वास्थ्य, शिक्षा, पिउने पानी, सरसफाइ, मानव विकास एवम् कृषि क्षेत्रलाई प्राथमिकता दिइनेछ । क्षेत्रगत कार्यक्रम (Sector Wide Approach, SWAp), साझा कोष (Pool Fund), वातावरण र जलवायु परिवर्तन, दिगो विकाससम्बन्धी अनुदान, सामुदायिक विकासका निम्ति साना अनुदान, ग्रामीण पूर्वाधार विकासका निम्ति साना अनुदान, सहवित्तीय प्रबन्धहरू, मानवीय सहायता, प्राविधिक सहायता र क्षमता विकासमा बाहेक प्रति परियोजना/कार्यक्रम ५० लाख अमेरिकी डलरभन्दा घटी सहायताको अंश भएका अनुदान सहायताको उपयोग गरिनेछैन ।

२.४ सहुलियतपूर्ण ऋण सहायता (Concessional Loan)

२.४.१ नेपाल सरकारले विकास साझेदारहरूबाट सहुलियतपूर्ण ऋणको

अपेक्षा गर्दछ ।

२.४.२ भौतिक पूर्वाधार (जलविद्युत्, सडक तथा पुल, सिँचाइ, हवाई मैदान, रेल्वे, सुख्खा बन्दरगाह र शहरी पूर्वाधार विकास), कृषि र पर्यटन जस्ता उच्च आर्थिक वृद्धिमा सघाउ पुऱ्याउने, रोजगारी सिर्जना गर्ने र वैदेशिक मुद्रा आर्जन गर्ने क्षेत्रहरूमा सहुलियतपूर्ण ऋणको उपयोग गरिनेछ,

२.४.३ प्रत्येक एकल परियोजनाको लागि एक करोड अमेरिकी डलरभन्दा घटी सहायताको अंश भएका सहुलियतपूर्ण ऋण परिचालन गरिनेछैन । तथापि उच्च ज्ञान र प्रविधिसहित प्राप्त हुने भए त्यस्ता ऋण सरकारले स्वीकार गर्न सक्नेछ । यो सीमाभित्र क्षेत्रगत प्रणाली (Sector Wise Approach, SWAp), साझा कोष (Pool Fund) र सहलगानी (Co-financing) अन्तर्गत प्राप्त हुने परियोजनाहरू भने पर्ने छैनन् ।

२.४.४ सरकारले सम्भव भएसम्म स्थानीय मुद्रामा ऋण भुक्तान गर्ने व्यवस्था मिलाउनेछ र विदेशी मुद्रा विनिमयको जोखिमको व्यवस्थापन गर्न आवश्यक मौद्रिक संयन्त्रको प्रयोग गर्ने छ,

२.४.५ ऋण वार्ताका समयमा अन्तर्राष्ट्रिय परामर्श सेवा खर्च, विदेश भ्रमण खर्च र परिवहन खरिद खर्चका प्रावधानहरूलाई सुक्ष्म पुनरावलोकन गरिनेछ र यी प्रावधानहरूलाई परियोजनाको उद्देश्य प्राप्तिको लागि अत्यावश्यक भएमा मात्र स्वीकार गरिनेछ ।

२.४.६ वस्तु तथा सेवाको निश्चित आपूर्तिकर्ताबाट खरिद गर्नुपर्ने गरी सर्त राखिएको ऋण सहायता (Tied to procurement) लाई निरुत्साहित गरिनेछ ।

२.४.७ आपूर्तिकर्ताले उपलब्ध गराउने ऋण (Suppliers Credit) को उपयोग गरिनेछैन ।

२.५ अन्य ऋण सहायता (Other Loans)

२.५.१ सरकारले विश्व बैंक तथा एशियाली विकास बैंकलगायतका बहुराष्ट्रिय वित्तीय संस्थाहरूबाट उपलब्ध हुने सहुलियतपूर्ण बाहेकका अन्य थप स्रोत (Additional Windows) एवम् विभिन्न मुलुकका निर्यात-आयात बैंक (Export Import Bank, EXIM Bank) बाट प्राप्त हुने ऋणहरूको समेत उपयोग गर्न

सक्नेछ ।

२.५.२ सरकारले प्रति परियोजना वा कार्यक्रमका लागि २ करोड अमेरिकी डलरभन्दा घटी सहायता अंश हुने सहुलियतपूर्ण ऋण बाहेकका अन्य ऋण उपयोग गर्नेछैन ।

२.५.३ यस्ता ऋणहरूको उपयोग निम्न क्षेत्रहरूमा गरिनेछः

(क) प्रसारण लाइनलगायतका जलविद्युत् विकास

(ख) राजमार्ग, रणनीतिक सडक सञ्जाल र पुल

(ग) रेलमार्ग

(घ) हवाई मैदान

(ङ) सुख्खा बन्दरगाह

(च) ठूला सिँचाइ आयोजना,

(छ) नेपाल सरकारले उपयुक्त ठहऱ्याएको अन्य कुनै क्षेत्र

२.५.४ माथि जुनसुकै कुरा लेखिएको भएतापनि सरकारले व्यापारिक ऋण (Commercial Loan) लिने छैन ।

२.५.५ निजी वा गैरसरकारी क्षेत्रहरूका निम्ति विदेशी ऋण लिँदा सरकार जमानी बस्नेछैन ।

२.६ प्राविधिक सहायता (Technical Assistance): प्राविधिक सहायतालाई व्यक्तिगत तहमा (सीप, ज्ञान, नवीनता, उद्यमशीलता) र साङ्गठनिक तह (प्रणाली, कार्यविधि, प्रविधि) मा राष्ट्रिय क्षमताको विकासमा सघाउ पुऱ्याउने गरी छनौटपूर्ण तरिकाले उपयोग गरिनेछ । विकास साझेदारहरूलाई प्राविधिक सहायताको साझा कोष (Technical Assistance Pool Fund) मा यस्तो सहायता उपलब्ध गराउन प्रोत्साहित गरिनेछ । प्राविधिक सहायता साझा कोष संयन्त्रको खाका विकास साझेदार र सरकारले संयुक्त रूपमा तयार पार्नेछन्, सरकारको प्रणालीभित्रबाट आयोजना कार्यान्वयनको लागि आवश्यक पर्ने प्राविधिक क्षमता उपलब्ध नहुँदाका अवस्थामा मात्र विकास साझेदारहरूबाट प्राविधिक सहायता लिन सकिनेछ । प्राविधिक सहायता व्यवस्थापनमा निम्नानुसारका नीतिहरू लागू गरिनेछ :

२.६.१ परियोजना तयारी प्राविधिक सहायता (Project Preparation TechnicalAssistance)

२.६.१.१ कुनै परियोजना/कार्यक्रमको पूर्व सम्भाव्यता, सम्भाव्यता र विस्तृत परियोजना प्रतिवेदन निर्माणको लागि परियोजना कार्यान्वयन गर्ने निकायको अनुरोधमा विकास साझेदारहरूलाई परियोजना तयारी प्रविधिक सहायता उपलब्ध गराउन अनुरोध गरिनेछ ।

२.६.१.२ साना परियोजनाहरूको लागि अर्थ मन्त्रालयको परियोजना तयारी कोष (Project Prepratory Fund) को उपयोग गर्ने नीति लिइनेछ । यो कोषबाट क्रमशः ठूला र मध्यम परियोजनाहरूका निम्ति पनि साधन उपलब्ध गराउँदै लगिनेछ ।

२.६.२ क्षमता विकासका लागि एकल परियोजनागत प्राविधिक सहायता (Stand Alone Technical Assistance) ।

२.६.२.१ राष्ट्रिय वा क्षेत्रगत क्षमता विकास योजनामा उल्लेख भए अनुसार सम्बन्धित निकायको अनुरोधमा क्षमता विकासका लागि एकल परियोजनागत प्राविधिक सहायता उपयोग गर्न सकिनेछ ।

२.६.२.२ यस्तो प्राविधिक सहायता स्वीकार गर्दा परियोजना प्रारूप दस्तावेजले स्पष्टरूपमा बहिर्गमनयोँजना (Exit Plan) र दिगोपन सुनिश्चित हुने गरी गरिनेछ ।

२.६.३ अन्तर्राष्ट्रिय र क्षेत्रीय प्राविधिक सहायता (International and Regional Technical Assistance) ।

२.६.३.१ राष्ट्रिय आवश्यकता र लाभका आधारमा कार्यान्वयन गर्ने निकायको सहमतिमा अन्तर्राष्ट्रिय र क्षेत्रीय स्वरूपका प्राविधिक सहायता स्वीकार गर्न सकिनेछ ।

२.६.३.२ घोषित उद्देश्यहरू हासिल भए, भएनन् भन्ने मूल्याङ्कन गर्न यस्ता प्राविधिक सहायताको आवधिक समीक्षा गरिनेछ ।

२.६.४ प्राविधिक सहायतासम्बन्धी परियोजनाको कार्यान्वयन सरकारी निकायहरूको संलग्नता र नेतृत्वमा समन्वय समिति (Steering Committee) गठन गरी गरिनेछ ।

२.६.५ सरकारले प्राविधिक सहायताको लागि ऋण सहायताको उपयोग गर्ने छैन ।

२.६.६ अर्थ मन्त्रालयको पूर्वस्वीकृति बिना कुनै पनि निकायबाट सोझै प्राविधिक सहायता स्वीकार गरिनेछैन ।

२.६.७ सबै प्राविधिक सहायताको विवरण सहायता सूचना प्रणाली (Aid Management Platform-AMP) मा दाताहरूले प्रविष्ट गर्नुपर्नेछ ।

२.६.८ अर्थ मन्त्रालयको पूर्वस्वीकृति बिना प्राविधिक सहायताबाट सवारी साधन, यन्त्र उपकरण खरिद वा वैदेशिक अध्ययन भ्रमण वा तालीममा भाग लिन पाइने छैन । यसका लागि अर्थ मन्त्रालयले मापदण्ड तयार गर्नेछ ।

२.७. परामर्शदाता परिचालन (Consultants Mobilization)

२.७.१ कुनै पनि परियोजनाहरू कार्यान्वयन गर्दा नियमित सरकारी कर्मचारीहरूबाट नै गर्नुपर्नेछ । यसअनुरूप गर्न नसकिने पुष्ट्याइँ भई आएको अवस्थामा मात्र परामर्शदाताको सेवा लिन सकिनेछ ।

२.७.२ परामर्शदाता परिचालन गर्दा नेपाली नागरिकलाई प्राथमिकता दिइनेछ ।

२.७.३ कुनै परियोजना/कार्यक्रमलाई अन्तर्राष्ट्रिय परामर्शदाता चाहिने भए सम्बन्धित निकायले लिखित कारणसहित औचित्यताको पुष्टि गरेमा स्वीकृति दिन सकिनेछ ।

२.७.४ परामर्श सेवाको लागि परियोजना दस्तावेजमै स्पष्ट सीमा-सर्त-क्षेत्राधिकार (Terms of Reference, ToR) सम्बन्धी कागजात संलग्न हुनुपर्नेछ ।

२.८ बाह्य स्वयंसेवक परिचालन (Volunteer Mobilization)

२.८.१ विकास साझेदार र अन्तर्राष्ट्रिय स्वयंसेवी संस्थाहरूबाट प्राविधिक सहायताको रूपमा सरकारले स्वयंसेवक (Volunteer) परिचालन गर्नेछ । यी स्वयंसेवकहरूलाई तिनको विशेषज्ञता र स्थानीय आवश्यकताअनुसार स्थानीय तहका विभिन्न कार्यक्रमहरूमा परिचालन गरिनेछ । बाह्य स्वयंसेवक परिचालन गर्दा राष्ट्रिय विकास स्वयंसेवामार्फत पनि सञ्चालन गर्न सकिनेछ । यस्तो सहायता प्रभावकारी र आवश्यकतामा आधारित बनाउन देहायबमोजिमका नीतिहरू अवलम्बन गरिनेछन् :

२.८.१.१ स्वयंसेवक परिचालन गर्न सरकारबाट प्राथमिकताका क्षेत्रहरू

पहिचान गरी त्यस्ता क्षेत्रमा स्वयंसेवक पठाउन विकास साझेदार र स्वयंसेवी संस्थाहरूलाई अनुरोध गरिनेछ ।

२.८.१.२ दिगोपनाको निम्ति स्वयंसेवकहरूलाई स्थानीय समकक्षी संस्था वा व्यक्तिहरूसँग संलग्न गराइनेछ ।

२.८.१.३ सम्बन्धित सरकारी निकायहरूले स्वयंसेवक सेवाको अनुगमन गर्नेछन् र सोको प्रतिवेदनसम्बन्धित मन्त्रालय, अर्थ मन्त्रालय र आवश्यकताअनुसार अन्य संस्थाहरूमा समेत पठाउने छन् ।

२.८.१.४ बाह्य स्वयंसेवक परिचालनका निम्ति अर्थ मन्त्रालय केन्द्रबिन्दु हुनेछ ।

२.९ नागरिक समाज र राष्ट्रिय/अन्तर्राष्ट्रिय गैरसरकारी संस्था (Civil Society and National/ International Non-Governmental Organization): नागरिक समाजका साथै राष्ट्रिय/अन्तर्राष्ट्रिय गैरसरकारी संस्थाले दुर्गम क्षेत्रमा प्रवाह गरेको सेवा र सामाजिक तथा मानवीय क्षेत्रको विकासमा पुऱ्याएको योगदानलाई सरकारले महत्व दिएको छ । द्विपक्षीय तथा बहुपक्षीय दातृ निकाय तथा अन्तर्राष्ट्रिय सङ्घ संस्थामार्फत सोझै विकास सहायता प्राप्त गर्ने यस्ता संस्थाहरूको सञ्चालन पद्धतिमा जवाफदेहिता र पारदर्शिता अभिवृद्धि गर्दै विकास सहायतालाई अझ बढी प्रभावकारी बनाउन जोड दिइनेछ । यसका लागि निम्नानुसारको नीति अवलम्बन गरिनेछ :

२.९.१ विकास सहायता परिचालन गर्ने गरी नेपालमा कार्यरत रहेका सबै राष्ट्रिय/अन्तर्राष्ट्रिय गैरसरकारी संस्था समाज कल्याण परिषद्सँग आबद्ध हुनेछन् ।

२.९.२ विकास सहायता परिचालन गर्न चाहने राष्ट्रिय/अन्तर्राष्ट्रिय गैरसरकारी संस्थाले समाज कल्याण परिषद्बाट पूर्व स्वीकृति लिनुपर्नेछ । त्यस्तो स्वीकृति परिषद्ले परियोजना विश्लेषण तथा सहजीकरण समितिको सिफारिसमा प्रदान गर्नेछ ।

२.९.३ राष्ट्रिय/अन्तर्राष्ट्रिय गैरसरकारी संस्थाहरूमार्फत परिचालन हुने कार्यक्रम स्वीकृतिको लागि सिफारिस गर्न अन्तर-मन्त्रालय समन्वय संयन्त्रको रूपमा महिला, बालबालिका तथा समाजकल्याण मन्त्रालय मातहत एक "परियोजना विश्लेषण तथा सहजीकरण समिति" को व्यवस्था गरिनेछ । समितिको कार्यसञ्चालन प्रक्रियालाई व्यवस्थित गर्न उक्त मन्त्रालयले निर्देशिका बनाई लागू गर्नेछ ।

२.९.४ राष्ट्रिय/अन्तर्राष्ट्रिय गैरसरकारी संस्थाहरूले कार्यान्वयन गर्ने परियोजनाका क्रियाकलापहरू नेपालको राष्ट्रिय विकास एवम् क्षेत्रगत प्राथमिकतासँग आबद्ध हुनुपर्नेछ । कार्यक्रम प्रस्तुत गर्दा मापनयोग्य नतिजा, समयसीमा र बहिर्गमन योजनासहितको स्पष्ट कार्ययोजना संलग्न गर्नुपर्नेछ ।

२.९.५ राष्ट्रिय/अन्तर्राष्ट्रिय गैरसरकारी संस्थाले विकास सहायता परिचालन गर्ने गरी परियोजना प्रस्ताव तयार गर्दा सम्बन्धित क्षेत्रगत मन्त्रालयको समन्वयमा गर्नुपर्नेछ ।

२.९.६ राष्ट्रिय/अन्तर्राष्ट्रिय गैरसरकारी संस्थाबाट परियोजना प्रस्ताव गर्दा संस्थाको मूल उद्देश्यबमोजिम विशिष्टिकृत कार्य क्षेत्रमा मात्र आयोजना प्रस्ताव गर्नुपर्नेछ ।

२.९.७ राष्ट्रिय/अन्तर्राष्ट्रिय गैरसरकारी संस्थाले परियोजना प्रस्ताव गर्दा आफूले कारोबार गर्न चाहेको बैंकको नाम, ठेगानासहितको विवरण उल्लेख गर्नुपर्नेछ ।

२.९.८ राष्ट्रिय/अन्तर्राष्ट्रिय गैरसरकारी संस्थाहरूले परियोजना कार्यान्वयनको सिलसिलामा आयोजना छनौट गर्दा सम्वन्धित स्थानीय निकायको नेतृत्वमा आयोजना हुने सहभागितामूलक योजना तर्जुमाप्रक्रिया अवलम्बन गर्नुपर्नेछ ।

२.९.९ राष्ट्रिय/अन्तर्राष्ट्रिय गैरसरकारी संस्थाहरूले परियोजना कार्यान्वयन गर्दा केन्द्रीयस्तरका परियोजनाको हकमा सम्बन्धित क्षेत्रगत मन्त्रालय र जिल्लास्तरका परियोजनाका हकमा जिल्लास्थित क्षेत्रगत कार्यालय एवम् जिल्ला विकास समिति र कार्यक्रम कार्यान्वयन हुने नगरपालिका वा गाउँ विकास समितिसँग समन्वय गरी गर्नुपर्नेछ ।

२.९.१० राष्ट्रिय/अन्तर्राष्ट्रिय गैरसरकारी संस्थाले नेपाललाई उपलब्ध गराउने भनी दातृ निकायबाट छुट्याइसकेको (Earmarked) रकममध्येबाट खर्च व्यहोर्ने गरी परियोजना प्रस्ताव गर्न सक्ने छैनन् ।

२.९.११ राष्ट्रिय/अन्तर्राष्ट्रिय गैरसरकारी संस्थाले स्थानीय तहका विकास साझेदारबाहेक अन्य अन्तर्राष्ट्रिय सङ्घ संस्थबाट आफ्नै प्रयासमा सोझै प्राप्त गर्ने सहायता राशी उपयोग हुने परियोजना प्रस्ताव गर्दा प्रस्ताव गरेको परियोजनासम्बन्धी विवरण र प्रस्ताव स्वीकृत भई सकेपछि सोको वित्तीय विवरण अर्थ मन्त्रालयमा रहेको सहायता सूचना प्रणाली

(Aid Management Platform) मा नियमितरूपमा प्रविष्ट गर्नुपर्नेछ ।

२.९.१२ राष्ट्रिय/अन्तर्राष्ट्रिय गैरसरकारी संस्थाका क्रियाकलापका विषयमा समाज कल्याण परिषद्ले वर्षेनी असोज मसान्तभित्र अर्थ मन्त्रालय, राष्ट्रिय योजना आयोग र सम्बन्धित मन्त्रालयलाई वित्तीय र भौतिक प्रगतिको विश्लेषणत्मक विवरण पठाउनेछ ।

२.९.१३ अर्थ मन्त्रालयले राष्ट्रिय/अन्तर्राष्ट्रिय गैरसरकारी संस्थामार्फत परिचालन हुने विकास सहायताको प्रभावकारी परिचालनको सुनिश्चितताको लागि परियोजना विश्लेषण तथा सहजीकरण समितिलाई आवश्यक निर्देशन जारी गर्न सक्नेछ ।

२.१० दाताहरूबाट सोझै कार्यान्वयन हुने विकास सहायता (Direct Implementation): नेपाल सरकारसँग सम्झौता भएका कतिपय आयोजनाहरू कार्यान्वयन गर्न राष्ट्रिय क्षमताको विकास नभइसकेको अवस्था र केही आयोजनाहरू विकास साझेदारहरूबाट निर्माण सम्पन्न गराई सरकारलाई हस्तान्तरण (Turn key) गर्नुपर्ने आवश्यकता रहेको सन्दर्भमा सोझै कार्यान्वयन हुने विकास सहायता पनि उपयोग गर्न सकिनेछ । यसका लागि निम्नानुसारको नीति लिइनेछ :

२.१०.१ जलविद्युत्, विद्युत् प्रसारण लाइन, राजमार्ग निर्माण, रणनीतिक सडक सञ्जाल, पुलहरू, रेल्वे, हवाई मैदान, ठूला सिँचाइ र सुख्खा बन्दरगाह, विशेष आर्थिक क्षेत्र जस्ता उच्च प्राथमिकताका मझौला तथा ठूला परियोजनाहरूमा दाताहरूबाट सोझै कार्यान्वयन हुने सहायता उपयोग गर्न सकिनेछ ।

२.१०.२ सोझै कार्यान्वयन हुने परियोजनाहरू राष्ट्रिय बजेट प्रणालीमा समावेश गर्नुपर्नेछ ।

२.१०.३ यस्तो ढाँचामा कार्यान्वयन हुने परियोजनाहरूको विवरण विकास साझेदारहरूले अर्थ मन्त्रालयमा रहेको सहायता व्यवस्थापन प्रणाली (Aid Management Platform, AMP) मा नियमितरूपमा प्रविष्ट गर्नुपर्नेछ ।

२.१०.४ दाताहरूबाट सोझै कार्यान्वयन हुने विकास सहायतासम्बन्धी परियोजनाको कार्यान्वयन सरकारी निकायको नेतृत्वमा गठित परियोजना समन्वय समिति (Project Steering

Committee) को निर्देशनअनुसार गरिनेछ ।

२.१०.५ यसरी कार्यान्वयन भएका परियोजनाहरूको खर्चको आवधिक विवरण दाताहरूले सम्बन्धित मन्त्रालय र अर्थ मन्त्रालयमा नियमितरूपमा पेस गर्नुपर्नेछ ।

२.११ मानवीय सहायता (Humanitarian Aid) : प्राकृतिक प्रकोप, महामारी, खाद्य असुरक्षा र कुपोषण, द्वन्द्व र शरणर्थी व्यवस्थापन जस्ता विषयहरू सम्बोधन गर्न मानवीय सहायता परिचालन गरिनेछ । मानवीय सहायताको व्यवस्थापन स्थापित अन्तर्राष्ट्रिय सिद्धान्तअनुसार हुनेछ । मानवीय सहायताको परिचालन निम्नानुसार हुनेछ :

२.११.१ असल मानवीय दाताका सिद्धान्त (Principles of Good Donorship)जस्ता अन्तर्राष्ट्रिय असल अभ्यास र सिद्धान्तहरूप्रति मानवीय सहयोगदाता प्रतिबद्ध रहनेछन् ।

२.११.२ मानवीय सहयोग दाताले राष्ट्रिय क्षमता अभिवृद्धि गर्दै सङ्कटको रोकथाम, न्यूनीकरण र सम्बोधन गर्न तयारी, सम्बोधन, पुनर्निर्माण र पुनर्स्थापना जस्ता चरणहरूमा सरकारसँग निकटमा रही कार्य गर्नेछन् ।

२.११.३ तोकिएको सरकारी निकायसँग समन्वय गरी मानवीय सहायता पारदर्शी ढङ्गले परिचालन गर्नुपर्नेछ ।

२.१२ अन्तर-सरकारी संयुक्त आर्थिक आयोग (Inter-Governmental Joint Economic Commission)

२.१२.१ अर्थ मन्त्रालयले इच्छुक राष्ट्रसँग आर्थिक साझेदारीका सम्भव्य क्षेत्रहरूको खोजी गर्नेछ । यस्तो साझेदारी पारदर्शी हुनेछ र पारस्परिक तथा तुलनात्मक लाभको आधारमा तय गरिनेछ । यसको कार्यान्वयन अन्तर-सरकारी आर्थिक आयोगहरूको गठन गरी गरिनेछ ।

२.१२.२ यस किसिमको साझेदारी विदेशी लगानी तथा प्रविधि हस्तान्तरण नीति, औद्योगिक नीति, व्यापार नीति र फराकिलो आर्थिक विकास, अन्तर्राष्ट्रिय आर्थिक सम्बन्ध विस्तार र राष्ट्रिय हित प्रवर्द्धन गर्ने, बैठक र अन्य प्रतिक्रियाहरू तथा अन्य नीतिहरू अनुकूल हुने गरी गरिनेछ ।

२.१३ दक्षिण-दक्षिण सहायता (South-South Cooperation): दक्षिण-दक्षिण सहायताको अवधारणाअनुरूप दक्षिण क्षेत्रका साझेदारहरूसँग उपयुक्तता र अनुभवका आधारमा सहायता आदानप्रदान गर्न र त्रिभुजीय सहायता (Triangular Cooperation) जस्ता सहायता संयन्त्रलाई आफ्नो हित अनुकूल हुने गरी उपयोग गर्ने नीति लिइनेछ। यसअन्तर्गत सार्क (SAARC), बिम्स्टेक (BIMSTEC), यूएनइस्क्याप, (UNESCAP), कोलम्बो प्लान (Colombo Plan) आदि जस्ता क्षेत्रीय संयन्त्रसँगको सहयोग अभिवृद्धि गर्न र अन्तर-सरकारी संयुक्त आर्थिक आयोगमार्फत सहायता परिचालनसमेत गर्न सकिनेछ।

२.१४ निजी क्षेत्रसँग साझेदारी (Partnership with Private Sector) सरकारले निजी क्षेत्रलाई विकासको साझेदारको रूपमा लिएको छ। सहायता प्रभावकारितासम्बन्धी बुसान दस्तावेजले पनि निजी क्षेत्रलाई विकासको साझेदार मानेको छ। निजी क्षेत्रको सन्दर्भमा विकास सहायता परिचालन गर्ने आधारभूत नीतिहरू निम्नानुसार हुनेछन् :

२.१४.१ सरकारले निजी क्षेत्रको लगानी आकर्षित गर्न पूर्वाधार निर्माण, लगानीमैत्री वातावरण सिर्जना तथा सार्वजनिक वस्तु (Public Goods) हरूको आपूर्तिमा विकास सहायताको उपयोग गर्नेछ।

२.१४.२ निजी क्षेत्रलाई छानिएका परियोजनामा सहलगानीका निम्ति प्रोत्साहित गरिनेछ। सार्वजनिक-निजी क्षेत्रको साझेदारी (PublicPrivate Partnership-PPP) को अवधारणालाई मद्दत पुग्ने गरी सहायताको परिचालन गरिनेछ।

२.१४.३ विकास सहायताको माध्यमबाट सरकार र निजी क्षेत्र बीचको संवाद कायम गर्न नेपाल व्यापार मञ्च जस्ता संयन्त्रलाई प्रोत्साहित गरिनेछ,

२.१४.४ विकास सहायता परिचालन गर्दा निजी क्षेत्रको लगानीलाई प्रतिकूल असर पारिनेछैन।

२.१५ व्यापारको लागि सहायता (Aid for Trade)

२.१५.१ विकास सहायतालाई व्यापार प्रवर्द्धन खास गरी निर्यात बढाउन मद्दत पुग्ने गरी परिचालन गरिनेछ।

२.१५.२ विकास सहायता परिचालनलाई व्यापारसम्बन्धी

अवरोध हटाई लगानीमैत्री वातावरण सिर्जना गर्न, भौतिक आधारशिलाको निर्माण गर्न, संस्थागत क्षमता अभिवृद्धि गर्न, गैरराजस्व अवरोधहरू (Non-Tarif Barriers) हटाउन र व्यापार सहजीकरणका अन्य उपायहरू अवलम्बन गर्न उपयोग गरिनेछ ।

२.१५.३ व्यापारसँग सम्बन्धित क्षेत्रहरूमा क्षमता विकासका निम्ति प्राविधिक सहायता परिचालन गर्न सकिनेछ ।

## भाग तीन
## कार्यान्वयन र समन्वय संयन्त्र

३.१ विकास सहायता नीति कार्यान्वयन समिति : यो विकास सहायता नीति कार्यान्वयनमा मार्गदर्शन गर्न एक उच्चस्तरको "विकास सहायता नीति कार्यान्वयन समिति" निम्नानुसार गठन हुनेछ :

| | |
|---|---|
| अर्थ मन्त्री | अध्यक्ष |
| उपाध्यक्ष, राष्ट्रिय योजना आयोग | उपाध्यक्ष |
| मुख्य सचिव, नेपाल सरकार | सदस्य |
| गभर्नर, नेपाल राष्ट्र बैंक | सदस्य |
| सचिव, अर्थ मन्त्रालय | सदस्य |
| सचिव, कानून, न्याय संविधानसभा तथा संसदीय मामिला मन्त्रालय | सदस्य |
| सचिव, परराष्ट्र मन्त्रालय | सदस्य |
| सचिव, महिला बालबालिका तथा समाज कल्याण मन्त्रालय | सदस्य |
| सचिव, राष्ट्रिय योजना आयोगको सचिवालय | सदस्य |
| महालेखा नियन्त्रक, महालेखा नियन्त्रकको कार्यालय | सदस्य |
| सहसचिव, अन्तर्राष्ट्रिय आर्थिक सहायता समन्वय महाशाखा, अर्थ मन्त्रालय | सदस्य-सचिव |

३.२ विकास सहायता नीति कार्यान्वयन समितिले सम्बद्धता र विशेषज्ञताको आधारमा नेपाल सरकारका अन्य मन्त्रालयका सचिव वा कुनै निकायका

प्रतिनिधि वा निजी क्षेत्र एवम् नागरिक समाजका प्रतिनिधिलाई पर्यवेक्षक वा आमन्त्रित सदस्यको रूपमा समितिका बैठकहरूमा आमन्त्रण गर्न सक्नेछ ।

३.३ विकास सहायता नीति कार्यान्वयन समितिले विकास सहायता नीतिको प्रभावकारी कार्यान्वयनमा मार्गदर्शन गर्नेछ । समितिका अध्यक्षले आवश्यकताअनुसार यो नीति कार्यान्वयनको प्रगति र कार्यान्वयनमा देखा परेका चुनौतीहरूबारे मन्त्रिपरिषद्लाई जानकारी गराउनेछन् । विकास सहायता नीति कार्यान्वयन समितिको सचिवालयको काम अर्थमन्त्रालयको अन्तर्राष्ट्रिय आर्थिक सहायता समन्वय महाशाखाले गर्नेछ । समितिले आफ्नो कार्यविधि आफैँ निर्धारण गर्नेछ । नीति कार्यान्वयनका सिलसिलामा आइपर्न सक्ने द्विविधा हटाउन समितिले यो नीतिको व्याख्या गर्न सक्नेछ ।

३.४ नेपाल सरकारलाई आवश्यक पर्ने विकास सहायता परिचालन गर्ने जिम्मेवारी अर्थ मन्त्रालयमा रहेको छ । सो मन्त्रालयअन्तर्गतको अन्तर्राष्ट्रिय आर्थिक सहायता समन्वय महाशाखा विकास सहायता समन्वयको केन्द्रबिन्दु (Focal point) रहने छ । कुनै पनि सरकारी निकायबाट अर्थ मन्त्रालयको पूर्वस्वीकृति बेगर वैदेशिक सहायताको खोजी गर्ने वा सहायताको लागि अनुरोध गर्ने, प्रस्ताव राख्ने, प्राथमिकतासम्बन्धी जानकारी दिने, आयोजनाको अवधारणा पत्र एवम् प्रस्तावसहित पत्राचार गर्ने तथा समझदारीपत्र वा सम्झौतामा हस्ताक्षर गर्नेजस्ता कुनै पनि कार्य गरिनेछैन । साथै विकास साझेदारहरूले पनि सहायता प्रस्ताव गर्दा वा सहायता परिचालनसम्बन्धमा नेपाल सरकारका कुनै पनि निकायसँग पत्राचार गर्दा अर्थ मन्त्रालयमार्फत मात्र गर्नुपर्ने छ । नेपाल सरकारका निकायहरूले विकास आयोजनाहरूको प्रस्ताव गर्दा राष्ट्रिय योजना आयोगको सहमति लिनुपर्नेछ ।

३.५ अर्थ मन्त्रालयको पूर्वस्वीकृति बेगर विकास सहायता संलग्न कार्यक्रम र आयोजनाबाट खर्च व्यहोर्ने गरी र राष्ट्रिय तथा अन्तर्राष्ट्रिय गैरसरकारी संस्था, स्वदेशी तथा विदेशी परामर्शदाता/ठेकेदारको निमन्त्रणमा सार्वजनिक पद धारण गरेको कुनैपनि तहको पदाधिकारीबाट वैदेशिक भ्रमण गर्न पाइनेछैन ।

३.६ सरकार-विकास साझेदार संयुक्त संयन्त्र

३.६.१ नेपाल विकास मञ्च (Nepal Development Forum) नेपाल विकास मञ्च नेपाल सरकार र विकास साझेदारबीच आवधिक योजना, विकास रणनीति, प्राथमिकता र राष्ट्रिय विकास नतिजा खाका जस्ता विषयमा छलफल हुने उच्च तहको संवाद मञ्च हो । यो मञ्चले सरकार र विकास साझेदारले संयुक्त रूपमा अघि बढाएका नीति र सुधारका कार्य योजनाको समीक्षा गर्नेछ । मञ्चले नेपालमा विकास सहायताको प्रभावकारिता, पूर्वानुमान र दाताहरूबाट हुने सहयोगका प्रतिबद्धताको घोषणा (Pledging) का विषयमा समेत छलफल गर्दछ । यो मञ्चले सरकार र विकास साझेदारसँगै बसी वृहत्तररूपमा सहायता परिचालन नीतिमा छलफल गर्ने र परियोजना/कार्यक्रमको कार्यान्वयनमा सुधार ल्याउन कार्यक्रमको घोषणा गर्नेछ । नेपाल विकास मञ्चको बैठक आवश्यकताअनुसार आयोजना गरिनेछ ।

३.६.२ स्थानीय विकास साझेदार बैठक (Local Development Partners Meeting) : स्थानीय विकास साझेदार बैठक सामान्यतया: प्रत्येक चार महिनाको अन्तरालमा आयोजना गरिनेछ । यो संयन्त्रले स्थानीयरूपमा कार्यरत विकास साझेदार र सरकारका बीच विकास सहायता नीति कार्यान्वयन एवम् सहायता परिचालनसम्बन्धमा आइपर्ने समस्याका विषयमा नियमित संवाद र समन्वय गर्ने मञ्चको रूपमा कार्य गर्दछ ।

३.६.३ आयोजना कार्यान्वयन प्रगति समीक्षा संयन्त्र (Nepal Portfolio Performance Review) यो बैठक सरकारको नेतृत्वमा वर्षको एक पटक बस्दछ । यसमा सबै विकास साझेदारहरूले स्वेच्छिकरूपमा भाग लिन पाउनेछन् । बैठकमा विकास साझेदारको सहयोगमा नेपालमा सञ्चालित कार्यक्रम/परियोजना कार्यान्वयनका विषयहरूमा समीक्षा गरी आयोजना कार्यान्वयनलाई सघाउ पुऱ्याउने गरी सुधारको कार्ययोजना तयार गरिनेछ । साथै, यो मञ्चले स्थानीय विकास साझेदार र सरकारबीच पारस्पारिक जवाफदेहिता (Mutual Accountability) अभिवृद्धि गर्ने संयन्त्रको रूपमा पनि कार्य गर्नेछ ।

३.७ संयुक्त क्षेत्रगत समीक्षा (Joint Sectoral Review) सरकार र विकास साझेदारबीच क्षेत्रगत योजना, नीति र कार्यक्रमहरूको कार्यान्वयन, अनुगमन र समन्वयका लागि यस्ता बैठकहरू बस्नेछन् । क्षेत्रगत मन्त्रालयहरूले यस्ता बैठकहरूको नेतृत्व गर्नेछन् ।

३.८ स्थानीयस्तरको संयुक्त समीक्षा (Joint Local Level Review)

३.८.१ स्थानीय निकायहरूले कार्यान्वयन गरेका विकास कार्यक्रमहरूको सम्बन्धमा समीक्षा गर्न स्थानीयस्तरमा संयुक्त समीक्षा गरिनेछ । सामान्यतयाः यस्तो समीक्षाको समन्वय जिल्ला विकास समितिले गर्नेछ ।

३.८.२ सहायता प्रभावकारिताका विषयमा स्थानीयस्तरमा सुल्झन नसकेका विवादहरूको समाधान र निर्देशनका लागि अर्थ मन्त्रालयमा जानकारी गराउनु पर्नेछ । यसको लागि सामान्य मार्गदर्शन अर्थ मन्त्रालयको अन्तर्राष्ट्रिय आर्थिक सहायता समन्वय महाशाखाले गर्नेछ ।

३.९ विकास साझेदारहरूको जिम्मेवारी

३.९.१ विकास साझेदारहरूले विकास सहायतालाई राष्ट्रिय विकास योजना र प्राथमिकतासँग आबद्ध गराउनुपर्नेछ ।

३.९.२ विकास साझेदारहरू नेपालले नेतृत्व लिएको समन्वय संयन्त्रमा सहभागी हुनेछन् ।

३.९.३ विकास साझेदारहरूले सम्भव भएसम्म निःसर्त सहायता प्रवाहित गर्नेछन् ।

३.९.४ सबै खालका विकास सहायतालाई राष्ट्रिय र क्षेत्रगत विकास ढाँचासँग आबद्ध गरी स्पष्ट नतिजा प्राप्त हुने किसिमले परिचालन गर्न विकास साझेदारहरूले प्राथमिकता दिनेछन् ।

३.९.५ विकास साझेदारहरूले सबै किसिमका सहायतासम्बन्धी सूचनाहरू पूर्वानुमान गर्न सकिने गरी अग्रीमरूपमा सहायता सूचना प्रणाली (Aid Management Platform-AMP) मा उपलब्ध गराउनेछन् ।

३.९.६ विकास साझेदारले सहायताको कारोबार खर्च घटाउन सहायताको खण्डीकरण रोक्ने काममा सघाउने छन् र विगतको क्षेत्रव्यापी सहायता कार्यक्रम (SWAp) कार्यान्वयनको अनुभवका आधारमा अन्य क्षेत्रमा पनि विस्तार गर्न सघाउ पुऱ्याउनेछन् ।

३.९.७ विकास साझेदारले नेपाललाई प्रदान गर्ने विकास सहायताको परिचालन नेपालको राष्ट्रिय बजेट प्रणालीमार्फत गर्न प्राथमिकता दिनेछन् ।

३.९.८ राष्ट्रिय प्रणालीको परिधिभन्दा बाहिर गएर समानान्तर कार्यान्वयन एकाइ खडा गरी सरकारी संस्थाको भूमिका र क्षमतालाई न्यून पार्ने काम गर्ने छैनन् ।

३.९.९ विकास साझेदारले संयुक्त मिसन र संयुक्त विश्लेषणात्मक अध्ययनको कार्यलाई प्रभावकारी बनाउनेछन् ।

३.९.१० विकास साझेदारहरूले विकास सहायता प्रवाह गर्दा अर्थ मन्त्रालयमार्फत मात्र गर्नेछन् ।

३.१० विकास साझेदारहरूको कार्यक्षेत्र विभाजन (Division of Works): विकास साझेदारहरूले आ-आफ्नो तुलनात्मक विशेषज्ञता (Comparative Expertise), र विगतको संलग्नताका आधारमा आपसी सहमतिमा सहयोगका विषयगत क्षेत्रहरू विभाजन गरी सहायता प्रदान गर्नेछन् ।

३.११ सहायता प्रभावकारिता र सुधारप्रति सरकारको प्रतिबद्धता

३.११.१ सरकारले सहायता परिचालन गर्दा समावेशी विकास, सहायताको पारदर्शिता, दक्षिण-दक्षिण सहायता, नागरिक समाजको संलग्नता, लैङ्गिक समानता, जलवायु परिवर्तन, प्रकोप न्यूनीकरण र उत्तम नतिजालाई महत्त्व दिनेछ ।

३.११.२ सरकारले विकास सहायता परिचालन गर्दा सुशासन (Good Governance) को प्रत्याभूति र भ्रष्ट्राचारविरुद्ध शून्य सहनशीलता (Zero tolerance) को नीति अवलम्बन गर्नेछ ।

३.११.३ सरकारले पूर्वाधार विकासमा प्रत्यक्ष सरोकार राख्ने नेपाल सरकारका निकाय वा सोसँग आबद्ध संस्थाहरूमा संस्थागत सुधार एवम् क्षमता विकासका कार्यक्रमहरू लागू गर्नेछ ।

३.११.४ नेपाल अन्तर्राष्ट्रिय सहायता प्रभावकारिताको साझेदारी र अनुगमनमा सहभागी हुन प्रतिबद्ध छ ।

३.११.५ सरकारले सम्भाव्य वित्तीय जोखिम कम गर्न र खरिद प्रणालीसहित सार्वजनिक वित्तीय व्यवस्थापन (Public Financial Management) मा सुधार गर्न कार्यक्रमहरू लागू गर्नेछ ।

३.११.६ राष्ट्रिय क्षमता वृद्धि गरी आयोजनाको कारोबार खर्च (Transaction Cost) घटाउन र दिगोपन कायम गर्न सरकार कटिबद्ध छ ।

३.११.७ विकास साझेदारहरूसँग सहकार्य गरी सहायता कार्यान्वयनमा

सुधार ल्याइनेछ ।

३.११.८ दोश्रो सार्वजनिक खर्च र वित्तीय जवाफदेहिता (Public Expenditure and Financial Accountability-PEFA) मूल्याङ्कनका सुझावहरू कार्यान्वयन गर्न सरकार प्रतिबद्ध छ ।

३.११.९ सार्वजनिक सेवा प्रवाहको प्रक्रियालाई सरलीकरण गर्न र खर्चको गुणस्तरमा सुधार ल्याउन सरकार प्रतिबद्ध छ ।

३.११.१० पारदर्शिता र जवाफदेहिता सुनिश्चित गर्न सरकारले सहायता व्यवस्थापन सूचना प्रणाली (Aid Management Platform-AMP) मा उपलब्ध सहायतासम्बन्धी सूचना सार्वजनिक रूपमा उपलब्ध गराउनेछ ।

## भाग चार

## करछुट तथा प्रवेशाज्ञासम्बन्धी व्यवस्था

१. विकास सहायताको रकम कर तिर्ने प्रयोजनको लागि उपयोग गरिनेछैन ।

२. सम्झौतामा भएको करछुटको व्यवस्थाबमोजिम कर प्रयोजनको लागि आवश्यक पर्ने रकम नेपाल सरकारको आन्तरिक स्रोतबाट व्यहोर्ने प्रबन्ध मिलाइनेछ ।

३. सम्झौतामै उल्लेख भएको अवस्था र आन्तरिक स्रोतबाट प्रवन्ध गर्न नसकिएका परियोजनाहरूको हकमा प्रचलित कानुनको अधीनमा रही कर छुट प्रदान गर्न सकिनेछ । तर स्थानीय खरिदमा तिरेको मूल्य अभिवृद्धि करछुटको लागि भने मूल्य अभिवृद्धि कर ऐनबमोजिम कर फिर्ता प्रक्रिया अवलम्बन गरिनेछ ।

४. आय तथा मुनाफामा लाग्ने कर विकास सहायताको अंश नमानिने हुँदा यस सम्बन्धमा प्रचलित करसम्बन्धी कानुन लागू हुनेछ ।

५. विकास सहायता संलग्न भएको आयोजनामा काम गर्ने विदेशी कामदार, कर्मचारी र तिनका आश्रितलाई निःशुल्क गैरपर्यटकीय प्रवेशाज्ञा उपलब्ध गराइनेछ ।

६. छुट्टै सम्झौताअन्तर्गत नेपालमा काम गर्ने विदेशी स्वयंसेवकहरूलाई निःशुल्क गैरपर्यटकीय प्रवेशाज्ञा उपलब्ध गराइनेछ ।

## भाग पाँच

## आगामी कार्यदिशा

१. विकास सहायताको परिचालन आर्थिक-सामाजिक विकासका लागि तत्काल रहेको साधनको न्यूनता पूर्ति गर्नको लागि गरिनेछ । राष्ट्रिय प्राथमिकतामा आधारित रहेर छनौटपूर्ण तरिकाले यसको उपयोग गर्न र सहायता परिचालन गर्दा मुलुकको आन्तरिक राजस्व अभिवृद्धिमा योगदान पुग्ने र आत्मनिर्भर अर्थतन्त्र निर्माण हुने गरी गरिनेछ । प्रस्तुत नीति मातहत रही विकास सहायताको प्रभावकारी परिचालनबाट नेपालले लिएको लक्ष्यअनुसार सन् २०२२ सम्ममा अति कम विकसित राष्ट्रहरूको सूचीबाट मुक्त हुन सकिनेछ । फलस्वरूप विकास सहायता प्रतिको निर्भरता क्रमशः घटाउँदै आत्मनिर्भर अर्थतन्त्र निर्माणतर्फ अगाडि बढ्न सकिनेछ ।

२. यो नीति कार्यान्वयनको आवधिक मूल्याङ्कन गरिनेछ । मूल्याङ्कनबाट प्राप्त सुझावको आधारमा यो नीतिमा सामयिक परिमार्जन गर्दै लगिने छ ।

## भाग छ

## खारेजी र बचाउ

१. विकास सहायता नीति, २०७१ लागू भएको मितिबाट वैदेशिक सहायता नीति, २०५९ खारेज गरिएको छ ।

२. वैदेशिक सहायता नीति, २०५९ बमोजिम भए गरेका सम्पूर्ण कार्यहरू यसै नीतिअन्तर्गत भए गरेको मानिनेछ ।

# भू-उपयोग नीति, २०७२

**१. पृष्ठभूमि**

राज्यको सीमित भूमि र भूमिश्रोतको संरक्षण, समुचित उपयोग र प्रभावकारी व्यवस्थापनसम्बन्धी कार्यलाई मार्ग निर्देशन गर्न तर्जुमा गरिएको नीतिगत दस्तावेज भू-उपयोग नीति हो । भूमि तथा भूमिश्रोतको संरक्षण, उपयोग र व्यवस्थापनका लागि आवश्यक पर्ने कानुनी एवम् संस्थागत व्यवस्था यसै नीतिको आधारमा गरिन्छ । यस नीतिले भूमि तथा भूमिश्रोतको उपयोगबाट प्राप्त हुने लाभलाई न्यायोचित ढङ्गबाट विवरण गर्न सक्ने अवस्था सिर्जना गर्दछ ।

नेपालको सन्दर्भमा बढ्दो जनसङ्ख्या, आन्तरिक बसाइँ सराइ, अव्यवस्थित र बढ्दो शहरीकरणलगायतका कारणले कृषियोग्य जमिन, वनजङ्गल, सरकारी, सार्वजनिक जग्गा तथा विभिन्न प्राकृतिक श्रोतहरूका अतिक्रमण हुन गई सोको संरक्षण गर्ने कार्य चुनौतीपूर्ण बन्दै गएको छ । भौगोलिक र भौगर्भिक अवस्था एवम् पर्यावरणीय परिवर्तनको असरले भूक्षयीकरण बाढी पहिरो जस्ता विपद्हरूको जोखिम बढिरहेको छ । यसबाट खाद्यसुरक्षा सुरक्षित बसोबास, वातावरणीय सन्तुलन र दिगो विकासमा चुनौती देखापरेको छ । यस प्रकारका जोखिम र चुनौतीको व्यवस्थापन गर्न नेपाल सरकार मन्त्रिपरिषद्बाट वि.सं. २०६९ सालमा राष्ट्रिय भूउपयोग नीति, २०६९ जारी गरियो ।

राष्ट्रि भू-उपयोग नीति, २०६९ ले खाद्य सुरक्षाको सुनिश्चितताको लागि कृषियोग्य भूमिको संरक्षणलाई प्राथमिकता दिएको छ । २०७२ साल वैशाख १२ गतेको विनासकारी भूकम्प र तत्पश्चात्का पराकम्पहरूले जोखिमरहित एवं सुरक्षित बसोबास व्यवस्थापन गर्ने विषयलाई उजागर गरेको छ। साथै प्राकृतिक विपद्जन्य क्षेत्रहरूको पहिचान गरी ती क्षेत्रहरूमा निर्देशित क्रियाकलाप मात्र सञ्चालनन गर्नुपर्ने चेतना पैदा गरेको छ। भौतिक पूर्वाधारहरूको विकास गर्दा भूकम्पलगायतका प्राकृतिक विपद् र मानव सिर्जित जोखिहरूको सम्भावनालाई समेत ध्यान दिनुपर्ने आवश्यकता महसुस भएको छ । यी सबै समसामयिक विषयहरूलाई दीर्घकालीन रूपमा सम्बोधन गर्न राष्ट्रिय भू-उपयोग नीति, २०६९ लाई पुनरावलोकन गरी भू-उपयोग नीति, २०७२ तर्जुमा गरिएको छ ।

## २. समस्या, चुनौती र अवसर

### २.१ समस्या

क) कृषियोग्य भूमिको गैरकृषि प्रयोजनमा बढ्दो प्रयोग, अधिकांश कृषियोग्य भूमि बाझै रहनु, अनियन्त्रित खण्डीकण बढ्दै जानुले कृषि उत्पादन र उत्पादकत्त्वमा ह्रास आउँदा खाद्य सुरक्षामा प्रतिकूल प्रभाव परेको ।

ख) भूमिको वैज्ञानिक वर्गीकरण, विकास र व्यवस्थापन हुन नसक्दा जनधनको संरक्षण र विपद् व्यवस्थापन कार्य जटिल बन्दै गएको ।

ग) आन्तरिक बसाइ सराइ अव्यवसिथत बसोबास र शहरीकरणका कारण कृषियोग्य भूमि घट्दै गएको, सरकारी सार्वजनिक र वनक्षेत्रका जग्गामा अतिक्रमण गर्ने प्रवृत्ति बढ्दै गएको ।

घ) वातावरण प्रदूषण र जलवायु परिवर्तनका कारण भूक्षय, बाढी, पहिरो, मरुभूमिकरणलगायतका विपद् बढ्न गई वातावरण विनाश र जैविक विविधतामा असन्तुलन र वन जङ्गललगायतका प्राकृतिक स्रोतमा ह्रास हुँदै आएको ।

ङ) हिमाली उच्च पहाडी र चुरे क्षेत्रको उचित संरक्षण हुन नसक्दा सो क्षेत्रलगायत तल्लो तटीय क्षेत्रमा नकारात्मक प्रभाव देखिन थालेको ।

च) शहरी क्षेत्रमा खुला स्थानको अभाव हुँदै गएको ।

### २.२ चुनौती

क) भूमिको वैज्ञानिक वर्गीकरण गरी निर्दिष्ट उपयोगमा भूमिको समुचित उपयोग गर्ने पद्धति विकास गर्ने ।

ख) भूमि र भूमिस्रोतको दिगो उपयोग र व्यवस्थापन बहुसरोकारको विषय भएकोले सरोकारवाला निकायको संस्थागत र समन्वयात्मक क्रियाशीलता सुनिश्चित गर्ने ।

ग) कृषियोग्य भूमिको संरक्षण र व्यवस्थापन गरी कृषि उत्पादन र उत्पादकत्व वृद्धि गर्दै खाद्य सुरक्षाको प्रत्याभूति गर्ने ।

घ) स्वच्छ, सुन्दर सुविधा सम्पन्न सुरक्षित बस्ती विकास योजनाबद्ध र दिगो शहरीकरण तथा भौतिक पूर्वाधार विकासको लागि भूमिको समुचित उपयोग गर्ने ।

ङ) जलवायु परिवर्तन असर, प्राकृतिक विपद् र मानव सिर्जित जोखिम न्यूनीकण जैविक विविधता र वातावरण संरक्षणका लागि वन जङ्गल एवं हरित क्षेत्र, मनोरञ्जनस्थल एवं खुला क्षेत्र, जल एवं सिमसार क्षेत्रको संरक्षण र विकास तथा व्यवस्थापन गर्ने ।

च) सम्पूर्ण भू-भागको कित्तानापी सम्पन्न गरी भूमि लगत तयार गर्ने कार्य बाकी रहेको सन्दर्भमा भू-उपयोग क्षेत्र वर्गीकरण गरी प्रत्येक कित्तामा निर्दिष्ट भू-उपयोग क्षेत्र उल्लेख गर्ने ।

छ) भू-उपयोग कार्यान्वयनको लागि कानुन तर्जुमा र सङ्गठन संरचना निर्माण गरी प्रभावकारी रूपमा लागू गर्ने ।

**२.३ अवसर**

क) कृषियोग्य भूमिको संरक्षण एवं समुचित उपयोग गरी खाद्य सुरक्षा सुनिश्चित गर्न राजनीतिक दलहरू, नागरिक समाजलगायत सबै सरोकारवालाहरूको प्रतिबद्धता बढेको ।

ख) बाढी पहिरो र भूकम्पलगायतका प्राकृतिक विपद् तथा मानव सिर्जित जोखिमबाट स्वच्छ सुन्दर सुविधा सम्पन्न बस्ती विकास योजनाबद्ध र दिगो शहरीकरण गर्नेतर्फ आम चासो रहेको ।

ग) भूमिश्रोत र प्राकृतिक सम्पदाहरूको संरक्षण र विकास गर्न स्थानीयस्तरमा चेतनाको स्तर उत्साहजनक रहेको ।

घ) प्रविधियुक्त भू-उपयोग सूचना प्रणालीको विकास र पहुँच स्थापना गरी भूमिको वर्गीकरण, भू-उपयोग योजना तर्जुमा तथा कार्यान्वयन गर्ने अवसर सिर्जना भएको ।

ङ) विनाशकारी भूकम्पपश्चात् भू-उपयोग नीतिको समन्वयात्मक रूपमा प्रभावकारी कार्यान्वयन गर्ने अवसर सिर्जना भएको ।

च) भूमि र भूमिश्रोतको समुचित उपयोग र व्यवस्थापनबाट वातावरण र भौतिक पूर्वाधार विकासबीच सन्तुलन कायम राख्दै दिगो विकासका लक्ष्य हासिल गरी मुलुकलाई समृद्ध बनाउने अवसर रहेको ।

**३. नीति तर्जुमाका प्रमुख आधारहरू**

क) संवैधानिक आधार

भू-उपयोग नीतिको अवलम्बन गरी भूमिको व्यवस्थापन र कृषिको व्यावसायिकरण, औद्योगिकीकरण, विविधीकरण र आधुनिकीकरण गर्ने भन्ने नेपालको संविधानको भाग ४ राज्यका निर्देशक सिद्धान्त तथा दायित्वअन्तर्गत धारा ५१ को खण्ड (ङ) कृषि र भूमिसुधारसम्बन्धी नीतिको उप खण्ड(३) को भावना र मर्मलाई भू-उपयोग नीति तर्जुमाको मुख्य आधारका रूपमा लिइएको ।

ख) भू-उपयोग क्षेत्र वर्गीकरणको सिद्धान्त

भूउपयोग क्षेत्र निर्धारण गर्दा परम्परा सहयोगी भू-उपयोगलाई प्रोत्साहित गर्ने Promotion complementary land use प्रतिस्पर्धी भू-उपयोगलाई सन्तुलित राख्ने Maintaining competitive land use र परस्पर विरोधी भू-उपयोगलाई निरुत्साहित गर्ने Avoiding conflicting land use सिद्धान्तलाई भू-उपयोग क्षेत्र वर्गीकरणको आधार लिइएको छ ।

ग) राष्ट्रिय आवश्यकता

भूमि र भूमिश्रोतको समुचित प्रयोगबाट वातवाण र विकासबीच सन्तुलन कायम राखी वातावरण मैत्री विकास निर्माण कार्य सुनिश्चित गर्न स्वच्छ, सुन्दर, सुविधा सम्पन्न बस्ती विकास गर्न योजनाबद्ध र दिगो शहरीकरण गर्न राष्ट्रको समग्र क्षेत्रगत विकास योजनाहरूलाई तहगत भू-उपयोग योजनाका आधारमा तर्जुमा र कार्यान्वयन गरी दिगो र समावेशी आर्थिक वृद्धि हासिल गर्न ।

घ) अन्तर्राष्ट्रिय प्रतिबद्धता

अन्तर्राष्ट्रिय प्रतिबद्धताअनुसार दिगो विकासका लक्ष्यहरू प्राप्त गर्न संयुक्त राष्ट्र सङ्घद्वारा परिलक्षित सबैका लागि सुरक्षित, मर्यादित र सुविधा सम्पन्न आवासको व्यवस्था गर्न, जैविक विविधता संरक्षण गर्न, मरुभूमीकरणविरुद्धको अभियान सञ्चालन गर्न र जलवायु परिवर्तनबाट हुने जोखिमहरू न्यूनीकरण गर्न आवश्यक तयारी गर्न ।

ङ) मन्त्रिरिषद् /आयोग/ समितिका मार्ग निर्देशन तथा सुझाव

अ) व्यवस्थापिका संसद्को बैठकबाट २०७२ वैशाख ३० गतेको सङ्कल्प प्रस्तावका आधारमा नेपाल सरकारले तर्जुमा गरेको “भूकम्पोत्तर प्रतिकार्य तथा पुनर्लाभ एकीकृत कार्ययोजना २०७२ को बुँदा नं. २१ अनुसार राष्ट्रिय भू-उपयोग नीति, २०६९ को पनरावलोकन गर्नेसम्बन्धी निर्देशन ।

आ) व्यवस्थापिका संसद् कृषि तथा जलस्रोत समितिको मिति २०७२/२/२९ को राष्ट्रिय भू-उपयोग नीति, २०६९ पुनरावलोकन गर्नेसम्बन्धी निर्देशन ।

इ) विगतका उच्चस्तरीय भूमिसुधार आयोगहरूका प्रतिवेदनमा उल्लिखित भू-उपयोग तथा भूमि व्यवस्थापनसम्बन्धी सुझावहरू ।

च) भूमिसुधार तथा व्यवस्था मन्त्रालयको दीर्घकालीन मार्गचित्र

खाद्य सुरक्षा, सुरक्षित बसोबास र सन्तुलित वातावरणीय विकासको

सुनिश्चिततताका लागि भूमि तथा भूमिस्रोतको समुचित उपयोग र दिगो व्यवस्थापन गर्ने सन्दर्भमा भूमिसुधार तथा व्यवस्था मन्त्रालयले लिएको दीर्घकालीन मार्गचित्र ।

**४. नीतिको सङ्क्षिप्त नाम र प्रारम्भ**

१. यस नीतिको नाम "भू-उपयोग नीति, २०७२" रहेको छ ।

२. यो नीति नेपाल सरकार मन्त्रिपरिषदबाट स्वीकृत भएको मितिदेखि लागू हुनेछ ।

**५. दीर्घकालीन दृष्टिकोण**

उपलब्ध भूमि र भूमिश्रोतको समुचित Optimum उपयोग गरी दिगो रूपमा सामाजिक, आर्थिक तथा वातावरणीय विकास र समृद्धि हासिल गर्ने ।

**६. लक्ष्य**

भू-उपयोग योजनाबाट निर्देशित भू-उपयोग पद्धतिको विकास गर्दै भूमिको दिगो व्यवस्थापन गर्ने ।

**७. उद्देश्य**

१. राष्ट्रको समग्र भूमिलाई विभिन्न भू-उपयोगका क्षेत्रहरू Land Use Zone मा वर्गीकरण गर्ने ।

२. तहगत (सङ्घीय, प्रादेशिक र स्थानीय) भू-उपयोग योजना Land Use Plan तर्जुमा गर्ने ।

३. कृषिभूमिको संरक्षण, स्वच्छ, सुन्दर, सुविधा सम्पन्न बस्ती विकास र दिगो योजनाबद्ध शहरीकरण, वन क्षेत्र, प्राकृतिक सम्पदा, जैविक विविधता एवम् ऐतिहासिक, सांस्कृतिक, धार्मिक पुरातात्त्विक तथा सामरिक महत्वका क्षेत्रको संरक्षणका लागि भू-उपयोग योजनाको आधारमा भूमि तथा भूमिश्रोतको उपयोग सुनिश्चित गर्ने ।

४. प्राकृतिक र मानव सिर्जित प्रकोपजन्य जोखिमहरूको न्यूनीकरण गर्ने ।

५. कित्तामा आधारित भूमि लगत तयार गरी निर्दिष्ट उपयोगको आधारमा भूमिको न्यूनतम मूल्याङ्कन एवम् प्रगतिशील कर प्रणाली निर्धारण गरी कार्यान्वयन गर्ने ।

## ८. नीति तथा रणनीति

उल्लिखित दीर्घकालीन दृष्टिकोण, लक्ष्य तथा उद्देश्य हासिल गर्न देहायका नीति तथा रणनीति अवलम्बन गरिनेछ :

**नीति** १ : राष्ट्रको समग्र आधारभूत रूपमा देहायका विभिन्न भू-उपयोगका क्षेत्रहरू Land Use Zone मा वर्गीकरण गरिनेछ । भू-उपयोगका क्षेत्रहरूलाई आवश्यकताअनुसार उपक्षेत्रहरूमा वर्गीकरण गरिनेछ ।

क) कृषि क्षेत्र

ख) आवासीय क्षेत्र

ग) व्यावसायिक क्षेत्र

घ) औद्योगिक क्षेत्र

ङ) खानी तथा खनिज क्षेत्र

च) सांस्कृतिक तथा पुरातात्त्विक क्षेत्र

छ) नदी तथा ताल तलैया क्षेत्र

ज) वन क्षेत्र

झ) सार्वजनिक उपयोग तथा खुला क्षेत्र

ञ) निर्माण सामग्री (ढुङ्गा, बालुवा, गिटी) उत्खनन क्षेत्र

ट) आवश्यकताअनुसार तोकिएका अन्य क्षेत्र ।

स्पष्टीकरणः विनाशकारी स्वरूपका भूकम्प, बाढी, पहिरोलगायतका प्राकृतिक विपद्ले एकभन्दा बढी भू-उपयोगका क्षेत्रहरूमा प्रतिकूल असर पार्ने भएकोले भौगर्भिक अध्ययनका आधारमा जोखिम क्षेत्रको पहिचान गरी बस्ती, शहर वा पूर्वाधार विकास निर्माणलाई भूकम्प प्रतिरोधात्मक तवरबाट दिगो रूपमा सुरक्षित तुल्याउन यस्ता जोखिम क्षेत्र भू-उपयोग नक्सामा जनाइनेछ ।

रणनीति १. भू-उपयोग क्षेत्र निर्धारण Land Use Zoning का मुख्य आधारहरू देहायबमोजिम हुनेछन्:

क) भू-बनौट क्षमता र उपयुक्तताको आधार

भू-बनौट (भौगोलिक एवम् भौगर्भिक) क्षमता र उपयुक्ततालाई भू-उपयोग क्षेत्र निर्धारणको प्रमुख आधार मानिनेछ ।

ख) मौजुदा भू-उपयोगको आधार

स्थान विशेषको हाल मौजुदा भू-उपयोग, भू

बनौट, क्षमता र उपयुक्तताअनुसार रहेको भएमा सो स्थानको हकमा सोही आधारमा भू-उपयोग क्षेत्र निर्धारण गरिनेछ।

ग) आवश्यकताको आधारः

राज्यले सार्वजनिक हित तथा भौतिक पूर्वाधार विकासको लागि कुनै जग्गालाई निर्दिष्ट उपयोगभन्दा फरक उपयोगमा प्रयोग गर्नुपर्ने अवस्था आएमा सोबमोजिम उपयोग गर्न सक्ने गरी भू-उपयोग क्षेत्र निर्धारण गरिनेछ।

रणनीति २. शहरी क्षेत्रमा तुलनात्मक संवेदनशीलतालाई ध्यानमा राखी सुक्ष्म वर्गीकरण Micro zoning गरी भू-उपयोगका उप क्षेत्र निर्धारण गरिनेछ।

**नीति २:** सङ्घीय संरचना अनुकूल तहगत (सङ्घीय, प्रादेशिक र स्थानीय) भू-उपयोग योजनाहरू तर्जुमा गरी लागू गरिनेछ।

रणनीति १. सङ्घीय भू-उपयोग योजना Federal Land Use Plan तर्जुमा गर्दा राष्ट्रिय प्राथमिकता र नीतिअनुरूप तर्जुमा गरिनेछ।

रणनीति २. सङ्घीय भू-उपयोग योजनालाई मार्ग निर्देशनका रूपमा लिई क्षेत्रगत र विषयगत योजनाहरू तर्जुमा र कार्यान्वयन गरिनेछ।

रणनीति ३. भू-उपयोग योजना तर्जुमा गर्दा देहायका विषयहरूमा ध्यान दिइनेछ :

क) कृषि क्षेत्रको संरक्षणका साथै भूमिको खण्डीकरणलाई व्यवस्थित गर्ने।

ख) स्वच्छ, सुन्दर, सुविधा सम्पन्न, सुरक्षित बस्ती विकास, दिगो र योजनाबद्ध शहरीकण सुनिश्चित गर्ने।

ग) भौतिक पूर्वाधार विकास र वातावरणबीच सन्तुलन कायम गर्ने।

घ) ऐतिहासिक, धार्मिक, सांस्कृतिक र पर्यटकीय क्षेत्रहरूको संरक्षण गर्ने।

ङ) भौगोलिक एवम् भौगर्भिक अध्ययनका आधारमा

सबै प्रकारका जोखिमयुक्त क्षेत्र पहिचान गर्ने ।

च) उपयोगमा नरहेको, न्यून उपयोगमा रहेको, दुरुपयोग भैरहेको वा दोहन भैरहेको भूमिलाई समुचित प्रयोगमा ल्याउने ।

छ) जैविक विविधताको संरक्षण तथा संवर्द्धन सुनिश्चित गर्ने ।

ज) जलवायु परिवर्तनको असरलाई न्यूनीकरण गर्ने ।

झ) औद्योगिक, वाणिज्य एवम् व्यावसायिक क्षेत्रको अव्यवस्थित विकास र विस्तारलाई नियन्त्रण गर्ने ।

ञ) शहरी वा ग्रामीण क्षेत्रको आवासीय क्षेत्रमा न्यूनतम हरित क्षेत्र, खुला क्षेत्र, उद्यान, खेलमैदान, मनोरञ्जन स्थलको विकास गर्ने ।

ट) नदी, सडक, पोखरी, नहरको दायाँबायाँ खुला तथा हरित क्षेत्र Green Belt निर्माण गर्ने ।

रणनीति ४. तहगत भू-उपयोग तर्जुमा गर्दा माथिल्लो तहको भू-उपयोग योजना अनुकूल हुने गरी तल्लो तहको योजना तर्जुमा गरिनेछ ।

रणनीति ५. स्थानीय तहमा ग्रामीण एवम् शहरी भू-उपयोग योजना विस्तृत रूपमा छुट्टाछुट्टै तर्जुमा गरी लागू गरिनेछ ।

रणनीति ६. काठमाडौं उपत्यकाको भू-उपयोग योजना तर्जुमा र कार्यान्वयन गर्दा काठमाडौं उपत्यका विकास प्राधिकरणसँग र नगर विकास योजना लागू भएका अन्य क्षेत्रमा सम्बन्धित सरोकारवाला निकायसँग समन्वय गरिनेछ ।

रणनीति ७. भू-उपयोग योजना तर्जुमा र कार्यान्वयनमा लैङ्गिक र समावेशी हुने सम्बन्धित सरोकारवालाहरूको सहभागिता सुनिश्चित गरिनेछ । विशेष गरी स्थानीय तहको भू-उपयोग योजना तर्जुमा र कार्यान्वयन गर्दा समुदायको सहभागिता सुनिश्चित गरिनेछ ।

रणनीति ८. प्रादेशिक र स्थानीय भू-उपयोग योजना तर्जुमा गर्न आवश्यक दिशा निर्देश, प्रविधि र प्राविधिक सहयोग

आवश्यक पर्ने भएमा केन्द्रीय निकायले उपलब्ध गराउनेछ ।

**नीति ३ :** निर्दिष्ट भू-उपयोग क्षेत्र र भू-उपयोग योजनाको आधारमा भूमि तथा भूमिश्रोतको उपयोग गर्ने व्यवस्था सुनिश्चित गरिनेछ ।

रणनीति १. निर्दिष्ट भू-उपयोग क्षेत्र र योजनाको आधारमा भूमिको उपयोग सुनिश्चित गरिनेछ ।

रणनीति २. निर्दिष्ट भू-उपयोग क्षेत्रभन्दा फरक किसिमले उपयोग गर्ने वा बिना स्वीकृति निर्दिष्ट भू-उपयोगमा परिवर्तन गर्ने कार्यलाई निरुत्साहित गरी साविककै उपयोगमा ल्याइनेछ ।

रणनीति ३. मानव सुरक्षा सुनिश्चित गर्न उत्पादन तथा उत्पादकत्व वृद्धि गर्न, जैविक विविधताको संरक्षण गर्न र वातावरणीय सन्तुलन कायम गर्न भूमिको उपयोगमा परिवर्तन गर्नुपर्ने उपयुक्त कारण भएमा विषय विज्ञ सम्मिलित समितिको सिफारिसमा नेपाल सरकार मन्त्रिपरिषद्को निर्णयबाट परिवर्तन गर्न सकिनेछ ।

**नीति ४:** तहगत भू-उपयोग योजना अनुकूल हुने गरी भौतिक पूर्वाधार विकासका आयोजनाहरूको तर्जुमा र कार्यान्वयन गरिनेछ ।

रणनीति १. सम्बन्धित क्षेत्रको भू-उपयोग योजनालाई आधारका रूपमा लिई स्वच्छ, सुन्दर, सुविधा सम्पन्न र सुरक्षित बस्ती विकास योजनाबद्ध र दिगो शहरीकरण तथा भौतिक पूर्वाधार विकास निर्माणका योजना तर्जुमा र कार्यान्वयन गरिनेछ ।

रणनीति २. सम्बन्धित क्षेत्रको भू-उपयोग योजना र भौगर्भिक अध्ययनका आधारमा जोखिमको संवेदनशीलता मूल्याङ्कन गरी स्वच्छ, सुन्दर, सुविधा सम्पन्न र सुरक्षित बस्ती विकास योजनाबद्ध र दिगो शहरीकरण तथा भौतिक पूर्वाधार विकासका योजना तर्जुमा र कार्यान्वयन गरिनेछ ।

रणनीति ३. भौतिक पूर्वाधार विकास निर्माणका आयोजना सञ्चालन

गर्न र औद्योगिक क्षेत्रको विकास गर्न मापदण्डअनुसार जग्गा विकास कार्यक्रम सञ्चालन गर्दा निजी र सहकारी क्षेत्रसमेतलाई प्रोत्साहन गरिनेछ ।

**नीति ५**: कृषियोग्य भूमिको गैरकृषि प्रयोग कृषिः भूमिलाई बाझो राख्ने प्रवृत्ति र अनियन्त्रित खण्डीकरणलाई निरुत्साहित गर्दै कृषियोग्य भूमिको समुचित उपयोग एवम् संरक्षण सुनिश्चित गरिनेछ ।

रणनीति १. कृषियोग्य भूमिको गैरकृषि प्रयोग र परिवर्तनलाई निरुत्साहित गरी कृषि क्षेत्रलाई संरक्षण र संवर्द्धन गर्न कानुनबमोजिम अनुदान सहुलियत तथा क्षतिपूर्ति दिइनेछ ।

रणनीति २. कृषि क्षेत्रमा वर्गीकृत उच्च पहाडी भेगका जग्गालाई मूल्यावान जडिबुटी, फलफूल, पशुपालन एवं चरन क्षेत्रको रूपमा विकास गरिनेछ ।

रणनीति ३. सिँचाइ योजना लागू भै सिँचाइ सुविधा उपलब्ध भएका तथा तर्जुमा गरिएका सिँचाइ योजनाका प्रभाव क्षेत्र (Command Area) भित्रका जग्गालाई कृषि क्षेत्रमा वर्गीकरण गरि सो बमोजिम उपयोग गर्ने व्यवस्था सुनिश्चित गरिनेछ ।

रणनीति ४. निर्धारित भू-उपयोग क्षेत्रको आधारमा जग्गाको न्यूनतम क्षेत्रफल तोकी सो भन्दा सानो टुक्रामा जग्गाको खण्डीकरण गर्न नपाउने व्यवस्था गरिनेछ ।

रणनीति ५. कृषि क्षेत्रमा वर्गीकृत जग्गालाई व्यावसायिक कृषि कार्यमा प्रोत्साहन गर्न चक्लाबन्दी (Land Consolidation) सम्बन्धी मापदण्ड तयार गरी लागू गरिनेछ ।

रणनीति ६. कृषि क्षेत्रमा वर्गीकृत जग्गा मनासिब कारण बेगर लगातार तीन वर्षसम्म बाझो राख्न नपाइने व्यवस्था गरिनेछ ।

रणनीति ७. कृषि क्षेत्रमा वर्गीकृत जग्गामा खेती नगर्ने जग्गाधनीलाई सरकारले दिने अनुदान सुविधा र सहयोगमा कटौती गरी राज्यले थप कर लगाउन सक्नेछ ।

**नीति ६**: स्वच्छ, सुन्दर, सुविधा सम्पन्न तथा सुरक्षित बस्ती विकास र

योजनाबद्ध एवं दिगो शहरीकरण सुनिश्चित गरिनेछ।

रणनीति १. प्रत्येक प्रादेशिक र स्थानीय तहमा निर्धारित क्षेत्र भित्र भौगर्भिक, भौगोलिक र वातावरणीय दृष्टिले सुरक्षित र कम भिरालो भएका उपयुक्त स्थानहरू पहिचान गरी सुरक्षित बस्ती विकासका लागि प्रोत्साहन गरिनेछ।

रणनीति २. मध्यपहाडी लोकमार्गलगायत देशका विभिन्न स्थानमा प्रस्तावित नयाँ शहर र आवासीय क्षेत्रको विकास र विस्तार गर्दा योजनाबद्ध र दिगो वातावरण स्वच्छ, सुन्दर, सुविधा सम्पन्न बस्ती तथा शहर विकास गर्न निजी क्षेत्रलाई प्रोत्साहन गरिनेछ।

रणनीति ३. घोषित नयाँ शहर निर्माण क्षेत्र र शहरोन्मुख अन्य क्षेत्रमा एक आवास एकाइको घर घडेरीको न्यूनतम र अधिकतम क्षेत्रफलको हद तोकिनेछ।

रणनीति ४. शहरी/ग्रामीण क्षेत्रका आवासीय क्षेत्रमा वर्गीकृत जग्गामा बस्ती विकास शहरी योजना तथा भवन निर्माणसम्बन्धी आधारभूत मार्गदर्शन भवन संहिता मापदण्डअनुरूप आधारभूत पूर्वाधार, हरियाली र खुला क्षेत्रको न्यूनतम मापदण्ड तोकिनेछ।

रणनीति ५. प्राकृतिक विपद्बाट जोखिमयुक्त र असुरक्षित बस्तीहरूलाई स्थानान्तरण गर्नुपर्ने भएमा सम्भव भएसम्म त्यस्तो बस्तीबाट नजिक रहेका वातावर णीय र मानवीय सुरक्षाका दृष्टिले सुरक्षित पूर्वाधार विकास र जीविकोपार्जनका लागि उपयुक्त स्थानको पहिचान गरी स्थानान्तरण गरिनेछ।

रणनीति ६. राज्यले सरोकारवाला निकायको समन्वयमा आधारभूत पूर्वाधारयुक्त एकीकृत बस्ती विकास गर्न प्रोत्साहन गर्नेछ।

रणनीति ७. अव्यवस्थित बसोबास गर्ने प्रवृत्तिलाई नियन्त्रण गरी निर्धारित भवन मार्गदर्शन, भवन संहिता मापदण्डअनुसार पूर्वाधारयुक्त व्यवस्थित स्वच्छ, सुन्दर, सुविधा सम्पन्न र सुरक्षित बस्ती विकास गर्न र योजनाबद्ध एवं दिगो शहरीकरण गर्न प्रोत्साहन गरिनेछ।

रणनीति ८. निर्धारित भवन मार्गदर्शन, भवन संहिता, मापदण्ड अनिवार्य कार्यान्वयन गर्ने गराउने कार्यका लागि स्थानीय निकायहरूको क्षमता विकास गरिनेछ।

रणनीति ९. बस्ती स्थानान्तरण गरी खाली भएको जग्गालाई उपयुक्तता र क्षमताका आधारमा भू-उपयोग क्षेत्र निर्धारण गरी सोहीअनुरूप उपयोग गर्न प्रोत्साहन गरिनेछ।

रणनीति १०. सरकारी निजी वा सरकारी सहकारी क्षेत्रको सहकार्यमा भूमिहीन र भूमिमा पहुँच न्यून रहेका नागरिकका लागि आवासीय क्षेत्रमा निर्धारित भवन मार्गदर्शन भवन संहिता मापदण्डअनुरूप सुरक्षित र सुलभ आवास (Law cost housing) सहितको व्यवस्थित बस्ती विकास गर्न प्रोत्साहन गरिनेछ।

**नीति** ७: वन तथा अन्य प्राकृतिक सम्पदाको संरक्षण एवम् समुचित उपयोग सुनिश्चित गरिनेछ।

रणनीति १. वन र संरक्षित क्षेत्रहरूको नापनक्सा र सीमाङ्कन गरी हरित पूर्जा तयार गर्ने कार्यलाई प्राथमिकता दिइनेछ।

रणनीति २. राष्ट्रिय प्राथमिकताका आयोजना कार्यान्वयन गर्न वन क्षेत्रको जग्गा प्रयोग गर्नुपर्ने भएमा सो बराबरको क्षेत्रफलमा नघट्ने गरी वृक्षरोपण गर्नुपर्ने व्यवस्थालाई अनिवार्य गरिनेछ।

रणनीति ३. हैसियत बिग्रेको वन क्षेत्रको वृक्षारोपण तथा संरक्षण गरी वन व्यवस्थापन गर्न प्रोत्साहन गरिनेछ।

रणनीति ४. चुरे तथा भावर क्षेत्रको संरक्षण गर्न विशेष योजना बनाई कार्यान्वयन गरिनेछ।

रणनीति ५. चुरे तथा भावर क्षेत्रको संरक्षणको लागि सो क्षेत्रको संवेदनशील भू-भागमा रहेका र जोखिमयुक्त मानवबस्तीलाई क्रमशः स्थानान्तरण गर्न आधारभूत पूर्वाधारयुक्त एकीकृत बस्ती विकासका कार्यक्रमहरू तर्जुमा गरिनेछ।

रणनीति ६. जलाधर क्षेत्र, सीमासार क्षेत्र, संरक्षित क्षेत्र, मध्यवर्ती क्षेत्र, राष्ट्रिय निकुञ्ज तथा वन्यजन्तु आरक्षण क्षेत्र र

चरन क्षेत्रको संरक्षण गर्न विशेष व्यवस्था गरिनेछ ।

रणनीति ७. जैविक मार्ग रहेको वा रहने सम्भावना भएका वन समेतका क्षेत्रलाई संरक्षित वनको रूपमा विकास गरिनेछ । वन क्षेत्र, घासे मैदान, वन्यजन्तु तथा पशुपङ्क्षीको वासस्थानको संरक्षण गरिनेछ ।

रणनीति ८. हैसियत बिग्रेको वन तथा प्राकृतिक सम्पदा, जलाशय, ताल, पोखरी, नदी नाला, सीमसार क्षेत्र आदिको हैसियत सुधार गरी जैविक विविधताको संरक्षण, संवर्द्धन र उपयोग गरिनेछ ।

रणनीति ९. पहाडी तथा हिमाली क्षेत्रका उत्पादकत्व न्यून रहेका तथा वन क्षेत्रको बीचमा रहेका बस्तीलाई उपयुक्त क्षेत्रमा स्थानान्तरण गरी साविक बस्ती भएका स्थानमा वन विकास गर्न प्रोत्साहन गरिनेछ ।

**नीति ८:** निर्दिष्ट भू-उपयोगको क्षेत्र वा भू-उपयोग योजनाबमोजिम भूमि तथा भूमिश्रोतको उपयोगका लागि उत्प्रेरित गर्न प्रोत्साहनमुखी कार्यक्रमहरूमा सञ्चालन गरिनेछ ।

रणनीति १. भू-उपयोग योजना र सम्बन्धित नीतिअनुरूप उद्योग, आवास, कृषि विकास गर्न निजी र सहकारी क्षेत्र इच्छुक देखिएमा राज्यले थप सहुलियत प्रदान गर्नेछ ।

रणनीति २. उपयोगमा नआएका जग्गालाई निर्दिष्ट गरिएको भू-उपयोग क्षेत्रअनुसार हुने गरी व्यावसायिक खेती, पर्यटकीय स्थल, अनुसन्धान स्थल, वैज्ञानिक प्रयोगशाला, मनारेञ्जनस्थल, खेलकुदस्थल आदिका रूपमा उपयोग गर्न निजी क्षेत्रलाई प्रोत्साहन गरिनेछ ।

रणनीति ३. राज्यले तोकेको मापदण्डबमोजिम भवन तथा व्यवस्थित आवास योजना सञ्चालन गरी सुरक्षित आवास उपलब्ध गराउने व्यक्ति वा संस्थालाई थप सहुलियत उपलब्ध गराइनेछ

रणनीति ४. पहाडी बस्तीहरूमा पारवहन सुविधा पुऱ्याउन पर्यावरणीय दृष्टिकोणबाट उपयुक्त हुने गरी सुरुङमार्ग वा रज्जुमार्गको निर्माणलाई प्रोत्साहन गरिनेछ ।

**नीति ९:** भूमिलाई उपयोग विहीन राख्ने र न्यून उपयोग, दुरुपयोग एवं अत्यधिक दोहन गर्ने कार्यलाई निरुत्साहित गरिनेछ ।

रणनीति १. नदीनालाहरूको प्राकृतिक वहाव सीमा र मापदण्डलाई असर पर्ने गरी भूमिको प्रयोग गर्न निषेध गरिनेछ ।

रणनीति २. ताल तलैया, जैविक मार्ग, सार्वजनिक पोखरी, सीमसार र चरन क्षेत्रहरूको सीमा अतिक्रमण नहुने तथा गुणस्तरमा ह्रास नआउने गरी प्राकृतिक उपयोग र पर्यटन प्रवर्द्धन गर्ने व्यवस्था मिलाइनेछ ।

रणनीति ३. भू-क्षयलाई बढावा दिने, कृषियोग्य भूमिलाई प्रतिकूल असर गर्ने तथा स्थानीय बस्तीलाई जोखिममा पार्ने गरी सडक निर्माण वा विस्तार गर्ने कार्यलाई निरुत्साहित गरिनेछ ।

रणनीति ४. माटोको प्राकृतिक अवस्थालाई कायम राखी संरक्षण गर्ने कार्यलाई प्रोत्साहन गर्ने र मापदण्ड विपरीत भूमिको प्राकृतिक स्वरूपमा परिवर्तन हुने गरी उपयोग गर्ने कार्यलाई निरुत्साहित गरिनेछ ।

रणनीति ५. सरकारी र सार्वजनिक प्रकृतिका उपयोगविहीन, न्यून उपयोग भएका र कमसल जग्गालाई निर्दिष्ट भू-उपयोग क्षेत्रमा ल्याउन जग्गा विकास कार्यक्रम सञ्चालन गर्न प्रोत्साहन गरिनेछ ।

**नीति १०:** प्राकृतिक र मानवसिर्जित प्रकोपको जोखिम न्यूनीकरणको लागि विकास र वातवराणबीच सन्तुलन कायम गर्न जोखिमयुक्त क्षेत्रहरूको पहिचान गरी ती क्षेत्रहरूमा निश्चित क्रियाकलापहरू मात्र सञ्चालन गर्न पाउने व्यवस्था सुनिश्चित गरिनेछ ।

रणनीति १. प्राकृतिक विपद्बाट उच्च जोखिमयुक्त स्थानहरूकोा पहिचान गरी ती स्थानहरूमा निश्चित कृयाकलापहरू मात्र सञ्चालन गर्न दिइनेछ ।

रणनीति २. प्राकृतिक विपद्को दृष्टिले संवेदनशील क्षेत्रहरूको संरक्षण गर्न संरक्षणमुखी कार्यक्रहरू सञ्चालन गरिनेछ ।

रणनीति ३. भूमि वातावारण र विकासबीच सन्तुलन कायम गर्न विकास निर्माणका कार्यहरू सञ्चालन गर्दा जलवायु परिवर्तनको असरलाई समेत ध्यान दिई दिगो

विकासका सिद्धान्त अवलम्बन गरिनेछ ।

रणनीति ४. नदीको प्राकृतिक वहावलाई कायम राख्दै सुरक्षित र दिगो तटस्थ गरी उकास हुने सरकारी जग्गालाई उपयुक्तता अनुसार कृषि वन सडक हरित र खुला क्षेत्रको रूपमा उपयोग गरिनेछ ।

**नीति** ११: प्राकृतिक सम्पदा, पर्यटकीय, ऐतिहासिक, सांस्कृतिक, धार्मिक, पुरातात्त्विक क्षेत्र, सरकारी सार्वजनिक र गुठीका जग्गाहरूको संरक्षण तथा समुचित उपयोग सुनिश्चित गरिनेछ ।

रणनीति १. विभिन्न ऐतिहासिक, सांस्कृतिक, धार्मिक, पुरातात्विक र पर्यटकीय महत्त्वका क्षेत्रहरूको पहिचान गरी ती क्षेत्रहरूको उद्देश्यअनुसार मौलिकतामा असर नपर्ने गरी उपयोग र संरक्षण गरिनेछ ।

रणनीति २. विश्वसम्पदा सूचीमा सूचीकृत सम्पदामा असर पर्ने गरी उपयोग गर्न र भू-उपयोग क्षेत्र परिवर्तन गर्न निषेध गरिनेछ ।

रणनीति ३. सामरिक, वातावरणीय तथा जैविक विविधताको दृष्टिले संवेदनशील र विशेष महत्त्वका क्षेत्रहरूको संरक्षण गर्न ती क्षेत्रहरूमा निश्चित दूरीसम्म प्रवेश निषेध (No Go Zone) गर्ने व्यवस्था गरी त्यस्तो क्षेत्र अन्य उपयोगमा परिवर्तन गर्नसमेत निषेध गरिनेछ ।

रणनीति ४. खनिज तेल, ग्यासलगायतका महत्त्वपूर्ण प्राकृतिक स्रोत भविष्यमा पत्ता लागेमा जुनसुकै भू-उपयोग क्षेत्रमा रहेको भए तापनि त्यस्तो प्राकृतिक स्रोत रहेको क्षेत्रलाई सोहीअनुरूप निर्दिष्ट उपयोगमा वर्गीकरण गरी उपयोग गरिनेछ ।

रणनीति ५. उचित उपयोगमा नरहेको सरकारी सार्वजनिक तथा गुठी जग्गालाई आवश्यक संरक्षणको व्यवस्था मिलाई निर्दिष्ट प्रयोजनमा उपयोग गरिनेछ ।

रणनीति ६. सरकारी र सार्वजनिक जग्गाको अद्यावधिक अभिलेख तयार गरी सोको दिगो संरक्षण र सदुपयोग गर्न काम, कर्तव्य र अधिकारसहितको स्थायी संयन्त्रको स्थापना गरिनेछ ।

**नीति** १२: कित्तामा आधारित भूमि लगतमा भू-उपयोग क्षेत्र उल्लेख

गरी निर्दिष्ट भू-उपयोगको आधारमा न्यूनतम मूल्याङ्कन तथा भूमिकर प्रणाली विकास गरी लागू गरिनेछ ।

रणनीति १. नापनक्सा गर्न बाँकी रहेको भू-भागसमेतको कित्ता नापी सम्पन्न गरी कित्तामा आधारित सम्पूर्ण भूमि लगतमा भू-उपयोग क्षेत्र उल्लेख गर्ने व्यवस्था गरिनेछ ।

रणनीति २. निर्दिष्ट भू-उपयोग क्षेत्र र प्रगतिशील कर प्रणालीको आधारमा घर जग्गाको मूल्याङ्कन र कर निर्धारण गर्ने व्यवस्था गरिनेछ ।

रणनीति ३. सामूहिक वा संयुक्त आवास निर्माण गर्ने व्यवसायिक कम्पनी वा संस्थाको हकमा बाहेक आवासीय क्षेत्रमा प्रति परिवार न्यूनतम क्षेत्रफलको एक घर घडेरीको मापदण्ड निर्धारण गरी सोभन्दा बढी घर घडेरी जग्गामा प्रगतिशील कर (Progressive Tax) लगाइनेछ ।

रणनीति ४. कृषि प्रयोजनको लागि उपयोग भएको भूमिमा कर सहुलियत दिइनेछ । सो बाहेकका भू-उपयोग क्षेत्रका जग्गाका हकमा उपयोग र लाभ समेतका आधारमा कर निर्धारण गरिनेछ ।

**नीति १३:** भू-उपयोग योजना सम्बन्धि सूचना प्रणाली विकास गरिने छ ।

रणनीति १. भू-उपयोग योजना तर्जुमा गर्नका लागि आवश्यक भू-उपयोग भूमिश्रोत नक्सा (Land Use Land Resource Map) भू-क्षमता नक्सा (Land Capability Map) भू-उपयोग क्षेत्र निर्धारित नक्सा (Land Use Zoning map) जोखिम नक्सा (Hazard Map) तथा सम्बन्धित विषय Theme को डाटाबेस तयार गरिनेछ ।

रणनीति २. आधुनिक प्रविधियुक्त भू-उपयोग प्रणाली विकास गरी प्रणालीमा आबद्ध अद्यावधिक सूचनामा सरोकारवालालाई सहज पहुँच र वितरणको व्यवस्था गरिनेछ ।

रणनीति ३. पूर्वाधार निर्माण, औद्योगिक प्रतिष्ठान स्थापना र सञ्चालन, बस्ती सहर विकास र विस्तारका साथै राज्य संरचनाका विभिन्न तहमा योजना तर्जुमा र

कार्यान्वयन गर्दा अद्यावधिक भू-उपयोग सूचनालाई आधारको रूपमा लिनुपर्ने व्यवस्थालाई अनिवार्य गरिनेछ।

**नीति १४:** भू-उपयोग नीति, योजना र सोअनुरूपका कार्यक्रमहरूको कार्यान्वयनका लागि संस्थागत संरचनाको स्थापना गरिनेछ।

रणनीति १. भू-उपयोग नीति, योजना र सोअनुरूपका कार्यक्रमहरू कार्यान्वयनका लागि विभिन्न तहमा सङ्गठनात्मक संरचना स्थापना गरिनेछ।

रणनीति २. भू-उपयोग नीतिको प्रभावकारी कार्यान्वयनका लागि आवश्यक ऐन, नियम र निर्देशिका तर्जुमा गरिनेछ।

रणनीति ३. भू-उपयोग नीति कार्यान्वयनका लागि विभिन्न सरोकारवाला निकायहरूकाबीच प्रभावकारी समन्वयको व्यवस्था गरिनेछ।

**नीति १५:** भू-उपयोग र यसको दूरगामी प्रभावका बारेमा जनचेतना अभिवृद्धि गरिनेछ।

रणनीति १. विभिन्न तहको शैक्षिक पाठ्यक्रममा भू-उपयोगसम्बन्धी विषय समावेश गरी भूमि र भूमिश्रोतको समुचित उपयोगसम्बन्धी ज्ञान र सचेतना वृद्धि गरिनेछ।

रणनीति २. भू-उपयोग क्षेत्र वर्गीकरणअनुसार नै उपयोग गर्न विभिन्न सचेतनामूलक श्रव्यदृश्य सामग्रीको उत्पादन र प्रसारण गरिनेछ।

रणनीति ३. निर्दिष्ट भू-उपयोग क्षेत्रमा भू-उपयोग योजनाको आधारमा मात्र कार्यक्रमहरू तर्जुमा गर्ने व्यवस्था मिलाउन सरकारी निकायहरूको क्षमता र सचेतनामा वृद्धि गरिनेछ।

## ९. कार्यान्वयन व्यवस्था

भूमि तथा भूमिश्रोतको उपयोगसम्बन्धमा यो नीति मूल नीति हुनेछ। भूमि तथा भूमिश्रोतसँग सम्बन्धित विषयका विभिन्न क्षेत्रगत नीतिहरू जस्तै वन, कृषि, शहरी विकास, आवास, सिँचाइ, ऊर्जा, उद्योग, पर्यटन र शिक्षा नीति यस नीतिको भावना अनुकूल हुनेछन्। यस नीतिको कार्यान्वयनका लागि देहायबमोजिमको

कार्यान्वयन व्यवस्था तय गरिएको छ :

क) कानुनी व्यवस्था

भू-उपयोग नीतिको कार्यान्वयनका लागि आवश्यक भू-उपयोगसम्बन्धी ऐन नियमावली, निर्देशिका, कार्यविधि र मापदण्ड तर्जुमा गरी लागू गरिनेछ ।

ख) संस्थागत व्यवस्था

भू-उपयोग नीति कार्यान्वयनको लागि भू-उपयोग विभाग र मातहतमा डिभिजन कार्यालय स्थापना गरिनेछ। सङ्घीय, प्रादेशिक र स्थानीय तहमा भू-उपयोग कार्यान्वयन तथा समन्वय समितिहरूको गठन गरिनेछ । कुनै निश्चित क्षेत्रको विकासको लागि विशेष ऐनद्वारा जिम्मेवारी तोकेका विकास प्राधिकरण जस्ता निकायसँग समेत समन्वय गर्दै भू-उपयोग योजना तर्जुमा र कार्यान्वयन गरिनेछ ।

ग) भू-उपयोग कार्यान्वयन नतिजा खाका

यो नीतिले परिलक्षित गरेका कानुनी संरचनाको तर्जुमा, संस्थागत संरचना स्थापना, अन्तरनिकाय समन्वय, भू-उपयोग सूचना प्रणालीमा पहुँचलगायतका कार्यहरू निश्चित समयावधिभित्र सम्पन्न गरी भू-उपयोग कार्यान्वयनलाई सुनिश्चित गर्न भू-उपयोग कार्यान्वयन नतिजा खाका अनुसूची २ मा संलग्न गरिएको छ ।

घ) अनुगमन तथा मूल्याङ्कन

१. यो नीति कार्यान्वयनको नियमित अनुगमन भूमिसुधार तथा व्यवस्था मन्त्रालयले गर्नेछ ।

२. यस नीतिको कार्यान्वयनको प्रभावकारिताको मूल्याङ्कन खुला प्रतिस्पर्धाबाट विज्ञहरू छनौट गरी स्वतन्त्ररूपमा सहभागितामूलक र समन्वयात्मक तवरबाट प्रत्येक पाँच-पाँच वर्षमा गरिनेछ ।

**१०. मान्यता**

यस नीतिको सफल कार्यान्वयनलाई सुनिश्चित गर्न देहायबमोजिमको अवस्था उपलब्ध हुने मान्यता राखिएको छ :

क) भूमि तथा भूमिश्रोतको संरक्षण तथा दिगो व्यवस्थापन बहु सरोकारको विषय (Cross cutting issue) भएकाले सबै सरोकारवाला निकायको सहयोग प्राप्त हुने र उच्चतम समन्वय कायम हुनेछ ।

ख) भू-उपयोग नीति कार्यान्वयनका क्रममा जग्गाधनीहरूबाट आवश्यक

सहयोग प्राप्त हुनेछ । यो नीति कार्यान्वयन गर्दा नागरिकका उचित गुनासो सम्बोधन गर्न सबै सरोकारवालाको सक्रिय सहयोग रहनेछ ।

ग) भू-उपयोग नीतिको कार्यान्वयनमा उच्चस्तरको प्रतिबद्धता रहनेछ । सबै सरोकारवाला निकायले यस नीतिको कार्यान्वयनमा उच्च प्राथमिकता दिनेछन् ।

घ) यस नीतिमा भएको व्यवस्थाबमोजिम निर्धारण गरिएका कार्यक्रमहरूको कार्यान्वयनका लागि पर्याप्त वित्तीय श्रोत र साधन उपलब्ध हुनेछ ।

ङ) यो नीति कार्यान्वयनका लागि उपयुक्त कानुनी व्यवस्था, साङ्गठनिक संरचना र दक्ष जनशक्तिको उपलब्धता हुनेछ ।

११. **नीतिमा परिमार्जन**

क) यो नीतिअनुकूल नभएका नीति तथा कानुनहरू सम्बन्धित निकायले यो नीतिअनुरूप हुने गरी परिमार्जन गर्नुपर्नेछ ।

ख) यो नीतिलाई आवश्यकताअनुसार पुनरावलोकन एवं परिमार्जन गर्न सकिनेछ ।

१२. **खारेजी**

राष्ट्रिय भू-उपयोग नीति, २०६९ खारेज गरिएको छ ।

**अनुसूची -१**

(१ **सँग सम्बन्धित**)

**भू-उपयोगका क्षेत्रहरूको परिभाषा**

**क) कृषि क्षेत्र**

"कृषि क्षेत्र" भन्नाले कृषि उत्पादन (अन्न बाली, नगदे बाली, बागवानी आदि) पशुपालन, मत्स्यपालन, निजी जग्गामा भएका कृषि, वन पैदावर र वाटिकासमेत भएका वा हुनसक्ने जग्गा रहेको क्षेत्रलाई सम्झनुपर्छ । यो शब्दले

कुनै निश्चित क्षेत्रलाई सरकारले कृषि क्षेत्र भनी घोषणाा गरी तोकेको क्षेत्र समेतलाई जनाउँछ ।

**ख) आवासीय क्षेत्र**

"आवासीय क्षेत्र" भन्नाले मानिसले बासस्थानको लागि प्रयोग गरेका जग्गालाई जनाउँछ र सो शब्दले घरसँग जोडिएको वा नजोडिएको भए तापनि गोठ, भकारी, ग्यारेज, तवेला, इनार, धारा, फलफूल, बगैँचा, करेसाबारी आगन वा त्यस्तै अरू कुनै काममा प्रयोग गरिएको जग्गा रहेको क्षेत्रलाई सम्झनु पर्छ । यो शब्दले व्यावसायिक कम्पनी वा संस्थाले आवासीय क्षेत्रमा निर्माण गरेको सामूहिक आवास, संयुक्त आवास, व्यावसायिक कम्पनी वा संस्थाले आवासीय क्षेत्रमा निर्माण गरेको सामुहिक आवास, संयुक्त आवास Apartment र कुनै निश्चित क्षेत्रलाई सरकारले बसोबासका लागि घोषणाा गरी तोकेको क्षेत्रसमेतलाई जनाउँछ ।

**ग) व्यावसायिक क्षेत्र**

"व्यावसायिक क्षेत्र" भन्नाले पसल, होटेल, प्रदर्शनी कक्ष, पेट्रोल पम्प, गोदाम, स्वास्थ्य, सञ्चार वा वस्तुको खरिद बिक्री हुने स्थान वा कुनै साहित्यिक, वैज्ञानिक वा प्राविधिक सेवा, सूचना तथा परामर्श उपलब्ध गराउने संस्था, हाट बजार लाग्ने स्थान व्यावसायिक प्रयोजनका लागि खोलिएका डिस्को क्लब, पौडी पोखरी, सिनेमा घरलगायतका मनोरञ्जनस्थल वा अन्य कुनै व्यावसायिक प्रयोजनको लागि निर्माण गरिएका घरले चर्चेका जग्गा तथा सो प्रयोजनको लागि छुट्याइएका जग्गा रहेको क्षेत्रलाई सम्झनुपर्छ । यो शब्दले व्यावसायिक कम्पनी वा संस्थाले व्यावसायिक क्षेत्रमा निर्माण गरेको व्यावसायिक भवन तथा सो भवनले चर्चेको जग्गालाई समेत जनाउँछ । साथै यो शब्दले कुनै निश्चित भौगोलिक क्षेत्रमा बजार विस्तार तथा व्यावसायिक प्रयोजनको लागि शहर निर्माण गर्ने गरी सरकारले घोषणाा गरी तोकेको क्षेत्रसमेतलाई जनाउँछ ।

**घ) औद्योगिक क्षेत्र**

"औद्योगिक क्षेत्र" भन्नाले कुनै पनि कार्यस्थल Workshop वा वस्तु उत्पादन गर्ने उद्योग तथा सो सञ्चालन गर्ने प्रयोजनको लागि रहेका घर टहराले चर्चेका जग्गालगायत सो प्रयोजनको लागि छुट्याइएका जग्गा रहेको क्षेत्रलाई सम्झनुपर्छ । यो शब्दले कुनै निश्चित भौगोलिक क्षेत्रमा उद्योग प्रवर्द्धन गर्ने उद्देश्यले सरकारले घोषणाा गरी तोकेको औद्योगिक करिडोर औद्योगिक ग्राम, औद्योगिक क्लष्टर, विशेष निर्यात क्षेत्र र विशेष आर्थिक क्षेत्र समेतलाई जनाउँछ ।

**ङ) खानी तथा खनिज क्षेत्र**

"खानी तथा खनिज क्षेत्र" भन्नाले खनिज पदार्थको उत्खनन, उत्पादन वा प्रशोधन गरेको वा कुनै निश्चित भौगोलिक क्षेत्रमा खानी तथा खनिज क्षेत्र भनी सरकारले घोषणा गरी तोकेको जग्गा रहेको क्षेत्रलाई सम्झनुपर्छ। यो शब्दावलीले कुनै पनि खानी पत्ता लागेको क्षेत्र वा खानी सञ्चालन भएको क्षेत्र, खनिज पदार्थ उत्खनन् उत्पादन प्रशोधन एवं शुद्धीकरण गर्ने उद्योग रहेको क्षेत्र सोही प्रयोजनमा प्रयोग भएको घर टहरा तथा उद्योग सञ्चालनको लागि प्रयोगमा आएको जग्गासमेतलाई जनाउँछ।

**च) सांस्कतिक तथा पुरातात्त्विक क्षेत्र**

"सांस्कतिक तथा पुरातात्त्विक क्षेत्र" भन्नाले ऐतिहासिक महत्त्वको किल्ला दरबार, भवन, मठ मन्दिर, मस्जिद, गुम्बा मानेलगायत अन्य धार्मिक स्थल देवालय र पुरातात्त्विक महत्त्वका क्षेत्रलाई सम्झनु पर्छ। यो शब्दावलीले कुनै निश्चित भौगोलिक क्षेत्रमा ऐतिहासिक, सांस्कृतिक, धार्मिक तथा पुरातात्त्विक क्षेत्र भनी सरकारले घोषणा गरी तोकेको क्षेत्रसमेतलाई जनाउँछ।

**छ) नदिनाला तथा तालतलैया क्षेत्र**

"नदिनाला तथा तालतलैया क्षेत्र" भन्नाले नदि, खोला, खहरे, नहर, ताल, पोखरी, लामो समयदेखि पानी जमेको डोल वा सिमसार जग्गा रहेको क्षेत्रसमेतलाई सम्झनु पर्छ।

**ज) वन क्षेत्र**

"वन क्षेत्र" भन्नाले पूर्ण वा आंशिक रूपमा रुख तथा वनस्पतिले ढाकेको सरकारी, सामुदायिक, कबुलियती वनलगायत वन्यजन्तु आरक्ष, राष्ट्रिय निकुञ्ज, शिकार आरक्ष, संरक्षित क्षेत्र, बुट्यान, झाडी, फाँट, रुख नभए पनि सरकारले वन क्षेत्र भनी तोकेको स्थानलगायत सबै प्रकारको वनको जग्गा रहेको क्षेत्रलाई सम्झनुपर्छ। यो शब्दावलीले कुनै निश्चित भौगोलिक क्षेत्र वन क्षेत्र वा हरित क्षेत्र विस्तारको लागि सरकारले घोषणा गरी तोकेको क्षेत्रसमेतलाई जनाउँछ।

**झ) सार्वजनिक उपयोग तथा खुला क्षेत्र**

"सार्वजनिक उपयोग तथा खुला क्षेत्र" भन्नाले स्कूल, कलेज, व्यावसायिक

शिक्षा केन्द्र, विश्वविद्यालयलगायत शैक्षिक संस्था, सुरक्षा निकाय, स्वास्थ्य केन्द्र, स्वास्थ्य चौकी, निजी वा सामुदायिक अस्पताललगायतका स्वास्थ्य संस्था, दूर सञ्चार, खानेपानी, विद्युत् तथा अन्य ऊर्जा आपूर्तिलगायत कार्यमा संलग्न सरकारी कार्यालय, सामुदायिक भवन, पुस्तकालय, वृद्धाश्रम, बालसंरक्षण गृह तथा अन्य सार्वजनिक उपयोगको लागि निर्माण गरिएका घर, टहरा, पाटी पौवाजस्ता स्थान तथा ती स्थानले चर्चेका जग्गाहरू रहेको क्षेत्रलाई सम्झनुपर्छ। यो शब्दावलीले यस नीतिको अन्य वर्गीकरण भित्र नपरेका डाँडा, पाखा, पहाड, पर्वत, हिमाल वा हिउँले ढाकेको क्षेत्र चरनक्षेत्रसमेतलाई जनाउँछ। यो शब्दावलीले कुनै निश्चित भौगोलिक क्षेत्रमा रहेका खेल मैदान, पार्क, रङ्गशाला, चौतारो, चौर, वनभोज स्थल, कुनै विशेष प्रयोगमा नआएको खुला स्थान, राजमार्ग, जिल्ला सडक, गाउँ सडक, बस पार्क, एयरपोर्ट, कार्गोस्थल, सुख्खा बन्दरगाह र रेलमार्ग, रज्जुमार्ग, जलमार्ग, केवलकार विद्युतीय प्रसारण लाइन, बन्दरगाह र सार्वजनिक उपयोगको क्षेत्र भनी प्रचलित कानुन तथा सरकारले घोषणा गरी तोकेको क्षेत्रसमेतलाई जनाउँछ।

**ञ) निर्माण सामग्री (ढुङ्गा, गिटी, बालुवा) उत्खनन क्षेत्र**

"निर्माण सामग्री (ढुङ्गा, गिटी, बालुवा) उत्खनन क्षेत्र" भन्नाले निर्धारित मापदण्ड अनुसार ढुङ्गा, गिटी, बालुवा उत्खनन, उत्पादन वा प्रशोधन गर्न तोकिएको निश्चित क्षेत्र वा कुनै निश्चित भौगोलिक क्षेत्रमा निर्माण सामग्री (ढुङ्गा, गिटी, बालुवा) उत्खनन क्षेत्र भनी सरकारले घोषणा गरी तोकेको क्षेत्रसमेतलाई सम्झनुपर्छ।

**ट) आवश्यकताअनुसार तोकिएका अन्य क्षेत्र**

"आवश्यकताअनुसार तोकिएका अन्य क्षेत्र" भन्नाले माथि उल्लिखित कुनै पनि भू-उपयोग क्षेत्रमा नपर्ने तर विशिष्ट प्रकारको भू-उपयोग क्षेत्र उल्लेख गर्न आवश्यक देखिएका क्षेत्रलाई सम्झनुपर्छ। यो शब्दावलीले मिश्रित प्रकारको जग्गा रहेको क्षेत्रसमेतलाई सम्झनुपर्छ। मिश्रित क्षेत्र भन्नाले हाल विभिन्न शहर शहरोन्मुख र राजमार्ग क्षेत्रहरूमा आवासीय र व्यावसायिक क्षेत्र एक आपसमा अभिन्न तरिकाले मिश्रण भई एक अर्काबाट छुट्याउन नसकिने जग्गा रहेको क्षेत्रलाई सम्झनुपर्छ। यो क्षेत्र विगतका बस्ती वा बजार क्षेत्रलाई नियमन गर्ने प्रयोजनको लागि मात्र लागू हुनेछ।

## अनुसूची -२
## ९(घ) सँग सम्बन्धित
## भू-उपयोग कार्यान्वयन नतिजा खाका

| | सूचकहरू | आधार तथ्याङ्क | समयावधी | | | पुष्ट्याइको स्रोत | जिम्मेवार निकाय | जोखिम तथा पूर्वानुमान |
|---|---|---|---|---|---|---|---|---|
| मूल उद्देश्य Goal उपलब्ध भूमि श्रोतको समुचित उपयोगबाट दिगो सामाजिक वातावरणीय विकास र आर्थिक समृद्धि हासिल गर्न योगदान पुऱ्याउने | | - | | | | | | |
| प्रभाव Outcome योजनाबद्ध तवरबाट भू-उपयोग क्षेत्र वर्गीकरण भई भूमिको समुचित उपयोग भएको हुने | कूल गार्हस्थ्य उत्पादनमा यस क्षेत्रको योगदान | - | | | | आर्थिक सर्भेक्षण, प्रतिवेदन, वार्षिक प्रगति प्रतिवेदन | भूमिसुधार तथा व्यवस्था मन्त्रालय, अर्थ मन्त्रालय | |
| प्रतिफल १: भू-उपयोग सूचना प्रणाली (भू-उपयोग क्षेत्र निर्धारण नक्सा तथा डाटावेस) स्थापित भै सरोकारवालाको सहज पहुँच हुने | प्रणालीमा आबद्ध भू-उपयोग सूचनाहरूमा सरोकारवालाको पहुँच | - | | | | वार्षिक प्रगति प्रतिवेदन | राष्ट्रिय भू-उपयोग आयोजना | |

| | | | | | | | | |
|---|---|---|---|---|---|---|---|---|
| प्रतिफल २ः तहगत (सङ्घीय प्रादेशिक र स्थानीय) भू-उपयोग योजना तयार भएको हुने | सङ्घीय, प्रादेशिक र स्थानीय भू-उपयोग योजना तयार भएको सङ्ख्या | - | | | | वार्षिक प्रगति प्रतिवेदन | राष्ट्रिय भू-उपयोग आयोजना | |
| प्रतिफल ३ः भू-उपयोगको क्षेत्र वर्गीकरण भएको हुने | भू-उपयोगको क्षेत्र वर्गीकरण भएको गा.वि.स./न.पा.को सङ्ख्या | | | | | वार्षिक प्रगति प्रतिवेदन | राष्ट्रिय भू-उपयोग आयोजना | आवश्यक बजेट समयमा उपलब्ध हुने |
| प्रतिफल ४ः भू-उपयोग ऐन तर्जुमा भै कार्यान्वयन भएको हुने | ऐन पारित भएको | | | | | नेपाल राजपत्र | भूमिसुधार तथा व्यवस्थामन्त्रालय/ सामानय प्रशासन मन्त्रालय र अर्थ मन्त्रालय | |
| प्रतिफल ५ः भू-उपयोग व्यवस्थापन विभाग स्थापना भएको हुने | भू-उपयोग व्यवस्थापन विभाग स्थापना भएको | | | | | नेपाल सरकार मन्त्रिपरिषद्को निर्णय | भूमिसुधार तथा व्यवस्थामन्त्रालय/ सामानय प्रशासन मन्त्रालय र अर्थ मन्त्रालय | |

| | | | | | | | | |
|---|---|---|---|---|---|---|---|---|
| प्रतिफल ६: अन्तर निकाय समन्वय तथा अनुगमन संयन्त्र निर्माण भएको हुने | संयन्त्र निर्माण भएको | | | | | अन्तर निकाय समन्वय तथा अनुगमन संयन्त्र | भूमिसुधार तथा व्यवस्था मन्त्रालय/सामानय प्रशासन मन्त्रालय र अर्थ मन्त्रालय | |
| प्रतिफल ७: भू-उपयोग कार्यान्वयन गर्न स्थानीय निकाय सबल र सक्षम भएको हुने । | स्थानीय निकाय भू-उपयोग कार्यान्वयन गर्न सक्षम भएको | - | | | | सङ्घीय मामिला तथा स्थानीय विकास मन्त्रालय राष्ट्रिय भू-उपयोग आयोजनाको वार्षिक प्रतिवेदन | भूमिसुधार तथा व्यवस्थामन्त्रालय/सामानय प्रशासन मन्त्रालय र अर्थ मन्त्रालय | |

# राष्ट्रिय रोजगार नीति, २०७१

## १. पृष्ठभूमि

१.१ दिगो आर्थिक वृद्धि र गरिबी न्यूनीकरणको मुख्य आचार नै उत्पादनशील रोजगारी रहेको तथ्यलाई विश्वको वर्तमान प्रवृत्तिका रूपमा स्वीकार गर्न थालिएको छ। सामान्यतया, उत्पादनशील रोजगारीले मानिसको आय-आर्जन क्षमतालाई बढाउँछ र बेरोजगारी तथा न्यून रोजगारलाई कम गर्दछ, यसले अन्ततः गरिबी न्यूनीकरणमा योगदान गरिरहेको हुन्छ । यी प्रवृत्तिका अलावा के पनि देखिएको छ भने आर्थिक वृद्धि-रोजगारी-गरिबीबीचको अन्तरसम्बन्धमा आर्थिक वृद्धिका साथै रोजगारको परिणाम तथा गुणस्तरका ढाँचाहरू रोजगारीका उपलब्धिलाई प्रभावित तुल्याउन महत्त्वपूर्ण हुन्छन् ।

१.२ यसैको प्रतिक्रियास्वरूप विश्वभरका नीति निर्माताहरूले आ-आफ्ना प्रमुख नीतिगत विषयवस्तु तथा विकास रणनीतिका रूपमा सबैका लागि पूर्ण र उत्पादनशील रोजगारीलाई अघि सारेका छन्। खासगरी, रोजगारीसँग अन्तर-सम्बन्धित प्रवृत्तिलाई सम्बोधन गर्न विस्तृत नीति संरचना निर्माण गर्नेतर्फ मुलुकहरूको अग्रसरता बढेको देखिन्छ । जसलाई राष्ट्रिय रोजगार नीतिका रूपमा चिनिन्छ। यसबाहेक विकास योजना, क्षेत्रगत नीतिहरू र कार्यक्रमहरूको महत्त्वपूर्ण उद्देश्यका रूपमा रोजगारीलाई समेत समेट्न थालिएको छ ।

## २. विगतका प्रयासहरू

२.१ गरिबी निवारण र समावेशीता प्रवर्द्धन गर्न सर्वाधिक प्रभावकारी संयन्त्रका रूपमा रोजगारीको महत्त्व रहेको कुरालाई स्वीकार गरी नेपाल सरकारले रोजगार-सम्पन्न Job-enrich र समावेशी आर्थिक वृद्धिलाई प्रवर्द्धन गर्नेसम्बन्धी प्रयत्नमा ध्यान केन्द्रीत गरिरहेको छ । विभिन्न योजनाहरूले रोजगारीको महत्वमाथि जोड दिँदै समावेशी, उत्पादशील तथा लक्षित कार्यक्रमको विस्तार मार्फत मर्यादित रोजगारी वृद्धि गरी असमानता र गरिबी न्यूनीकरण गर्ने उद्देश्य राखेको पाइन्छ ।

२.२ राष्ट्रिय श्रम नीति, २०५६ को तर्जुमा गरिएपछि यसमा व्यापक सुधार गरी रोजगार नीति, २०६२ ल्याइयो, जसले तत्कालीन रोजगारको

विस्तृत प्रकृतिलाई समेटेको थियो । आय-आर्जनमुखी रोजगार सिर्जना गरी गरिबी निवारणको लक्ष्य हासिल गर्न उक्त नीति जारी गरिएको थियो ।

२.३ नेपालको अन्तरिम संविधान, २०६३ ले रोजगारीलाई मौलिक हकको रूपमा व्यवस्था गरेको छ । साथै श्रम तथा रोजगार नीति, २०६२ का अतिरिक्त नेपाल सरकारले धेरैवटा क्षेत्रगत नीतिहरू तर्जुमा गरिसकेको छ, जसमा रोजगारीलाई महत्त्वका साथ समेटिएको छ । यससम्बन्धी प्रमुख नीतिहरूमा औद्योगिक नीति, राष्ट्रिय कृषि नीति, राष्ट्रिय युवा नीति एवं प्राविधिक तथा व्यावसायिक शिक्षा र तालिम नीतिहरू रहेका छन् ।

## ३. वर्तमान स्थिति

३.१ गत दशकमा नेपालको अर्थतन्त्र औसतमा ४.१ प्रतिशत[1]ले मात्र वृद्धि भएको थियो । उत्पादनशील रोजगारी सिर्जना गर्नका लागि यो वृद्धि पर्याप्त थिएन । सामान्यतया आर्थिक वृद्धिका प्रमुख स्रोतहरूमा सेवा, कृषि क्षेत्र नै थिए । औद्योगिक क्षेत्रले अपेक्षा गरेभन्दा कम उपलब्धि हासिल गरेको थियो ।

३.२ विप्रेषणको बढ्दो आप्रवाह (कूल गार्हस्थ्य उत्पादनको २९ प्रतिशत हिस्सा) को पृष्ठभूमि केलाउँदा नेपालको आर्थिक वृद्धिलाई घरायसी उपभोगले प्रभावित तुल्याएको देखिन्छ र यसले निर्यातको न्यून वृद्धिदरको नकारात्मक असरलाई सन्तुलनमा ल्याउन प्रमुख भूमिका खेलेको छ । स्थिर पुँजी निर्माण निकै कमजोर स्तरमा रहेको र वृद्धिका आधारमा यो केवल ६ प्रतिशत रहेको छ । सार्वजनिक क्षेत्रको स्थिर पुँजी निर्माण अत्यन्तै न्यून छ । राजनीतिक सङ्क्रमण, चुनौतीपूर्ण नियमन र कानुनी संरचनाका साथै वित्तीय क्षेत्रको जोखिम, खासगरी देशभित्रका बैंकिङ क्षेत्रमा उत्पन्न कमजोरीका कारण पनि पूर्वाधार क्षेत्रअन्तर्गतको निजी लगानीमा बाधा पुगेको छ ।

३.३ वि.सं. २०६९ मा कृषि क्षेत्रको योगदान कुल गार्हस्थ्य उत्पादनको करिब ३४.४ प्रतिशत रहने अनुमान गरिएको थियो, जबकी उद्योग र सेवा क्षेत्रको हिस्सा क्रमशः १४.४ र ५३.२ प्रतिशत रहेको थियो । तथापि, मुलुकको अर्थतन्त्रमा कृषि क्षेत्रको हिस्सा घट्दोक्रममा रहेको भए पनि यही क्षेत्रले कुल श्रमशक्तिको करिब

1 अर्थ मन्त्रालय, आर्थिक सर्भेक्षण २०७०/७१, पृष्ठ XXX काठमाडौं ।

७४ प्रतिशत[2]लाई रोजगार प्रदान गरिरहेको छ, तर यसले श्रम उत्पादकत्वको कमजोर अवस्थालाई नै प्रतिविम्बित गर्दछ ।

३.४ आर्थिक वर्ष २०६९/७० मा कुल जनसङ्ख्याको २३.८ प्रतिशत नेपाली गरिबीको रेखामुनी रहेका छन् (रु. १९,२६१) प्रति व्यक्ति प्रति वर्ष, जुन आर्थिक वर्ष २०५२/५३ मा रहेको ४१.८ प्रतिशतबाट घटेको हो) असमानताको स्तरमा पनि कमी आएको छ : नेपालको खर्च आधारित स्थिर गुणक अर्थात् गिनी कोफिसिएन्ट (Gini Coeficient) सुधार भई २०६०/६१ बाट २०६७/६८ को बीचमा ४१ बाट ३५ मा झरेको छ ।[3]

३.५ गरिबीको स्तर र माथिदेखि तलसम्म फैलिएको विभेद (Vertical discrimination) मा बिस्तारै कमी आए पनि समान तहमा हुने विभेद Horizontal discrimination अझै कायम छ । खासगरी, भौगोलिक क्षेत्र, सामाजिक समूह र महिलामा गरिबी र मानव विकास सूचकमा असमानता र विभेदहरू कायमै छन् । विभिन्न जाति र जातीय समूहहरूबीचको भिन्नता भौगोलिक क्षेत्रको विषयभन्दा बढी मात्रामा मुखरित भइरहेको छ । यसर्थ, यसले कुनै खास इलाका वा क्षेत्रभित्र पनि विशेष सामाजिक समूहलाई लक्षित गर्नु आवश्यक छ ।

३.६ यी समष्टिगत आर्थिक तथा विकास चुनौतीहरूका सन्दर्भमा नेपालले बेरोजगारीसँग सम्बन्धित विविध किसिमका चुनौतीहरूको सामना गर्नु परिरहेको छ : जस्तैः श्रम आपूर्तिमा बलियो दबाब, अनौपचारिक रोजगारको प्रभुत्व, संरचनागत रूपान्तरण र उत्पादनशील रोजगारी सिर्जनाको कमी, अपर्याप्त सीप र शैक्षिक उपलब्धि तथा श्रमबजारमा क्षेत्रीय, सामाजिक र लैङ्गिक भेदभाव आदि ।

३.७ वि.सं. २०६८ को राष्ट्रिय जनगणनाको आँकडाअनुसार नेपालको कुल जनसङ्ख्या करिब २ करोड ६५ लाख छ, र लिङ्गिय अनुपात (प्रति १०० महिलामा पुरुषको सङ्ख्या) वि.सं. २०५८ को ९९.८ बाट २०६८ मा ९४.२ मा झरेको छ । नेपालमा युवा जनसङ्ख्याको बाहुल्यता रहेको छ : ३५ वर्षभन्दा कम उमेरका मानिसको

---

2 केन्द्रीय तथ्याङ्क विभाग, नेपाल श्रमशक्ति सर्भेक्षण २०५६ सम्बन्धी प्रतिवेदन, काठमाडौं सीबीएस/यूएनडीपी/आईएलओ ।

3 केन्द्रीय तथ्याङ्क विभाग, नेपाल जीवनस्तर सर्भेक्षण २०६७/६८, तथ्याङ्क प्रतिवेदन, संस्करण १ र २ ।

जनसङ्ख्या कूल जनसङ्ख्याको झण्डै ७० प्रतिशत छ । तथापि, मुख्य चुनौती नै यो जनसाङ्ख्यिक उपस्थितिबाट कसरी लाभ लिन सकिन्छ भन्ने हो । राष्ट्रिय युवा नीति, २०६६ ले नेपालमा युवालाई १६ देखि ४० वर्षबीचको उमेरका व्यक्ति भनी परिभाषित गरेको छ ।[4] यो परिभाषाले कूल जनसङ्ख्यामा युवाको हिस्सा झण्डै ४० प्रतिशत रहेको देखाउँछ ।

३.८ जनसङ्ख्या वृद्धि अघिल्लो दशक (२०४८-२०५८) मा रहेको प्रतिवर्ष २.२५ प्रतिशतबाट घट्दै गएर प्रतिवर्ष १.३५ प्रतिशत भए पनि नेपालको श्रमशक्ति बलियो ढङ्गबाट निरन्तर वृद्धि भइरहेको छ । देशको कुल श्रमशक्ति वि.सं. २०५८ मा १ करोड १८ लाख ४० हजार रहेकोमा २०६८ मा यो १ करोड ५९ लाख १० हजार पुगेको छ । यसबाट श्रमशक्तिको वार्षिक वृद्धिदर २.४ प्रतिशत रहेको देखिन्छ । श्रमशक्तिको बनावटमा पनि निकै परिवर्तन भएको छ : श्रमबजारमा अहिले महिलाको हिस्सा ठूलै छ र शहरी क्षेत्रमा बसोबास गर्ने जनसङ्ख्याको प्रतिशत बढेको छ । यसबाट शहरी क्षेत्रमा रोजगारका निम्ति ठूलै दबाब सिर्जना भइरहेको छ ।

३.९ नेपाल श्रमशक्ति सर्भेक्षण, २०६५ का अनुसार रोजगारीमा रहेको १५ वर्षभन्दा माथिको जनसङ्ख्या १ करोड १७ लाख ८० हजार छ जसले नेपाल श्रमशक्ति सर्भेक्षण २०५५ बाट रोजगार सिर्जनाका दृष्टिले २.२ प्रतिशतको वृद्धि भएको देखाउँछ । रोजगारमा रहेको औषत अनुपात ८१.७ प्रतिशत रहेको अनुमान छ । जहाँ पुरुष ८५.५ प्रतिशत र महिला ७८.५ प्रतिशत छन् ।

३.१० नेपालको श्रमबजारमा मर्यादित कार्यको कमीको सही सूचक बेरोजगारीको अवस्था होइन । किनकि बेरोजगार दर वि.सं. २०६५ मा २.१ प्रतिशत मात्र रहेको थियो, जसमा पुरुषको बेरोजगार दर २.२ प्रतिशत र महिलाको बेरोजगार दर २.० प्रतिशत थियो ।[5] खुला बेरोजगारीको समस्याभन्दा पनि समय-सम्बद्ध न्यून रोजगारी (६%) को समस्या, सीपको बेमेल (Skill mismatch) र न्यून आर्जन नै प्रमुख सरोकारका विषयहरू हुन् । यसले श्रम उपयोगको न्यून स्तरलाई प्रतिबिम्बित गरेको छ ।

---

4 केन्द्रीय तथ्याङ्क विभाग, राष्ट्रिय जनसङ्ख्या तथा आवास गणना २०६८ प्रतिवेदन, काठमाडौं, नेपाल सरकार ।

5 केन्द्रीय तथ्याङ्क विभाग, नेपाल श्रमशक्ति सर्भेक्षण २०६५ प्रतिवेदन, काठमाडौं, सीबीएस/युएनडीपी/आईएलओ ।

३.११ शहरी क्षेत्रहरूमा ग्रामीण क्षेत्रहरूको भन्दा निकै न्यून (सहरमा ६७ प्रतिशत र ग्रामीण क्षेत्रमा ८४ प्रतिशत) श्रमशक्ति सहभागिता दर रहेको छ । पुरुष (८०.९ प्रतिशत) को श्रमिशक्ति सहभागिता दर महिला (७९.४%) को भन्दा केही बढी छ । क्षेत्रीय भिन्नताका आधारमा श्रमशक्ति सहभागिता दर शहरी-काठमाडौं उपत्यका क्षेत्रमा ज्यादै न्यून (६१ प्रतिशत) छ, जहाँ बेरोजगारी दर सर्वाधिक बढी छ (८ प्रतिशत) । अर्कातर्फ, श्रमशक्ति सहभागिता दरमध्ये सुदूर पश्चिमको ग्रामीण तथा पहाडी क्षेत्रमा सर्वाधिक बढी (९० प्रतिशत) छ जबकी बेरोजगार दर यी क्षेत्रमा सबैभन्दा कम (१ प्रतिशतभन्दा कम) रहेको छ ।

३.१२ रोजगारीमा वृद्धिका अलावा गुणस्तरीय रोजगारी सिर्जनाका निम्ति उत्पादकत्वयुक्त वृद्धि अत्यावश्यक हुन्छ । किनभने श्रम उत्पादकत्व राम्रो भएमा त्यसले राम्रो कार्य अवस्था, बढी ज्याला तथा मानव स्रोतमा बढी लगानी गर्नेतर्फ उन्मुख गराउँछ ।

३.१३ आमरूपमा अनौपचारिक क्षेत्र नेपालको दीर्घस्थायी आर्थिक विशेषता रहिआएको छ । रोजगार सिर्जना, उत्पादन र आय सिर्जनामा अनौपचारिक क्षेत्रले नै प्रभुत्व कायम गरिरहेको छ । नेपाल श्रमशक्ति सर्भेक्षण २०६५ का अनुसार, रोजगारीमा रहेका ९६.२ प्रतिशतमध्ये बहुसङ्ख्यक नेपाली कामदारहरू अनौपचारिक क्षेत्रका रोजगार ( शहरी क्षेत्रमा ८८.६ प्रतिशत र ग्रामीण क्षेत्रमा ९७.४ प्रतिशत) मा आबद्ध छन् । अनौपचारिक क्षेत्रका रोजगारहरू न्यून गुणस्तरीय, अनुत्पादनशील र न्यून पारिश्रमिकबाट ग्रस्त छन् ।

३.१४ शिक्षाको स्तर र रोजगारीबीचको अन्तरसम्बन्ध निकै महत्त्वपूर्ण हुन्छ । शिक्षा क्षेत्रको दृष्टिकोण नै राष्ट्रिय र अन्तर्राष्ट्रिय श्रमबजारका आवश्यकता पूरा गर्ने सीप भएका प्रतिस्पर्धी र उत्पादकत्व राम्रो भएका नागरिक उत्पादन गर्नु हो । नेपालमा, आधारभूत भौतिक पूर्वाधारको कमी, अपर्याप्त शिक्षक र उत्तीर्ण हुने दरमा सामुदायिक र निजी विद्यालयहरूबीचको भिन्नताका कारण औपचारिक शिक्षामा समस्या खडा भएको छ । शिक्षामा महिला, दलित, अशक्त, पिछडिएको समूह, आदिवासी जनजाति र मधेसीको पहुँच नहुनु अर्को प्रमुख चुनौती हो ।

३.१५ नेपालमा शैक्षिक उपलब्धिका दृष्टिले पछिल्लो समयमा राम्रै प्रगति भए पनि कुल साक्षारता दर (५ वर्ष र त्यो भन्दामाथि) झन्डै ६० प्रतिशत छ र आ.व. २०६०/६१ मा रहेको ५०.६ प्रतिशतको

तुलनामा यो निकै राम्रो सुधार हो । (नेपाल जीवनस्तर सर्भेक्षण २०६७/६८ ) । नेपाल श्रमशक्ति सर्भेक्षण २०६५ ले विद्यालय शिक्षामा हाल उपस्थित नरहेका तर कुनै न कुनै किसिमको शैक्षिक तह पूरा गरेकाहरूको आङ्कडा उपलब्ध गराएको छ । झन्डै एक तिहाई युवा कुनै पनि प्रकारको विद्यालयमा कहिल्यै भर्ना भएका छैनन् र ६० प्रतिशतले कक्षा ५ वा त्योभन्दा तल्लो तह उत्तीर्ण गरेका छन् । माध्यमिक र उच्च तहको शिक्षा उत्तीर्ण गर्ने युवाको अनुपात ज्यादै न्यून छः १७.१ प्रतिशत युवाले मात्र कक्षा १० वा सोभन्दा माथिको शैक्षिक योग्यता हासिल गरेका छन् । शिक्षित युवामा रहेको न्यून योग्यताले शिक्षित भनिएकाहरू पनि धेरै गुण कमजोर तथा श्रमबजारमा प्रवेश गर्ने क्रममा अनुभवहीन रहेको दृश्य प्रस्तुत गर्दछ ।

३.१६ शिक्षका स्तरसँगै निस्क्रियता र बेरोजगारको दर बढ्दोक्रममा रहेकाले शिक्षित बेरोजगारको वर्तमान परिस्थिति त्यति सकारात्मक रहेको छैन ।

३.१७ मुलुकको कुल जनसङ्ख्यामा आवश्यक परेको रोजगारको तुलनामा युवाको जनसङ्ख्याको अनुपात तीव्ररूपमा वृद्धि भइरहेको छ । देशमा व्याप्त गरिबी र राम्रो रोजगारको विकल्पको कमीले ठूलो युवा जमात बाच्नकै निम्ति पनि अनौपचारिक क्षेत्रका क्रियाकलापमा संलग्न हुनु परिरहेको छ र उनीहरूसँग यो बाहेक अर्को विकल्प पनि छैन । रोजगार प्राप्त गर्न असक्षम भएमा त्यसले युवामा जोखिमपना र प्रयोगविहिनताको भावना सिर्जना गर्ने सम्भावना हुन्छ र उनीहरू नै सीमान्तकृत, बहिस्करण, नैराश्यता र न्यून आत्म-सम्मानबाट गुज्रिनुपर्दछ ।

३.१८ शिक्षा र सीप विकासका क्रियाकलापहरूले समान्यतया श्रमबजारका सम्पूर्ण माग सम्बोधन गर्नुपर्दछ । साथै यी क्रियाकलापहरूले अस्थायी वैदेशिक रोजगारका लागि विदेश जानेहरू र बौद्धिक पलायन हुनेहरूका कारण सिर्जित क्षतिलाई समेत भरथेग गर्नुपर्ने हुन्छ । दक्ष जनशक्तिको तीव्ररूपमा भइरहेको परिवर्तित मागलाई प्रभावकारीरूपमा प्रक्षेपण, विश्लेषण र अनुगमन गर्नका लागि श्रमबजार सूचनाको सङ्कलन र विश्लेषण गर्न पनि नीतिगत क्रियाशीलता आवश्यक छ । जनशक्तिको माग र आपूर्ति पक्षबीच मेल हुन सकिरहेको छैन ।

३.१९ हाल उच्च दक्ष श्रमशक्तिको आपूर्ति (डाक्टर, नर्स) मागको तुलनामा

बढी छ जबकी कम-दक्ष स्वास्थ्यकर्मीको अभाव कायमै छ। यसैगरी, प्राविधिक शिक्षा लिएका व्यक्तिहरू (इन्जिनियर, सब-इन्जिनियर र वैज्ञानिकहरू) को मागको तुलनामा आपूर्ति बढी भइरहेको छ । प्राविधिक दक्ष जनशक्तिको यस्तो अवस्था रहेको सन्दर्भमा उच्च शिक्षित कामदार, प्रशासक, व्यवस्थापक, विश्वविद्यालय शिक्षक, कानुन व्यवसायी र अरू क्षेत्रहरूको आपूर्ति मागको तुलनामा बढी नै देखिन्छ ।

३.२० व्यावसायिक सीप युवाका लागि उपलब्धिमूलक हुन सक्छ। तथापि, विद्यालयदेखि कार्य सङ्क्रमणकालीन सर्भेक्षण २०६५ (School-to-Work Transition Survey) ले के देखाएको छ भने व्यावसायिक शिक्षा/तालिमले स्थायी वा करिअर रोजगारमा अग्रसर गराउन मद्दत गर्ने भए पनि त्यस्तो व्यावसायिक शिक्षा/तालिमलाई नेपाली युवाले कमै सम्मानजनक ठान्छन् । बरु सामान्यतया माथिल्लो प्राज्ञिक डिग्री नै राम्रो रोजगार प्राप्त गर्न आवश्यक हुने उनीहरूको विश्वास छ। रोजगारदाताहरूले समेत कुनै पनि किसिमका पदमा आवेदन गर्ने युवाको शैक्षिक योग्यतालाई नै सर्वाधिक महत्त्व दिइआएको पाइन्छ । हातको भरमा गरिने (म्यानुअल)/उत्पादन-तहको कामका निम्ति शैक्षिक स्तरलाई खासै महत्त्व दिइएको पाइन्न । समग्रमा, व्यावसायिक शिक्षा तथा तालिममा लगानी बढाउनुपर्ने खाचो महसुस गरिएको छ । सीपयुक्त जनशक्तिको मागलाई बढावा दिनेतर्फ रोजगारदातासँग राम्रो सम्बन्ध स्थापित गरिनुपर्दछ ।

३.२१ श्रमशक्तिमा वृद्धि भएबमोजिम रोजगारका अवसरको कमी भएको परिणामस्वरूप मुख्य श्रमबजारमा समायोजन गर्नुपर्ने चाप वृद्धि भई आप्रवासी कामदारको सङ्ख्या बढेको छ । नेपाल जीवनस्तर सर्भेक्षण २०६७/६८ का अनुसार, नेपालको कुल जनसङ्ख्याको २०.३ प्रतिशत आप्रवासी छन् (२९.८ प्रतिशत पुरुष, १०.९ प्रतिशत महिला) जसमध्ये ५६.९ प्रतिशत आन्तरिक आप्रवासी छन् भने ४३.१ प्रतिशत विदेश गएका छन्। पुरुष आप्रवासीको सङ्ख्या वि.सं. २०५८ मा ६,७९,४६९ रहेकोमा २०६८ मा तीव्र वृद्धि भई १६,६३,२३७ पुगेको छ भने महिला आप्रवासीको सङ्ख्या पनि वि.सं. २०५८ मा ८२,७१२ रहेकोमा २०६८ मा २,५४,६६६ पुगेको छ ।

३.२२ वैदेशिक रोजगारले नेपालको ग्रामीण क्षेत्रमा आर्थिक समृद्धि ल्याउन योगदान पुऱ्याई गरिबी न्यूनीकरणमा निकै सघाएको छ। नेपालका

करिब ५६ प्रतिशत घरपरिवारले विदेशबाट विप्रेषण प्राप्त गरेका छन् (नेपाल जीवनस्तर सर्भेक्षण: २०६७/६८ ) । औषतमा, विदेशमा कार्यरत व्यक्तिको एउटा घरपरिवारले प्रति वर्ष रु. ८०,४६२ विप्रेषण प्राप्त गर्दछ । विप्रेषणको यो उच्च आप्रवाहको महत्त्व निकै बढी छ । वि.सं. २०६४ मा गरिएको एउटा सर्भेक्षणअनुसार, वि.सं. २०५२/५३ देखि २०६०/६१ को समयावधिमा पाचमा एक भाग गरिबी न्यूनीकणमा कार्य-सम्बद्ध आप्रवासन तथा घर पठाइएको विप्रेषणको भूमिका महत्त्वपूर्ण रहेको थियो ।

३.२३ माथि उल्लिखित श्रमशक्ति वृद्धिको अवस्थालाई विचार गर्दा नेपालमा हरेक वर्ष श्रमबजारमा ४५०,००० भन्दा बढी व्यक्ति प्रवेश गरिरहेका छन् ।[6] नेपालमा हाल रोजगारी पाइरहेका तर उच्च उत्पादकत्व र कमाइ हुने रोजगारको खोजी गर्ने उनीहरूसमेतको पूरक आवश्यकता सम्बोधन गर्नुपर्ने चुनौतीले समग्र श्रमशक्तिको सङ्ख्यात्मक आयमलाई प्रस्तुत गरेको छ । यो आधारमा वि.सं. २०६६ देखि ०७२ को अवधिमा प्रतिवर्ष ५ लाख उत्पादनशील रोजगारको अवसर सिर्जना गर्नुपर्ने आवश्यकता अनुमान गरिएको छ ।

३.२४ नेपाल सरकार र निजी क्षेत्रका सम्पूर्ण तालिम प्रदायक संस्थाहरूबाट प्रदान गरिएका हालका तालिमबाट प्रशिक्षित व्यक्तिको विद्यमान सङ्ख्या तथा सीपयुक्त तालिम लिनुपर्ने आवश्यकता भएका व्यक्तिको सङ्ख्याबीच ठूलो अन्तर रहेको छ । हरेक वर्ष नेपालबाट ४००,००० भन्दा बढी व्यक्ति रोजगारका लागि विदेश गइरहेका छन् जबकी नेपालमा स्थापित विभिन्न संस्थाहरूले वि.सं. २०६७ को एक वर्ष सञ्चालन गरेका तालिमबाट ७४,२७५ जना मात्र दक्ष व्यक्ति उत्पादन भएका थिए ।[7]

३.२५ नेपालमा, श्रमबजारको नियमनले लगानीमा सहजीकरण गरिरहेको छ वा अवरोध पुऱ्याइरहेको छ भन्ने विषयमा लामो समयदेखि बहस चलिरहेको छ । औद्योगिक वृद्धि र रोजगारका निम्ति रोजगारदाता र श्रमिक/कर्मचारीबीच राम्रो सम्बन्ध अत्यावश्यक हुन्छ । तर औद्योगिक क्षेत्रमा हडताल र तालाबन्दीका घटनाक्रहरू पछिल्ला वर्षमा निकै वृद्धि भएको छ र नेपालमा अहिले यी कुराहरू सामान्य भइसकेका छन् ।

---

6 राष्ट्रिय योजना आयोग, तेह्रौं राष्ट्रिय योजना: आधार पत्र २०७०/७१-२०७२/७३, पृष्ठ ९१, काठमाडौं ।

7 अर्थ मन्त्रालय, आर्थिक सर्भेक्षण २०६८/६९, पृष्ठ २१०, काठमाडौं

## ४. प्रमुख समस्या र चुनौतीहरू

४.१ हालसम्म भएका विभिन्न नीतिगत प्रयासहरूका बाबजुद रोजगारका सङ्ख्यात्मक र गुणात्मक चुनौतीहरू अद्यपि कायम छन् र यो अवस्थाले नेपालको श्रमबजारमा राम्रो रोजगारको कमी रहेको प्रतिबिम्बत गर्दछ । श्रमबजारका मुख्य चुनौतीहरू निम्न छन् :

(क) अपर्याप्त संरचनागत रूपान्तरण र विविधता,

(ख) उत्पादनशील रोजगारको कमी (न्यून उत्पादकत्व, न्यून ज्याला र कमजोर कार्य अवस्था),

(ग) शिक्षको कमजोर स्तर तथा अपर्याप्त सीप विकास, वैदेशिक रोजगारको प्रयोग र खोजी, युवा तथा अरू सामाजिक समूहहरूका लागि विविध किसिमका अवरोध,

(घ) श्रमबजार सूचना प्रणाली र श्रम प्रशासनको अभाव ।

४.२ नेपालले सामना गरिरहेका यी श्रमबजारका चुनौतीहरू निकै जटिल छन् र यिनीहरू देशको आर्थिक, सामाजिक र राजनीतिक सन्दर्भसँग गहिरोसँग जोडिएका छन् । यसैबीच, प्रभावकारी नीति निर्माणका सन्दर्भमा विचार गर्दा मुलुकको समग्र विकासका उद्देश्य हासिल गर्न योगदान पुऱ्याउन सक्ने प्रभावकारी कार्यक्रम र परियोजनाहरू समावेश रहेका नीतिहरूको कार्यान्वयन नै प्रमुख आवश्यकताको रूपमा उभिएको छ । रोजगारीका उद्देश्यका दृष्टिबाट नीति कार्यान्वयनमा अझ प्रभावकारिता ल्याउन कार्यान्वयन क्षमतामा थप वृद्धि गर्नुपर्ने, रोजगारी वृद्धि पहलहरूको अनुगमन र मूल्याङ्कनमा सुधार गर्नुपर्ने तथा नीति-निर्माणको उद्देश्यका रूपमा रोजगारीको प्राथमिकीकरण र समन्वयलाई सबलीकरण गर्नुपर्ने आवश्यकता छ ।

४.३ नेपालमा देखिएको कमजोर औद्योगिक सम्बन्ध श्रमबजार सुधारका प्रमुख अवरोधमध्ये एक हो जसले श्रम कानुनको सुधार र श्रमबजारको कार्यसञ्चालनमा सुधार ल्याउने नीतिहरूको प्रभावकारी कार्यान्वयनमा रोकावट ल्याउँछ ।

४.४ रोजगारी सिर्जनाका निमित्त लगानी अत्यावश्यक हुन्छ तर आवश्यक पूर्वाधारको सीमितता, राजनीतिक स्थायित्व र लगानीका निम्ति लगानीमैत्री सकारात्मक वातावरणको कमीसँगै अर्थतन्त्रका धेरै क्षेत्रमा रहेको कमजोर उत्पादकत्वले बढ्दो श्रमशक्तिलाई प्रयोगमा ल्याई रोजगारी सिर्जना गर्नसकेको छैन ।

४.५ मुलुकको समग्र विकास क्रियाकलापका निम्ति ऊर्जा पनि प्रमुख आवश्यकताका रूपमा खडा भएको छ । मुलुक जलस्रोतका क्षेत्रमा निकै धनी भए पनि सम्पूर्ण आर्थिक, सामाजिक तथा विकासका गतिविधिहरू सञ्चालनका निम्ति आवश्यक पर्ने ऊर्जा पर्याप्तरूपमा उपलब्ध नहुँदा ती सबै क्षेत्र खुम्चिएका छन् ।

## ५. नयाँ नीतिको आवश्यकता

५.१ माथि सूचीबद्ध चुनौतीहरूको सामना गर्न र समस्याको समाधान गर्न नयाँ राष्ट्रिय रोजगार नीतिको निर्माण गर्नुपर्ने आवश्यकता देखिएको हो । यो परिस्थितिलाई सम्बोधन गर्ने क्रममा वि.सं. २०६९ को राष्ट्रिय श्रम सम्मेलनले नेपालको बदलिँदो सामाजिक-आर्थिक वातावरणका चुनौतीहरूलाई सम्बोधन गर्न तथा राष्ट्रिय विकास समस्या समाधान समितिको निर्देशनलाई पूरा गर्नसमेत नयाँ राष्ट्रिय रोजगार नीति तयार गरिएको छ ।

५.२ कुनै पनि मुलुकमा रोजगारीका चुनौतीहरू विभिन्न क्षेत्रबीच अन्तर-सम्बन्धित हुने भएकाले एउटा विस्तृत नीति पद्धति आवश्यक हुन्छ । यो नीतिले विशिष्ट रोजगारीको प्राथमिकतालाई लक्षित गर्दछ र नीति निर्माणका प्रयासलाई बढी व्यापकता दिई समन्वय र सामन्जस्यपूर्ण तरिकाबाट सुधार ल्याउन प्रयत्न गर्दछ ।

५.३ नेपालको अन्तरिम संविधान, २०६३ अनुसार पनि नयाँ रोजगार नीति निर्माण गर्नुपर्ने आवश्यकता रहेको उल्लेख गरेको छ । यसलाई न्यायिक पुनरावलोकनका माध्यमबाट समेत अझ बढी जोड दिइएको छ ।

५.४ यसर्थ, समग्रमा यो नीति स्वीकृत भई कार्यान्वयनमा आएमा निम्न कार्य गर्नेछः

(क) रोजगारका मुख्य उद्देश्यलाई सम्बोधन गरी नीति कार्यान्वयनमा सुधार ल्याउने,

(ख) नीति-निर्माण गर्दा रोजगारका उद्देश्यहरूको समायोजनलाई अभिवृद्धि गर्ने,

(ग) नीतिगत सुझावहरूको कार्यान्वयनका निम्ति क्षमता अभिवृद्धि गर्ने र

(घ) मर्यादित र उत्पादनमूलक रोजगार प्रवर्द्धनका निम्ति नेपाल सरकारको कार्यपद्धतिमा समन्वय र सामन्जस्यलाई सबल बनाउने ।

## ६. नीति तर्जुमाका आधारहरू

६.१ नेपालको अन्तरिम संविधान २०६३, तेह्रौं त्रिवर्षीय योजना (२०७०/७१- २०७२/७३) को आधार-पत्रमा उल्लिखित सरकारी नीति संरचनामा आधारित रहेर वर्तमान राष्ट्रिय रोजगार नीतिको निर्माण गरिएको छ। यसले नेपालको समग्र विकास लक्ष्य हासिल गर्ने कार्यमा बढी प्रभावकारिता र सामान्जस्यतालाई सुनिश्चित गर्नेछ। यो नीति श्रम तथा रोजगार नीति, २०६२ मै आधारित रहेर तयार पारिएको छ । साथै, यो नीतिको कार्यान्वयनका क्रममा सिकिएका पाठलाई पनि विचार गरिएको छ । यसबाहेक, औद्योगिक नीति, कृषि नीति, राष्ट्रिय युवा नीति, सूचना प्रविधि नीति, श्रम ऐन र ट्रेड युनियन ऐनसमेतका रोजगारका उल्लेखित उद्देश्यहरूप्रति सान्दर्भिक नीतिगत विषयमा यो नीतिले ध्यान पुऱ्याएको छ ।

६.२ हालका असमानता र विभेदलाई सम्बोधन गर्नका निम्ति यो नीतिले महिला, युवा, आदिवासी जनजाति, दलित, मधेसी र अरू सीमान्तकृत समूहहरू/क्षेत्रहरूलाई लक्षित गरेको छ र नीतिमा उनीहरूका सरोकारका विषयलाई समाहित गरिएकोछ ।

६.३ यो नीतिको निर्माण ट्रेड युनियन, रोजगारदाता संस्थाहरू तथा अन्य सरोकारवालाहरूसँगको रचनात्मक संवादमा आधारित छ। नीतिको प्रभावकारी स्वामित्व ग्रहण र कार्यान्वयनका निम्ति सामाजिक संवाद तथा औद्योगिक सम्बन्धमा सुधार ल्याउनु महत्त्वपूर्ण कदम हुन् ।

६.४ नीतिका लक्ष्यहरू हासिल गर्नका निम्ति सार्वजनिक क्षेत्रलाई सहजकर्ता र सहयोगी पक्षको रूपमा हेरिएको छ। जबकी, नीजिक्षेत्र आर्थिक वृद्धि र रोजगार सिर्जनाको इन्जिन हो ।

६.५ अन्तर्राष्ट्रिय श्रम सङ्गठनको रोजगार नीति अभिसन्धि, १९६४ तथा सिफारिस नं. १२२ र १८४, तथा मानव स्रोत विकास अभिसन्धि, १९७५ (नं. १४२) र मानव स्रोत विकास सुझाव, २००४ (नं. १९५) लाई यो नीति निर्माणमा महत्त्वपूर्ण निर्देशकका रूपमा लिइएको छ ।

## ७. दूरदृष्टि Vision

७.१ नेपालमा उपलब्ध श्रम जनशक्तिलाई प्रतिष्पर्धी बनाउँदै सक्षम

श्रमबजारको माध्यमद्वारा उत्पादनशील, मर्यादित एवं सुरक्षित रोजगारीमा संलग्न गराई राष्ट्रिय अर्थतन्त्रलाई सबल र गतिशील बनाई गरिबी निवारणमा योगदान पुऱ्याउनु राष्ट्रिय रोजगार नीतिको दीर्घकालीन दृष्टिकोण (Vision) हुनेछ ।

## ८. प्रमुख उद्देश्यहरू

८.१ राष्ट्रिय रोजगार नीतिका प्रमुख उद्देश्यहरू निम्नअनुसार छन् :

१. विभिन्न क्षेत्रगत नीतिहरूलाई यस नीतिसँग सामन्जस्यता कायम गरी रोजगारी सिर्जनातर्फ केन्द्रित गर्न राष्ट्रिय अर्थतन्त्रलाई प्रवर्द्धन गर्दै सबै नागरिकहरूलाई उत्पादन र प्रतिफलमूलक रोजगारीका अवसरहरू उपलब्ध गराउने,

२. अनौपचारिक रोजगारलाई क्रमशः औपचारिक पद्धतिमा रूपान्तरण गर्दै रोजगारको गुणस्तरमा सुधार ल्याउने,

३. श्रमबजारको आवश्यकताअनुसारको ज्ञान र सीपमा आधारित श्रम शक्ति तयार पार्न उपयुक्त अवसरहरू सिर्जना गर्ने,

४. आप्रवासी तथा प्रवासी कामदारको उपयुक्त व्यवस्थापन गर्ने,

५. युवालक्षित रोजगारका अवसरहरू सिर्जना गर्न प्राथमिकता दिने,

६. अनुसन्धानमा आधारित आधुनिक सूचना प्रणालीको प्रयोग बढाउँदै श्रमबजारलाई सबल बनाउने, र

७. सुमधुर औद्योगिक श्रम सम्बन्धको विकास गरी रोजगार-मैत्री लगानीलाई प्रोत्साहन गर्ने ।

८.२ माथि उल्लिखित महत्त्वपूर्ण उद्देश्यका अलावा यो नीतिले नीति-निर्माणमा रोजगारको विद्यमान परिस्थितिलाई सम्बोधन गर्ने लक्ष्य पनि राखेको छ । यस सन्दर्भमा यो नीतिले नीति-निर्माण प्रक्रिया तथा नीतिको कार्यान्वयनको प्रभावकारितामा सुधार ल्याउनेछ । जसबाट निम्न उपलब्धि हासिल हुनेछन् :

(क) नीति-निर्माण प्रक्रिया र पहलहरूमा रोजगारका उद्देश्यहरूको बलियो समायोजन र प्राथमिकीकरण,

(ख) सरोकारवालाहरूको क्षमता विकास तथा रोजगारसम्बन्धी सचेतना अभिवृद्धिमार्फत रोजगारसँग सम्बन्धित नीतिहरू र कार्यक्रमहरूको प्रभावकारी कार्यान्वयन,

(ग) सरकार, सामाजिक साझेदारहरू तथा अन्य सरोकारवालाहरूबीच प्रभावकारी समन्वय र सामन्जस्य,

(घ) उत्पादनशील रोजगारी अभिवृद्धि,

## ९. नीतिहरू

९.१ प्रस्तुत नीतिहरू बुँदा ८.१ मा सूचीकृत सातवटा प्रमुख उद्देश्यहरूको सेरोफेरोमा निर्माण गरिएका छन् । यसबाहेक, अरू बुँदा ८.२ को प्रभावकारी कार्यान्वयन भएपश्चात् हासिल हुने उपलब्धिसँग जोडिएका छन् । तालिका १ ले नीतिका उद्देश्यहरू र तदनुरूपका नीतिहरूबीचको सम्बन्धलाई प्रकाश पारेको छ ।

तालिका १ः उद्देश्य र नीतिबीचको सम्बन्ध

| उद्देश्यहरू | नीतिहरू |
|---|---|
| विभिन्न क्षेत्रगत नीतिहरूलाई यस नीतिसँग सामन्जस्यता कायम गरी रोजगारी सिर्जनातर्फ केन्द्रित गर्न राष्ट्रिय अर्थतन्त्रलाई प्रवर्द्धन गर्दै सबै नागरिकहरूलाई उत्पादन र प्रतिफलमूलक रोजगारीका अवसरहरू उपलब्ध गराउने । | कृषि, उत्पादन, निर्माण, पर्यटन, सूचना प्रविधि र जलस्रोत/ऊर्जा (खण्ड १०) |
| अनौपचारिक रोजगारलाई क्रमशः औपचारिक पद्धतिमा रूपान्तरण गर्दै रोजगारको गुणस्तरमा सुधार ल्याउने । | उद्यमशीलता, नियमन वातावरण, कानुनी सुधार (खण्ड ११) |
| श्रमबजारको आवश्यकताअनुसारको ज्ञान र सीपमा आधारित श्रमशक्ति तयार पार्न उपयुक्त अवसरहरू सिर्जना गर्ने | समन्वय, शिक्षा (आधारभूत, व्यावसायिक) पेशागत परामर्श र मिल्दो सीपमा सुधार (खण्ड १२) |
| आप्रवासी तथा प्रवासी कामदारको उपयुक्त व्यवस्थापन गर्ने, | सीप विकास, सुशासन र आप्रवासी कामदारको सुरक्षा, सूचना र सचेतना (खण्ड १३) |
| युवालक्षित रोजगारका अवसरहरू सिर्जना गर्न प्राथमिकता दिने, | श्रमबजार नीति, रोजगार सेवा केन्द्र, व्यावसायिक शिक्षा तथा तालिमको प्रवर्द्धन, लक्षित कार्यक्रम (खण्ड १४) |

| | |
|---|---|
| अनुसन्धानमा आधारित आधुनिक सूचना प्रणालीको प्रयोग बढाउँदै श्रमबजारलाई सबल बनाउने र | श्रमबजार सूचनाको सङ्कलन र प्रसार (आपूर्ति र माग पक्ष), श्रमबजार सूचना विश्लेषणका निम्ति क्षमता विकास, रोजगार विनियम तथा सेवा (खण्ड १५) |
| सुमधुर औद्योगिक सम्बन्धको विकास गरी रोजगारमैत्री लगानीलाई प्रोत्साहन गर्ने, | स्वदेशी तथा विदेशी लगानीका निम्ति सकारात्मक वातावरणको सिर्जना (खण्ड १६) |

**१०. उद्देश्य १ सँग सम्बन्धित नीतिहरू :**

विभिन्न क्षेत्रगत नीतिहरूलाई यस नीतिसँग सामन्जस्यता कायम गरी रोजगारी सिर्जनात्मक केन्द्रित गर्न राष्ट्रिय अर्थतन्त्रलाई प्रवर्द्धन गर्दै सबै नागरिकहरूलाई उत्पादन र प्रतिफलमूलक रोजगारीका अवसरहरू उपलब्ध गराउने ।

१०.१ यस उद्देश्य प्राप्तिको लागि कृषि, उत्पादन, निर्माण, पर्यटन, आई.टी. र जलस्रोत ऊर्जा क्षेत्रसँग सम्बन्धित देहायबमोजिमका विशेष नीतिहरू समावेश गरिएका छन् ।

**कृषि क्षेत्र (Agriculture Sector)**

**नीतिहरू**

१०.२ सिँचाइ, कृषि सामग्री र आधुनिक प्रविधि (सामान्य किसिमका पावर टिलर, थ्रेसर र खेतबाट घर हुँदै बजारसम्म पुऱ्याउने सामान्य किसिमका बाली भित्र्याउने हारभेष्टर साधन) को व्यवस्था गरी उत्पादन वृद्धिमार्फत कृषि क्षेत्रमा संलग्न रहेकाहरूको उत्पादकत्त्व वृद्धि गरिनेछ र उच्च मूल्यका बाली लगाउनेतर्फ विशेष जोड दिइनेछ ।

१०.३ प्रमुख अन्नबाली, नगदे बाली तथा आय लचकता र उत्पादन तथा उत्पादकत्व वृद्धिको सम्भावना बढी भएका उपक्षेत्रको विकासका लागि आवश्यक प्रोत्साहन प्रदान गरिनुका साथै सुविधा सम्पन्न संरचना निर्माण र विस्तार गरिनेछ ।

१०.४ कृषि क्षेत्रको प्रवर्द्धनका लागि उपक्षेत्रहरूको छनोट गर्दा खाद्य सुरक्षा, रोजगार प्रवर्द्धन र निर्यात सम्भावनाजस्ता पक्षलाई ध्यान दिइनेछ ।

१०.५ देशमा विद्यमान जलवायु विविधताबाट अधिकतम लाभ लिन आवश्यक प्रयास गरिनेछ र उच्च पहाडी भेगमा कृषि रोजगारी सिर्जना गर्न विशेष कार्यक्रम सञ्चालन गरिनेछ ।

१०.६ निर्यातमुखी कृषि क्षेत्रको उत्पादकत्वमा सुधार ल्याई प्रतिस्पर्धात्मक क्षमता अभिवृद्धि गरिनेछ र कृषि उपजहरूको बजारीकरणमा जोड दिइनेछ ।

१०.७ कृषि उपजहरूको उत्पादकत्वमा वृद्धि, नवीनता र थप मूल्य अभिवृद्धि तथा मूल्य शृङ्खला (Add Value Chain) लाई विश्व बजारसँग जोडी राष्ट्रिय अर्थतन्त्रमा टेवा पुऱ्याइने छ । उपयुक्त नीतिगत पहलहरूका माध्यमबाट असङ्गठितरूपमा कृषि पेसा अँगाल्नेहरूको पनि उत्पादकत्व र आयआर्जनमा सुधार ल्याइनेछ ।

१०.८ निर्वाहमुखी उत्पादन प्रणालीलाई व्यावसायिकीकरण तथा आधुनिकीकरण गर्दै लैजानका लागि भूमिको चक्लाबन्दी, सहकारी र सामूहिक खेतीको अवधारणामा प्रयोगमा ल्याइनुका साथै साना बचत परिचालन र प्राविधिक सीप विस्तामा जोड दिइनेछ ।

१०.९ सहकारीहरूलाई उत्पादन क्रियाकलापको प्रारम्भदेखि उत्पादनको बजारीकरणसम्म प्रभावकारी रूपमा परिचालन गरिनेछ ।

१०.१० खाद्य गुणस्तर नियन्त्रणका लागि स्थानीय तहमा रहेका कृषि विकास कार्यालय, पशुसेवा कार्यालय, सहकारी कार्यालयसमेतको सहयोगमा कृषकहरूको सेवा खरिद तथा बिक्री गर्न कृषि सहकारीमार्फत स्थानीय कृषक समूहलाई सक्षम बनाइनेछ ।

१०.११ रोजगारीका लागि उद्यमशीलता तथा स्वरोजगारसम्बन्धी तालिमहरू ग्रामीण इलाकाका युवा, महिला, मधेसी, आदिवासी जनजाति, मुस्लिम, अशक्त, दलित, पिछडिएको क्षेत्र, द्वन्द्व पीडित, जोखिममा रहेका, सीमान्तकृत तथा अल्पसङ्ख्यक समुदायहरूलाई प्रदान गरिनेछ ।

१०.१२ सरकारी तथा निजी जमिन भाडामा लिएर गरिएको खेती (Lease Farming) शित भण्डार, कृषि प्रशोधन तथा खाद्य प्रशोधन प्रवर्द्धन गर्न कृषकहरूको नेतृत्व विकास मार्फत ग्रामीण क्षेत्रमा बसोबास गर्ने युवाको स्वरोजगारलाई प्रोत्साहन गरिनेछ ।

१०.१३ कृषिमा क्षेत्रमा जैविक र श्रमिकहरूको भौतिक सुरक्षाका लागि विषादी प्रयोगमा न्यूनीकरण गर्ने तथा त्यसको प्रयोग गर्दा

सुरक्षासम्बन्धी प्रविधिलाई प्रयोगमा अनिवार्य गरिनेछ ।

१०.१४ निजी क्षेत्रमार्फत रोजगारी सिर्जना गर्ने व्यावसायिक कृषि उत्पादनलाई प्राथमिकता दिई रोजगारी सृजनाका आधारमा सहुलियत र सहायता उपलब्ध गराइनेछ ।

**उत्पादन क्षेत्र (Manufacturing Sector)**

**नीतिहरू**

१०.१५ औद्योगिक व्यवसाय स्थापनाका निम्ति सहजीकरण गर्न तथा असङ्गठितरूपमा स्थापित व्यवसायलाई तत्काल कानुनी दायरामा ल्याउन अनलाइन सेवामार्फत एकल बिन्दु सेवा (One-Stop-Service) प्रणाली स्थापना गर्न प्रोत्साहित गरिनेछ ।

१०.१६ स्थानीय श्रममा आधारित उद्योगहरूको स्थापनालाई प्रोत्साहित गरिनेछ ।

१०.१७ क्षेत्रीय असन्तुलनलाई सम्बोधन गर्न सक्ने रोजगारमा आधारित उद्योगलाई प्राथमिकता दिइनेछ । तुलनात्मक रूपमा पछाडि परेका र न्यून विकास भएका क्षेत्रमा लगानी प्रवर्द्धन गर्न प्रोत्साहन र विशेष सुविधा उपलब्ध गराइनेछ ।

१०.१८ उत्पादनशील रोजगारी सिर्जना गर्न उच्च सम्भावना रहेका उत्पादन उप-क्षेत्रमा प्रत्यक्ष वैदेशिक लगानी आकर्षित र प्रोत्साहित गरिनेछ ।

१०.१९ सबै स्तरका उद्योगहरूमाझ अग्र र पृष्ठ सम्बन्ध (Forward and Backward Linkage) स्थापना गर्ने वातावरण सिर्जना गरिनेछ तथा उद्योगहरूमा व्यावसायिक व्यवस्थापन (Professional Management) अपनाउन प्रोत्साहन गरिनेछ ।

१०.२० छिमेकी र अन्य मित्र राष्ट्रहरूसँगको व्यापारिक सम्बन्धबाट फाइदा लिन सक्ने किसिमका साना, मझौला र ठूला उद्योगहरूको विकास र विस्तार गरिनेछ ।

१०.२१ साना तथा स्थानीय स्तरका रोजगार-उन्मुख उद्योगहरूलाई वित्तीय, संस्थागत र प्राविधिक सहायताको माध्यमबाट सबलीकरण गरिनेछ । ग्रामीण क्षेत्रहरूमा स्थानीय स्रोतसाधनमा आधारित उद्योगहरूमा लगानी प्रवर्द्धन गर्न व्यावसायिक कला र सीप विकासका विविध प्रवर्द्धनात्मक कार्यक्रमहरू सञ्चालन गरिनेछन् ।

१०.२२ श्रम उत्पादकत्व वृद्धि गर्नका निम्ति उत्पादन फर्महरूलाई आफ्ना उपादन र प्रक्रियामा सुधार ल्याउन तथा मूल्य शृङ्खलालाई तीव्र गतिमा अगाडि बढाउन प्रोत्साहन गरिनेछ ।

१०.२३ उद्योगहरूको सुरक्षाका निमित्त औद्योगिक सुरक्षा बललाई आवश्यक पर्ने भौतिक संरचना निर्माण गरिनेछ ।

१०.२४ कामदार/कर्मचारी र रोजगारदाताबीच सुमधुर सम्बन्ध कायम गराई असल औद्योगिक सम्बन्ध कायम गर्न जोड दिइनेछ ।

## निर्माण क्षेत्र (Construction Sector)

### नीतिहरू

१०.२५ पूर्वाधार क्षेत्रमा दक्ष जनशक्ति उपलब्ध गराउन सोसम्बन्धी आवश्यक तालिम तथा गुणस्तरमा उल्लेखनीय वृद्धि गरिनेछ । विदेशबाट सीप तथा अनुभव हासिल गरी स्वदेश फर्किएका दक्ष व्यक्तिलाई स्वदेशभित्रै रोजगार उपलब्ध गराउन निजी क्षेत्रका निर्माण व्यावसायीलाई प्रोत्साहन गरिनेछ ।

१०.२६ पूर्वाधार निर्माण क्षेत्रमा दिगो रोजगारीका अवसर सिर्जना गर्न सीप विकास कार्यक्रमलाई मुख्य अङ्गको रूपमा विकास गरिनेछ ।

१०.२७ ग्रामीण सडक निर्माणमा निजी क्षेत्रको सहभागितालाई श्रममा आधारित प्रविधिहरूको उपयोग गर्न प्रोत्साहित गरिनेछ ।

१०.२८ सडक सञ्जालको आधारभूत निर्माण, विस्तार, मर्मत, सम्भार तथा सुधार गर्दा रोजगारीमा पर्ने प्रभावका आधारमा प्राथमिकता दिइनेछ । सडक परियोजनाहरू निर्माण गर्दा स्थानीय सीप, स्रोतसाधनको उच्चतम प्रयोग गरी बढी रोजगारीका अवसर सिर्जना गर्न जोड दिइनेछ ।

१०.२९ उच्च र न्यून दुवै किसिमका सीप भएका रोजगारी सिर्जनाका निम्ति सम्भाव्य जलविद्युत् परियोजनाहरूको कार्यान्वयनका लागि सकारात्मक वातावरण सृजना गरिनेछ ।

१०.३० सिँचाइ सुविधाको विकासका लागि स्थानीय स्रोतसाधनको परिचालनमा जोड दिई कृषि रोजगारीमा वृद्धि गरिनेछ ।

## पर्यटन क्षेत्र (Tourism Sector)

**नीतिहरू**

१०.३१ तुलनात्मक लाभ रहेको र बढी रोजगारी सृजना हुने ग्रामीण पर्यटनलाई विशेष प्राथमिकता दिइनेछ । ग्रामीण पर्यटन योजनाअन्तर्गत पर्यटकीय गन्तव्य र पर्यटकीय उत्पादनलाई विविधीकरण र विस्तार गरी थप रोजगारीका अवसर सिर्जना गरिनेछ ।

१०.३२ पर्यटकहरूको बसाइको अवधि बढाउन सङ्ख्यात्मक र गुणात्मक पर्यटनलाई लक्षित गरी प्रभावकारी कार्यक्रमहरू ल्याइनेछ ।

१०.३३ देशभित्र रहेका अथाह पर्यटन गन्तव्यहरूको पहिचान, विकास र विस्तारका लागि नयाँ पदमार्ग (Trekking Route) हरू खोली थप आय र रोजगारीका अवसर सृजना गरिनेछ ।

१०.३४ पर्यटन क्षेत्रको विकासका निम्ति लगानी प्रवर्द्धन गर्दै ट्राभल तथा होटल व्यवसायमा सेवा तथा उत्पादनमूलक रोजगार र पेशागत दक्षता अभिवृद्धिका उपायहरू कार्यान्वयनमा ल्याइनेछ ।

१०.३५ रोजगारीको गुणस्तरमा सुधार ल्याउन पर्यटन उद्योगलाई आवश्यक जनशक्ति पूर्ति गर्न मानव स्रोत विकासका निम्ति अन्तर्राष्ट्रिय स्तरका अध्ययन, अनुसन्धान र प्रशिक्षण केन्द्रहरू स्थापना गर्न निजी क्षेत्रलाई प्रोत्साहित गरिनेछ ।

१०.३६ पर्यटन क्षेत्रमा रोजगारीका आवश्यकतालाई सम्बोधन गर्न अपरेसन तथा सहयोगी (फ्रन्ट अफिस, अतिथिसँगको सम्बन्ध, बन्दोबस्तीका सामान, इत्यादि) तहमा सीप विकासका कार्यक्रम सञ्चालन गर्न निजी क्षेत्रलाई प्रोत्साहित गरिनेछ ।

१०.३७ आन्तरिक पर्यटनको प्रवर्द्धन गरी ग्रामीण रोजगार सिर्जना गर्न औपचारिक क्षेत्रका कामदार कर्मचारीहरूलाई मुलुकका विभिन्न स्थानको भ्रमण गर्न प्रोत्साहित गरिनेछ ।

१०.३८ स्तरीय तथा पर्याप्त होटेलहरूको व्यवस्था नभएका गन्तव्य तथा मार्गहरूमा सामूहिक आवास तथा खाना (Home Stay) को व्यवस्था गर्न स्थानीय समुदायलाई प्रोत्साहन दिई थप आय आर्जनलाई वृद्धि गर्न जोड दिइनेछ ।

१०.३९ पर्यटन विकासका माध्यमबाट सन्तुलित, समावेशी र समन्यायिक आर्थिक वृद्धि हासिल गर्दै रोजगारी सृजना, क्षेत्रीय सन्तुलन तथा गरिबी न्यूनीकरणमा योगदान गरिनेछ ।

**सूचना /प्रविधि क्षेत्र (Information Technology Sector)**

**नीतिहरू**

१०.४० सूचना प्रविधि नीति आई.टी.ई.एस.बी.पी.ओ. कानूनी तथ्याङ्क आधार प्रशोधन, डिजिटल कन्टेन्टको विकास, एनिमेसन, रिमोट मेन्टिनेन्स, वित्तीय सेवा, डाटा प्रशोधन, कल सेन्टर ब्याकअप अपरेसन जस्ता प्रमुख क्रियाकलापहरूलाई समावेश गरिसकेकाले सरकार, व्यावसायी र प्राज्ञिक संस्थाहरूबीच निकट समन्वय गरी सूचना तथा सञ्चार प्रविधिसम्बद्ध क्रियाकलापहरूको प्रभावकारी कार्यान्वयनका लागि जोड दिइनेछ ।

१०.४१ कम्प्युटर विज्ञान, कम्प्युटर इन्जिनियरिङ र अन्य सूचना प्रविधिसम्बन्धी विषयमा अन्तर्राष्ट्रिय मापदण्डका स्नातक र स्नाकोत्तर तहका कक्षाहरू सञ्चालन गर्न देशभित्रका विश्वविद्यालयलाई आवश्यक सहयोग प्रदान गरिनेछ ।

१०.४२ प्रत्येक विकास क्षेत्रमा सूचना प्रविधिका लागि आवश्यक मध्यमस्तरीय जनशक्ति तयार पार्न सूचना प्रविधिको अध्यापन, अनुसन्धान र विकासका निम्ति निजी क्षेत्रलाई प्रोत्साहित गरिनेछ ।

१०.४३ विद्यालय तहदेखि नै कम्प्युटर शिक्षा प्रदान गर्न जोड दिइनेछ । विश्वविद्यालय र सार्वजनिक विद्यालयहरूलाई कम्प्युटर शिक्षा व्यवस्थित किसिमबाट सञ्चालन गर्नका निम्ति इन्टरनेट सुविधा निःशुल्क उपलब्ध गराइनेछ ।

१०.४४ सूचना प्रविधि विषयमा उच्च शिक्षा प्राप्त गर्न चाहने दुर्गम क्षेत्रका गरिब र जेहेन्दार विद्यार्थीहरूलाई आवश्यक छात्रवृत्ति प्रदान गरिनेछ ।

१०.४५ सूचना प्रविधिको विकासका निम्ति निजी क्षेत्रको सहभागितामा विभिन्न स्थानमा भौतिक तथा भर्चुअल सूचना प्रविधि विकास गरी आई.सी.टी. र वी.पी.ओ. क्षेत्रमा रोजगार वृद्धि गरिनेछ ।

१०.४६ सूचना प्रविधिको प्रयोगमा सुधार ल्याई इ-शिक्षा, इ-स्वास्थ्य र इ-गर्भनेन्स जस्ता क्षेत्रको प्रवर्द्धन र ग्रामीण क्षेत्रमा सूचना प्रविधिका साधन पुर्‍याई रोजगार सिर्जना गरिनेछ ।

१०.४७ सार्वजनिक र निजी क्षेत्रको संयुक्त साझेदारीमा संयुक्त पुँजिकोष (Venture Capital fund) स्थापना गरिनेछ र ग्रामीण क्षेत्रका युवासँग सहकार्य गरी ग्रामीण रोजगार सिर्जना गर्न उनीहरूको

ऋण सहयोगमा सहज पहुँच पुऱ्याइनेछ ।

१०.४८ Business Processing Outsourcing को लागि आवश्यक सूचनाको प्रयोगमा कानुनी अधिकार उपलब्ध गराउन आवश्यक कानुनहरूको व्यवस्था गरिनेछ ।

**जलस्रोत/ऊर्जा (Water -Resource /Energy)**

**नीतिहरू**

१०.४९ देशमा आवश्यकता, सम्भाव्यता र क्षमताका आधारमा ठूला, मझौला र साना जलविद्युत् आयोजनाको निर्माण गरी प्रत्यक्ष रोजगार सृजनामा जोड दिइनेछ ।

१०.५० ठूला जलविद्युत् आयोजनाहरू सञ्चालन गर्न अन्तर्राष्ट्रिय पुँजी र प्रविधिलाई आकर्षित गरिनेछ । साथै स्थानीय श्रमको उपयोग गरिनेछ ।

१०.५१ मझौला जलविद्युत् आयोजनाहरूको निर्माण गर्न राष्ट्रिय तथा अन्तर्राष्ट्रिय पुँजीकोषको व्यवस्था गर्न प्रयत्न गरिनेछ । यस प्रकारका आयोजनाहरूमा स्वदेशी सीप, प्रविधि र जनशक्ति उपयोग गर्न जोड दिइनेछ ।

१०.५२ साना जलविद्युत् आयोजनाहरू पूर्ण रूपमा स्थानीय पुँजी र प्रविधिमा आधारित हुनेछन् । यस्ता आयोजनाहरूमा उपलब्ध भएसम्म उच्च दक्ष जनशक्तिको अलावा अन्य कामदार कर्मचारीहरू स्थानीय क्षेत्रबाट आपूर्ति गर्न जोड दिइनेछ ।

१०.५३ मुलुकमा जलशक्तिका अतिरिक्त अन्य ऊर्जाका क्षेत्रहरू प्रचुर मात्रामा उपलब्ध भएको हुँदा लागत लाभको आधारमा त्यस्ता स्रोतहरूको पहिचान गरी स्थानीय रूपमा रोजगारी सृजना गर्न जोड दिइनेछ ।

**११. उद्देश्य २ सँग सम्बन्धित नीतिहरू:**

अनौपचारिक रोजगारीलाई क्रमशः औपचारिक पद्धतिमा रूपान्तरण गर्दै रोजगारीको गुणस्तरमा सुधार ल्याउने,

**नीतिहरू**

११.१ लघु, साना तथा मझौला उद्यमसमेतका व्यवसाय आरम्भ गर्न उद्यमशीलता तालिम तथा व्यवसाय विकास सेवा प्रदान गरिनेछ।

साथै, व्यवसाय विस्तार गर्न र ठूलो लगानीबाट लाभ लिन सक्षम वातावरण सिर्जना गर्न आवश्यक नीति र कार्यक्रमहरू निर्माण गरिनेछ ।

११.२ युवा, महिला, आदिवासी जनजाति तथा सीमान्तकृत समूहद्वारा लघु, साना तथा मझौला उद्यमहरूको स्थापना र विस्तार गर्न ऊर्जा, सूचना र व्यवसाय विकास सेवाको पहुँचलाई वृद्धि गरिनेछ ।

११.३ अनौपचारिक क्षेत्रका कामदारलाई अनौपचारिक तरिकाबाट ( जस्तै रात्री विद्यालय, दूरशिक्षा इत्यादि) वा सम्भव भएसम्म अनुदानयुक्त व्यावसायिक तालिम मार्फत थप शिक्षा हासिल गर्न अवसर दिने नीति लिइनेछ। अनौपचारिक तरिकाबाट प्राप्त सीप, तालिम वा दक्षतालाई औपचारिक शिक्षा प्रणालीहरू बनाउन शिक्षामा निरन्तरता, रोजगारउन्मुख तालिम र पुनः तालिमका अवसरहरू प्रदान गरिनेछ ।

१४.४ लघुवित्त संस्थाहरूको नियमन गर्ने तथा उनीहरूलाई निशिचत मात्रामा डिपोजिट लिन पाउने व्यवस्थाका लागि सकारात्मक कानुनी वातावरण निर्माण गरिनेछ र लघुवित्त संस्थाहरूमार्फत गरिब सीमान्तकृत वर्गको आय आर्जनका गतिविधिहरूमा सहयोग पुऱ्याउने नीति अवलम्बन गरिनेछ ।

१४.५ माध्यमिक तथा उच्च माध्यमिक तह उत्तीर्ण गरेपछि आवश्यकताअनुसार प्राविधिक विषय अध्ययन गर्न विशेष प्राथमिकता दिइनेछ र प्राविधिक जनशक्तिको कमी हुन दिइनेछैन ।

१४.६ रोजगार विनियम संस्था तथा अन्य रोजगार पसलहरू श्रमिक सहकारिताको ढाँचामा सञ्चालन गर्न प्रोत्साहित गरिनेछ ।

११.७ अनौपचारिक क्षेत्रमा संलग्न सबै नागरिकहरूलाई क्रमशः सामाजिक सुरक्षा योजनासँग आबद्ध गरी सामाजिक सुरक्षाको सुनिश्चितता गरिनेछ ।

११.८ श्रमसँग सम्बन्धित ऐन र नियमावलीहरूलाई रोजगार प्रवर्द्धनको दृष्टिकोण तथा परिवर्तित परिस्थितिको आवश्यकताबमोजिम संशोधन गरी समयसापेक्ष बनाइनेछ ।

११.९ दलित, लोपोन्मुख, सीमान्तकृत र पिछडिएका समुदायका परम्परागत पेसालाई सहकारीमा सङ्गठित गरी आधुनिक व्यवसायका रूपमा रूपान्तरण गरी व्यवस्थित र उत्पादनशील बनाउन प्रोत्साहित गरिनेछ ।

### १२. उद्देश्य ३ सँग सम्बन्धित नीतिहरूः

श्रमबजारको आवश्यकताअनुसारको ज्ञान र सीपमा आधारित श्रम शक्ति तयार पार्न उपयुक्त अवसरहरू सिर्जना गर्ने

**नीतिहरू**

१२.१ राष्ट्रिय शिक्षा तथा मानवस्रोत विकासका नीतिहरूले परिलक्षित गरेबमोजिम मुलुकमा आवश्यक सीपयुक्त जनशक्ति तयार पार्नका लागि सम्बद्ध निकायहरूबीच प्रभावकारी समन्वय स्थापित गरिनेछ ।

१२.२ सरकारी, गैरसरकारी तथा निजी क्षेत्रद्वारा सञ्चालित केन्द्रीय तथा स्थानीय स्तरका तालिम संस्थाहरूको क्षमता अभिवृद्धि गरी बजारले माग गरेका तालिमका क्षेत्रहरूको विस्तार गर्दै लगिनेछ ।

१२.३ माध्यमिक तहको शिक्षामा गरिब र अवसरविहीन समूहहरू (दलित, आदिवासी जनजाति, मधेसी, मुस्लिम) का बालबालिकाहरूको पहुँच वृद्धि गर्नका लागि सञ्चालन हुने विशेष कार्यक्रम ( विद्यालय पोशाक र पुस्तकको मूल्य, विद्यालय प्रवेश शुल्क जस्ता अदृश्य शुल्कहरू हटाउने, लक्षित छात्रवृत्ति उपलब्ध गराउने इत्यादि) लाई थप प्रोत्साहनसहित विस्तार गरिनेछ भने बीचैमा औपचारिक शिक्षा छोडेका जनशक्तिलाई आवश्यकता र रुचिको आधारमा सीपमूलक शिक्षा प्रदान गरी दक्ष बनाइनेछ ।

१२.४ गैससहरू, स्थानीय निकायहरू, विद्यालय र निजी क्षेत्रको संलग्नतामा सञ्चालन हुने कानुनी साक्षरतासमेतका साक्षरता कार्यक्रहरूले महिला, दलित, आदिवासी-जनजाति, मधेसी, सीमान्तकृत समुदाय र अशक्तहरूलाई लक्षित गरी रोजगारयोग्य (Employbility) बनाइनेछ ।

१२.५ स्थानीय तहमा स्थापना भएका आधारभूत शिक्षा सञ्जालको भूमिकालाई प्रभावकारी बनाई भर्ना र वृद्धि गर्न तथा विद्यालय छाड्ने दरमा कमी ल्याउन, विद्यालयहरूमा प्रोत्साहन उपलब्ध गराउन, लक्षित र वञ्चितीमा परेका समुदायलाई छा्त्रवृत्ति प्रदान गरी रोजगार प्राप्त गर्न सक्षम बनाइनेछ ।

१२.६ औपचारिक शिक्षालाई पनि सीपमूलक शिक्षा प्रदान गर्नेतर्फ उन्मुख गरिनेछ ।

१२.७ विद्यालय शिक्षकको पेसागत दक्षता बढाउन र शिक्षण सिकाइ

सामग्रीमा सुधार गर्न विभिन्न कार्यक्रमहरू बनाई कार्यान्वयन गरिनेछ । शिक्षकहरूको कार्यसम्पादन स्तरमा सुधार गरी दक्ष जनशक्ति उत्पादन गर्न सक्ने बनाउन क्षमतामा आधारित सेवाकालीन तालीम दिने नीति लिइनेछ ।

१२.८ उच्च तहको प्राविधिक शिक्षामा आर्थिक तथा सामाजिक रूपमा पछाडि परेका सीमान्तकृत समुदायको पहुँच बढाउन र गुणस्तर सुधार गर्न छात्रवृत्ति, विद्यार्थी कर्जा तथा आर्थिक सहायता प्रदान गरिनेछ ।

१२.९ विद्यालयलाई शिक्षाको अन्तिम तह (उच्च माध्यमिक तह) र चाडै विद्यालय छाड्ने सबैका निम्ति करिअर परामर्शलाई अनिवार्यरूपमा प्रयोगमा ल्याइनेछ । अपाङ्गता भएका व्यक्तिहरूको रोजगारीमा पहुँच विस्तार गर्न उनीहरूलाई लक्षित गरी रोजगारमूलक तालिम र अपाङ्गमैत्री पूर्वाधारहरूको विस्तार गर्दै लगिनेछ ।

१२.१० रोजगार प्राप्तिका निम्ति व्यावसायिक शिक्षा तथा तालिमलाई प्रवर्द्धन गर्न सचेतना कार्यक्रमहरू सञ्चालन गरिनेछ । युवा उद्यमशीलता प्रवर्द्धन गर्न आम सञ्चारका माध्यमबाट सार्वजनिक सचेतना अभियान सञ्चालन गरिनेछ ।

१२.११ काम र कामदारलाई सम्मान गर्ने संस्कृतिको विकास गर्न सचेतना अभियानमा जोड दिइनेछ ।

१२.१२ प्राविधिक शिक्षा तथा व्यावसायिक तालिम कार्यक्रममा "व्यवसायको प्रारम्भ र सुधार गरौँ" (Start and Improve Your Business - SIYB) विषयक तालिम संरचनालाई प्रयोगमा ल्याइनेछ । क्षमता अभिवृद्धिका कार्यक्रमहरू कार्यान्वयनका लागि जोड दिइनेछ ।

१२.१३ विद्यालय प्रणाली (व्यावसायिक तथा साधारण विद्यालय) मा "व्यावसायका बारेमा बुझौँ" (Know About Business - KAB) कार्यक्रम समावेश गरिनेछ ।

१२.१४ औपचारिक शिक्षा प्रणालीमा पनि व्यावसायिक शिक्षा तथा तालिम कोर्समा सामग्री समावेश गरिनेछ । समय समयमा रोजगारदाताहरूलाई आमन्त्रण गर्ने र प्रशिक्षार्थीसँग अन्तक्रिया कार्यक्रम सञ्चालन गर्ने तथा रोजगारदाताहरूसँग समन्वय गरी कार्यस्थल प्रशिक्षण (On the Job Training) सञ्चालन गर्न आवश्यक व्यवस्था मिलाइनेछ ।

१३. **उद्देश्य ४ सँग सम्बन्धित नीतिहरू :**

आप्रवासी तथा प्रवासी कामदारको उपयुक्त व्यवस्थापन गर्ने ।

१३.१ कामदार तथा वैदेशिक रोजगार व्यावसायीले सम्बन्धित विभागसमक्ष आई तलब तथा सेवा सुविधासम्बन्धमा करारनामा गर्नुपर्ने व्यवस्था लागू गरिनेछ ।

१३.२ वैदेशिक रोजगारको लागि दिइने सेवालाई स्थानीय तहसम्म विस्तार गर्न सम्बन्धित निकायहरूको पुनः संरचना गरिनेछ ।

१३.३ आप्रवासी कामदारको अधिकार सुनिश्चित गर्ने अन्तर्राष्ट्रिय अभिसन्धिहरूलाई क्रमशः अनुमोदन गरिनेछ र कामदारको अधिकार रक्षाका लागि अन्तर्राष्ट्रिय समुदायसँग सहकार्य गरिनेछ ।

१३.४ गन्तव्य मुलुकहरूमा रोजगारका अवसरसम्बन्धी सूचना तथा आप्रवासनसँग सम्बन्धित जोखिमहरूका बारेमा सचेतना अभिवृद्धि गर्न कार्यक्रम सञ्चालन गरिनेछ ।

१३.५ वैदेशिक रोजगारलाई मध्यकालीन रणनीतिका रूपमा स्वीकार गरी विदेश जाने कामदारलाई उपयुक्त तालिम र सीप उपलब्ध गराइनेछ । सुरक्षित वैदेशिक रोजगारका निम्ति नीतिगत तथा संस्थागत सुधारका कार्य गरिनेछ भने वैदेशिक रोजगारमा जान चाहने कामदारका निम्ति तालिम कार्यक्रममा सहज पहुँच हुने गरी आवश्यकतानुसार अनिवार्य तालिमको व्यवस्था गरिनेछ ।

१३.६ विदेशस्थित नेपाली कूटनीतिक नियोगहरूलाई मर्यादित, सुरक्षित, लाभकारी र विश्वासनीय वैदेशिक रोजगार प्रवर्द्धनका निम्ति परिचालन गरिनेछ ।

१३.७ नेपाली कामदारहरूको सुरक्षा र भलाइका निम्ति गन्तव्य मुलुकहरूसँग श्रम सम्झौता गरिनेछ ।

१३.८ वैदेशिक रोजगारले माग गरेबमोजिमका सीपमूलक तालिम प्रदान गर्न, वैदेशिक रोजगारका निम्ति ऋण सुविधा प्रदान गर्न र अनुगमन प्रणालीलाई सबल बनाउन आवश्यक कार्यक्रमहरू सञ्चालन गरिनेछ ।

१३.९ वैदेशिक रोजगारमा दलित, आदिवासी- जनजाति, मधेसी, मुस्लिम युवा तथा पिछडिएका क्षेत्रका सीमान्तकृत समुदायलाई अवसर प्रदान गरिनेछ ।

१३.१० महिलाहरूका निम्ति सुरक्षित र मर्यादित वैदेशिक रोजगार सुनिश्चित गर्न जोड दिइनेछ ।

१३.११ विप्रेषण प्रणालीलाई सरल र सहज बनाई उपयुक्त योजना र कार्यक्रमका साथ विप्रेषणको प्रयोगलाई उत्पादनशील क्षेत्रमा लगानी गर्न प्रोत्साहित गरिनेछ । यसका लागि विप्रेषण परिचालनसम्बन्धी नीति तर्जुमा गरिनेछ ।

१३.१२ आप्रवासी कामदारहरूको अभिलेख तथा सूचना प्रणालीलाई व्यवस्थित तथा सबलीकृत गरिनेछ ।

१३.१३ वैदेशिक रोजगारीबाट प्राप्त विप्रेषणजन्य आय (रकम, सीप, अनुभव, प्रविधि) लाई राष्ट्रिय उत्पादनसँग जोडी गरिबी निवारण गर्न उपयुक्त संस्थागत व्यवस्था गरिनेछ ।

## १४. उद्देश्य ५ सँग सम्बन्धित नीतिहरू :

युवालक्षित रोजगारीका अवसरहरू सिर्जना गर्न प्राथमिकता दिने ।

**नीतिहरू**

१४.१ सबै युवाहरूलाई रोजगारी प्रदान गर्नका लागि अरू क्षेत्रगत निकायहरूसँग समन्वय गरिनेछ र युवाहरूलाई आन्तरिक रोजगारीमा उत्प्रेरित गरिनेछ ।

१४.२ युवा रोजगारका निम्ति प्रभावकारी कार्ययोजना तयार गरी सरोकारवाला मन्त्रालयसँगको समन्वयमा कार्यान्वयनमा ल्याइनेछ ।

१४.३ महिला उद्यमशीलता विकास गर्न तथा महिलालाई उद्यमी हुन प्रोत्साहन गर्नका लागि विशेष प्रावधानहरूलाई प्रभावकारीरूपमा कार्यान्वयन गरिनेछ ।

१४.४ श्रमबजार कार्यक्रम तथा रोजगार सेवासम्बन्धी जानकारी दिने रोजगार विनियम सूचना केन्द्रहरूलाई युवा रोजगारीमा सुधार ल्याउनेतर्फ बढावा दिइनेछ । रोजगार सेवा प्रदान गरिआएका सम्पूर्ण संस्थाहरूलाई तोकिएका सरकारी नियकायमा दर्ता गर्न तथा उनीहरूले प्रदान गरिआएका सेवाहरूको गुणस्तर र सङ्ख्याको पर्याप्तता सुनिश्चित गर्न आवश्यकताअनुसार अनुगमन तथा निरीक्षण गर्ने व्यवस्था मिलाइनेछ ।

१४.५ न्यून सुविधाप्राप्त र अल्प विकसित क्षेत्रमा रोजगारीका अवसरमा सुधार ल्याउन त्यस्ता क्षेत्रमा साना तथा मझौला स्तरका उद्योगहरू र ठूला निजी क्षेत्रका प्रतिष्ठानहरूबीच सब

कन्ट्राक्टको प्रावधानलाई प्रोत्साहन गरिनेछ ।

१४.६ आठ कक्षाभन्दा मुनिको विद्यालय शिक्षा प्राप्त गरी श्रमबजारमा प्रवेश गरेका युवालाई लक्षित गरी तालिम कार्यक्रहरू सञ्चालन गरिनेछ ।

१४.७ युवाहरूका निम्ति रोजगारसम्बन्धी सूचना र कार्यक्रममा पहुँच बढाउन युवा परामर्श सेवा, स्रोत केन्द्रलगायतका आवश्यक संयन्त्रहरू निर्माण गरिनेछ ।

१४.८ सामाजिक र आर्थिक उद्यमशीलता विकास गरी युवालाई रोजगार, स्वरोजगार र सामाजिक कार्यहरूमा अवसर प्रदान गरिनेछ ।

१४.९ युवाको क्षमता र शैक्षिक स्तरमा आधारित व्यावहारिक, प्राविधिक र श्रमबजार सुहाउँदो शिक्षा र तालिममा जोड दिँदै उद्यमशीलता र स्वरोजगारलाई प्रोत्साहित गरिनेछ ।

१४.१० युवाका निम्ति कृषिमा आधारित उद्योगहरू, परम्परागत पेसा, स्थानीय स्रोतसाधनका साथै नवीनतम् र नयाँ सूचना प्रविधिलाई प्रोत्साहन गरिनेछ ।

१४.११ ग्रामीण, अवसरविहीन, जोखिममा रहेका सबै भौगोलिक क्षेत्रका युवालाई शिक्षा, स्वास्थ्य, तालिम र रोजगारीका अवसरमा विशेष प्राथमिकता दिइनेछ ।

१४.१२ हाल प्रदान गरिएका तालिम, पाठ्यक्रम र तालिम कार्यक्रहरूलाई लैङ्गिक संवेदनशील बनाउने गरी पुनरावलोकनन गरिनेछ ।

१४.१३ बेरोजगार युवाका निम्ति निश्चित समय र स्थानहरूमा रोजगार प्रत्याभूति योजना आरम्भ गरिनेछ ।

१४.१४ कृषि कर्जा, सामग्री तथा उपकरण (पावर टिलर, थ्रेटर, उत्पादनस्थलदेखि बजारसम्म पुऱ्याउन सवारी साधन, इत्यादि) जस्ता कृषि सहायता उपलब्ध गराई स्थानीय तहमा रोजगारी प्राप्त गर्न युवालाई विशेष प्रोत्साहित गरिनेछ। कृषिको आधुनिकीकरण र व्यावसायिकीकरणमा योगदान गर्नका लागि उनीहरूलाई प्रोत्साहित गरिनेछ ।

१४.१५ युवा रोजगार प्रवर्द्धन केन्द्र स्थापना गरी स्थानीय तहमा युवा रोजगार कार्यक्रमलाई विस्तार तथा अन्तर निकायहरूका बीचमा समन्वय गरिनेछ ।

१४.१६ स्वदेश तथा विदेशको श्रमबजारको माग बमोजिम प्राविधिक तथा व्यावसायिक शिक्षा प्रदान गरी युवालाई आवश्यक सीपबाट

सुसज्जित गरिनेछ ।

**१५. उद्देश्य ६ सँग सम्बन्धित नीतिहरू :**

अनुसन्धानमा आधारित आधुनिक सूचना प्रणालीको प्रयोग बढाउँदै श्रमबजारलाई सबल बनाउने ।

**नीतिहरू**

१५.१ निश्चित समयावधिमा राष्ट्रिय श्रमशक्ति सर्भेक्षण गरिने तथा नियमित रोजगार प्रवृत्तिसम्बन्धी प्रतिवेदन मार्फत सूचना प्रवाह गर्ने व्यवस्था मिलाइनेछ ।

१५.२ श्रम मागको आधारमा आवश्यक तथा उपलब्ध सीपको अन्तर पहिचान गरी सोको सूचना प्रवाहलाई प्रभावकारी बनाइने छ ।

१५.३ सीप विकास प्रणालीको मापदण्ड, निर्देशिका र कार्यदेशमा सामान्जस्यता तथा स्पष्ट सुधार ल्याउन प्रयत्न गरिनेछ ।

१५.४ श्रम तथा रोजगार मन्त्रालयलाई स्रोतसाधन सम्पन्न बनाई श्रमबजार सूचना विश्लेषण एकाइ स्थापना गरिनेछ । सम्बन्धित सरोकारवालाहरूको श्रमबजार सूचना विश्लेषण गर्ने क्षमतामा सुधार ल्याइनेछ ।

१५.५ केही पेसा र जिल्ला समेट्ने गरी स्थापना गरिने सङ्गठन, प्रणाली र कार्यविधिसहितको नमुना परियोजनाको रूपमा रोजगार सूचना विनियम सेवा सञ्चालनलाई जोड दिइनेछ । नमुना परियोजनाबाट सिकेका पाठलाई राष्ट्रव्यापी कार्यक्रमको रूपमा प्रयोगमा ल्याइनेछ ।

१५.६ ग्रामीण तथा शहरी क्षेत्रका युवाहरूलाई श्रमबजारसम्बन्धी सूचना आदान-प्रदान गर्न करिअर निर्देशन (Career Counseling) तथा परामर्श कार्यक्रम सञ्चालन गरिनेछ ।

१५.७ रोजगार सूचना केन्द्रलाई रोजगार सूचना विनियमको रूपमा विकसित गरिनेछ । यो केन्द्रले श्रमबजारमा रहेको जनशक्तिको माग, बेरोजगार र बरोजगारको सीपको सूची बनाई माग र आपूर्तिकर्ताबीच सूचनाको आदान-प्रदान गर्नेछ । यस्तो केन्द्रलाई सहकारीको माध्यमबाट व्यवस्थापन गर्न प्रोत्साहित गरिनेछ ।

१५.८ पहिचान गरिएका गरिब नागरिकहरूको लागि निःशुल्क सीपमूलक तालिम/प्रशिक्षण दिने व्यवस्था मिलाइनेछ ।

## १६. उद्देश्य ७ सँग सम्बन्धित नीतिहरू :

सुमधुर औद्योगिक सम्बन्ध विकास गरी रोजगारमैत्री लगानीलाई प्रोत्साहन गर्ने ।

**नीतिहरू**

१६.१ जलविद्युत्, पूर्वाधार निर्माण, पर्यटन, ठूलास्तरका उत्पादन उद्योगहरू र सूचना तथा सञ्चार प्रविधि जस्ता क्षेत्रमा विदेशी लगानी आकर्षित गरिनेछ जसले रोजगारीका अवसरहरू सिर्जना गर्नेछ ।

१६.२ ठूला उद्योगहरूमा प्रत्यक्ष वैदेशिक लगानी आकर्षित गर्न त्यस्ता उद्योगले सिर्जना गर्ने रोजगारीको आधारमा विविध प्रोत्साहन सेवा तथा सुविधा उपलब्ध गराइनेछ र यस्ता सेवा तथा सुविधा प्रदान गर्ने प्रक्रियालाई सरलीकृत गरिनेछ ।

१६.३ विदेशस्थित नेपाली कूटनीतिक नियोगहरूलाई प्रत्यक्ष वैदेशिक लगानी आकर्षित गर्न प्रभावकारी परिचालन गरिनेछ ।

१६.४ स्वदेश र विदेशी संयुक्त लगानीमा सञ्चालन हुने व्यवसायलाई प्रोत्साहित गर्न ऐन कानुनलाई समय सापेक्ष सुधार गरिनेछ ।

१६.५ धेरै रोजगारी सृजना गर्ने वैदेशिक लगानीकर्ताहरूलाई भिसा सरलीकरण गरिनेछ ।

१६.६ निजी तथा सार्वजनिक क्षेत्रबाट पहिचान गरिएका परियोजनाहरू सञ्चालनका लागि प्रत्यक्ष वैदेशिक लगानी जुटाउन सरकारले निजी क्षेत्रसँग साझेदारी गर्ने वातावरण बनाउनेछ ।

१६.७ उत्कृष्ट उद्यमीहरूलाई रोजगारी सिर्जनाका आधारमा राज्यबाट पुरस्कृत गर्ने व्यवस्था गरिनेछ ।

१६.८ “मर्यादित काम” (Decent Work) को अवधारणा र अन्तर्राष्ट्रिय श्रम सङ्गठनका मापदण्डहरू (International Labour Standards)अनुरूप श्रम सम्बन्धहरूको विकास गरी रोजगारीलाई गरिबी निवारण गर्ने आधारशिलाको रूपमा अवलम्बन गरिनेछ ।

१६.९ सुमधुर औद्योगिक सम्बन्धको विकास गरी उत्पादकत्व वृद्धिका लागि सरकार, रोजगारदाता र कामदारहरूबीच त्रिपक्षीय तथा द्विपक्षीय परामर्श र सहकार्यलाई निरन्तर प्रोत्साहित गरिनेछ ।

१६.१० रोजगारीको क्षेत्रमा देखा पर्ने लैङ्गिक, भौगोलिक, जातिगत वा

अन्य कुनै पनि प्रकारको भेदभावलाई क्रमशः हटाउँदै लैजान आवश्यक कार्यक्रमहरू सञ्चालन गरिनेछ ।

१६.११ त्रिपक्षीय एवं द्विपक्षीय सामाजिक संवाद (Social Dialogue) लाई औद्योगिक सम्बन्धको विकास, विवाद समाधान तथा नीति निर्माण प्रक्रियाको तहसम्म संस्थागत गर्न प्रोत्साहित गरिनेछ ।

१६.१२ सामाजिक संवादलाई प्रभावकारी बनाउनका लागि सबै त्रिपक्षीय एवं द्विपक्षीय संयन्त्रहरूमा समान र सन्तुलित प्रतिनिधित्वमा जोड दिइनेछ ।

## १७. रणनीति र कार्यान्वयन संयन्त्र

१७.१ राष्ट्रिय रोजगार नीति रोजगारी सृजना गर्न समग्र छाता नीति (Umbrella Policy) को रूपमा कार्य गर्नेछ तथा यसै नीतिको परिधिभित्र रही सम्बन्धित निकायहरूले रणनीतिहरू र कार्यनीतिहरू तयार गरी कार्यान्वयन गर्नुपर्नेछ ।

१७.२ रोजगारी सिर्जना अन्तरसम्बन्धित विषय (Cross Cutting Issue) भएकोले यस राष्ट्रिय रोजगार नीतिको कार्यान्वयनमा विभिन्न मन्त्रालय, विभाग, निकायहरू र निजी क्षेत्रका सरोकारवालाहरूको जिम्मेवारी हुनेछ । रोजगारीलाई क्षेत्रगत नीति तथा कार्यक्रहरूमा समाहित गरेको सुनिश्चित गर्न तथा नीति योजनाका नतिजालाई अनुगमन गर्न संस्थागत संरचना निर्माण गरिनेछ ।

१७.३ राष्ट्रिय रोजगार नीतिको कार्यान्वयनको अवस्थालाई वार्षिक रूपमा समीक्षा गरिनेछ भने हरेक ५ वर्षमा आवधिक समीक्षा गरिनेछ ।

१७.४ प्रभावकारी तालिम कार्यक्रममार्फत सम्बद्ध मन्त्रालयहरू र विभागहरूमा रोजगार केन्द्रित लक्ष्यको विकास र अनुगमन गर्ने क्षमता अभिवृद्धि गरिनेछ जसले रोजगार केन्द्रित लक्ष्यलाई सम्बोधन गर्ने समग्र योजना, नीति र रणनीतिमा रोजगार लक्ष्यलाई समायोजन गर्नेछ ।

१७.५ सार्वजनिक लगानी, परियोजना, कार्यक्रम एवं नीतिले रोजगारीमा परेको प्रभावसम्बन्धमा सम्बद्ध मन्त्रालय, विभाग र विभिन्न निकायहरूबाट सम्पन्न गतिविधिहरूको प्रभावका बारेमा आवधिक प्रतिवेदन तयार गर्न निर्देशिका बनाइनेछ ।

१७.६ नेपालमा श्रम तथा रोजगारसँग सम्बन्धित अनुसन्धान कार्य

गर्नका लागि एक राष्ट्रिय श्रम तथा रोजगार अनुसन्धान प्रतिष्ठानको स्थापना गरिनेछ । उक्त प्रतिष्ठानले श्रम तथा रोजगार मन्त्रालयलाई नीतिगत सुझाव दिनेछ ।

१७.७ राष्ट्रिय रोजगार नीतिको कार्यान्वयन, अनुगमन र मूल्याङ्कन तथा समन्वयको कार्य श्रम तथा रोजगार मन्त्रालयले गर्नेछ । नीतिको अनुगमन र मूल्याङ्कनसम्बन्धी कार्य राष्ट्रिय अनुगमन तथा मूल्याङ्कन समितिको समग्र निर्देशनमा हुनेछ । अनुसूची-१ बमोजिम गठित राष्ट्रिय अनुगमन तथा मूल्याङ्कन समितिले विभिन्न सरोकारवालाहरूबाट गरिने क्रियाकलापहरूको समन्वय गर्ने तथा नीतिको कार्यान्वयनका लागि स्रोतसाधनको परिचालन गर्न सम्बन्धित निकायहरूलाई नीतिगत मार्गनिर्देश गर्नेछ । यस मूल्याङ्कन समितिको बैठक वर्षमा कम्तीमा दुई पटक बस्नेछ ।

१७.८ श्रम तथा रोजगार मन्त्रालयले उक्त समितिको सचिवालयका रूपमा कार्य गर्नेछ र नीतिको कार्यान्वयनका सन्दर्भमा वार्षिक अनुगमन र प्रगति समीक्षा गर्नेछ । यो जिम्मेवारी पूरा गर्न श्रम तथा रोजगार मन्त्रालयलाई साधन स्रोत सम्पन्न गराइनेछ ।

१७.९ नीतिको कार्यान्वयनमा सुधार ल्याउन र नीति निर्माण प्रक्रियामा रोजगारीका उद्देश्यहरूलाई समायोजन गर्न तालिम र स्रोत विनियोँजन मार्फत सरोकारवालाहरूको क्षमता अभिवृद्धि गरिनेछ ।

१७.१० व्यावसायिक तथा सीप विकाससम्बन्धी तालिम प्रदायक संस्थाहरूलाई एउटै छातामुनि ल्याई गुणस्तरयुक्त तालिम प्रदान गर्ने व्यवस्था मिलाइनेछ । सोको लागि अनुसूची -१ बमोजिमको संस्थागत संरचनाको व्यवस्था गरिनेछ ।

## १८. खारेजी र बचाउ

१८.१ श्रम तथा रोजगार नीति, २०६२ खारेज गरिएको छ । उक्त नीति अनुसार भए गरेका कार्यहरू यसै राष्ट्रिय रोजगार नीति, २०७१ अनुसार भए गरेको मानिनेछ ।

**अनुसूची १**

**राष्ट्रिय रोजगार नीति अनुगमन तथा मूल्याङ्कन समिति**

**(दफा १७.७ सँग सम्बन्धित)**

| | | |
|---|---|---|
| १. | मन्त्री/राज्यमन्त्री, श्रम तथा रोजगार मन्त्रालय | अध्यक्ष |
| २. | सहायक मन्त्री, श्रम तथा रोजगार मन्त्रालय | उपाध्यक्ष |
| ३. | सदस्य, राष्ट्रिय योजना आयोग | सदस्य |
| ४. | सचिव, श्रम तथा रोजगार मन्त्रालय | सदस्य |
| ५. | सचिव, प्रधानमन्त्री तथा मन्त्रिपरिषद् कार्यालय | सदस्य |
| ६. | सचिव, अर्थ मन्त्रालय | सदस्य |
| ७. | सचिव, उद्योग मन्त्रालय | सदस्य |
| ८. | सचिव, कानुन, न्याय, संविधानसभा तथा संसदीय व्यवस्था मन्त्रालय | सदस्य |
| ९. | सचिव, कृषि विकास मन्त्रालय | सदस्य |
| १० | सचिव, भौतिक पूर्वाधार तथा यातायात मन्त्रालय | सदस्य |
| ११. | सचिव, वाणिज्य तथा आपूर्ति मन्त्रालय | सदस्य |
| १२. | सचिव, शिक्षा मन्त्रालय | सदस्य |
| १३. | सचिव, सङ्घीय मामिला तथा स्थानीय विकास मन्त्रालय | सदस्य |
| १४. | सचिव, संस्कृति, पर्यटन तथा नागरिक उड्डयन मन्त्रालय | सदस्य |
| १५. | सचिव, सहकारी तथा गरिबी निवारण मन्त्रालय | सदस्य |
| १६. | सचिव, युवा तथा खेलकुद मन्त्रालय | सदस्य |
| १७. | सचिव, राष्ट्रिय योजना आयोगको सचिवालय | सदस्य |
| १८. | प्रतिनिधि, नेपाल उद्योग वाणिज्य महासङ्घ | सदस्य |
| १९. | प्रतिनिधि, नेपाल उद्योग परिसङ्घ | सदस्य |
| २०. | प्रतिनिधि, नेपाल चेम्बर्स अफ कमर्स | सदस्य |
| २१. | प्रतिनिधि, संयुक्त ट्रेड युनियन समन्वय केन्द्र | २ सदस्य |
| २२. | सहसचिव, श्रम तथा रोजगार मन्त्रालय (सम्बन्धित महाशाखा हेर्ने) | सदस्य-सचिव |

**अनुसूची २**

**सीप विकास राष्ट्रिय तालीम व्यवस्थापन समिति**

(**दफा १७.१० सँग सम्बन्धित**)

| | | |
|---|---|---|
| १. | सचिव, श्रम तथा रोजगार मन्त्रालय | अध्यक्ष |
| २. | सह-सचिव, प्रधानमन्त्री तथा मन्त्रिपरिषद् कार्यालय | सदस्य |
| ३. | सह-सचिव, अर्थ मन्त्रालय | सदस्य |
| ४. | सह-सचिव, उद्योग मन्त्रालय | सदस्य |
| ५. | सह-सचिव, कानुन, न्याय, संविधानसभा तथा संसदीय व्यवस्था मन्त्रालय | सदस्य |
| ६. | सह-सचिव, कृषि विकास मन्त्रालय | सदस्य |
| ७. | सह-सचिव, भौतिक पूर्वाधार तथा यातायात व्यवस्था मन्त्रालय | सदस्य |
| ८. | सह-सचिव, वाणिज्य तथा आपूर्ति मन्त्रालय | सदस्य |
| ९. | सह-सचिव, शिक्षा मन्त्रालय | सदस्य |
| १०. | सह-सचिव, सङ्घीय मामिला तथा स्थानीय विकास मन्त्रालय | सदस्य |
| ११. | सह-सचिव, संस्कृति, पर्यटन तथा नागरिक उड्डयन मन्त्रालय | सदस्य |
| १२. | सह-सचिव, सहकारी तथा गरिबी निवारण मन्त्रालय | सदस्य |
| १३. | सह-सचिव, युवा तथा खेलकुद मन्त्रालय | सदस्य |
| १४. | सह-सचिव, राष्ट्रिय योजना आयोग सचिवालय | सदस्य |
| १५. | सह-सचिव, श्रम तथा रोजगार मन्त्रालय (सम्बन्धित महाशाखा हेर्ने) | सदस्य-सचिव |

उपयुक्त समितिले आवश्यकताअनुसार विभिन्न तालीम संस्थाका प्रमुखलाई आमन्त्रण गर्न सक्नेछ ।

# कृषि यान्त्रिकरण प्रवर्द्धन नीति, २०७१

**१. भूमिका**

कृषि[1] व्यवसायले राष्ट्रिय कुल ग्रार्हस्थ्य उत्पादनमा एक तिहाई हिस्सा ओगटे पनि कृषि क्षेत्रको समयानुकूल व्यावसायिकरण हुन नसकेको र उत्पादकत्व तथा उत्पादनमा आशातीत तवरले वृद्धि हुन नसकेबाट कृषि क्षेत्रमा औद्योगिकीकरण हुन सकेको छैन । कृषि व्यवसायमा युवावर्गको घट्दो आकर्षण र वैदेशिक रोजगारीका अवसरका कारण कृषि क्षेत्रमा भैरहेको श्रम शक्तिको अभावलगायतका समस्या हटाउन र महिलाको अत्यधिक र कष्टप्रद श्रमभार रहेको यस क्षेत्रमा महिलाको श्रमभार घटाई अन्य उत्पादनशील कार्यमा लगाउन कृषियन्त्र[2]हरूको प्रयोगलाई प्रोत्साहन गर्नु अत्यावश्यक छ । निर्वाहमुखी कृषि प्रणालीलाई व्यावसायिकरणको माध्यमबाट प्रतिस्पर्धात्मक प्रणालीमा रूपान्तरण गरी आयात प्रतिस्थापन तथा निर्यात प्रवर्द्धन गर्न र खाद्य सुरक्षा सुनिश्चित गर्नसमेत कृषि यान्त्रिकरण[3]को आवश्यकता पर्दछ । कृषि यान्त्रिकरणद्वारा कृषिजन्य वस्तुको उत्पादकत्व बढ्ने, लागत न्यूनीकरण हुने, उत्पादित वस्तुको गुणस्तर कायम राख्न सघाउ पुग्ने र औद्योगिकीकरणको गतिमा तीव्रता थपिनेछ । यसका साथै कृषि क्षेत्रमा निजी तथा सहकारी क्षेत्र र युवा वर्गको आकर्षण बढाउनसमेत यसले सघाउ पुऱ्याउनेछ ।

कृषि व्यवसायको आधुनिकीकरण गर्दै कृषि व्यावसायिकरणलाई दिशानिर्देश गर्न तथा यस क्षेत्रको औद्योगिकीकरण गर्नेतर्फ दिगो रूपमा गति दिनको लागि ठोस नीतिको आवश्यकता महसुस गरिएको हुँदा र नेपालको अन्तरिम संविधान, २०६३ मा उल्लेखित "राज्यले किसानलाई प्रोत्साहन गरी कृषि क्षेत्रमा उत्पादकत्व बढाई कृषिमा आधारित अधिकांश नागरिकको आर्थिक उन्नति हुने अवस्थाहरूको सिर्जना गरी कृषिलाई उद्योगको रूपमा विकास गर्ने" राज्यको नीतिको प्रावधानको कार्यान्वयन गर्नाको साथै राष्ट्रिय कृषि नीति, २०६१ एवं कृषि व्यवसाय प्रवर्द्धन नीति, २०६३ का व्यवस्थासमेतलाई मध्यनजर गरी नेपाल सरकारले कृषि यान्त्रिकरण प्रवर्द्धन नीति, २०७१ जारी गरेको छ ।

---

1 कृषि शब्दले बाली, बागवानी, पशुपन्छी, माछा आदि कृषिका सबै क्षेत्र (Sector) सँग सम्बद्ध उत्पादन, उद्योग एवं व्यवसायहरूलाई जनाउँछ ।

2 कृषि शब्दले बाली, बागवानी, पशुपन्छी, माछा आदि कृषिका सबै क्षेत्र (Sector) सँग सम्बद्ध उत्पादन, उद्योग एवं व्यवसायहरूलाई जनाउँछ ।

3 कृषियन्त्र भन्नाले कृषि कर्ममा प्रयोग हुने औजार/उपकरण/मेसिन भन्ने बुझिन्छ ।

## २. विगतका प्रयासहरू

कृषि विकास मन्त्रालयअन्तर्गत वि.सं.२०१० सालमा कृषि इन्जिनियरिङ्ग एकाइको स्थापना भएपश्चात् सरकारी कृषि तथा पशु विकास फार्महरूको लागि आधुनिक कृषि औजारहरू भित्र्याउने र परीक्षण गर्ने काम सुरुभयो । वि.सं.२०१६ सालमा तराईको लागि कृषि औजारहरूको अनुसन्धान तथा प्रवर्द्धन गर्नको लागि पर्साजिल्लाको रानीघाट, वीरगन्जमा कृषि औजार अनुसन्धान एकाइ स्थापना भयो । कृषि औजार अनुसन्धान एकाइबाट फलामे हलो र धान चुट्ने थ्रेसरको विकास र प्रवर्द्धन गर्नमा उल्लेख्य योगदान पुऱ्यायो । त्यसैगरी वि.स.२०२१ सालमा तत्कालीन सोभियत युनियन सरकारको सहयोगमा वीरगञ्जमा कृषि औजार कारखाना स्थापना भयो । यस कारखानाबाट गुणस्तरीय फलामे हलो, पेडल थ्रेसर, मकै छोडाउने मेसिन, ह्वील व्यारो, गहुँ चुट्ने थ्रेसर, पम्पसेट, ट्रेक्टर र ट्रेलरहरूको उत्पादन भए । देशका विभिन्न स्थानमा बिक्री डिपो र डिलरहरूको व्यवस्था गरी यी औजार, यन्त्रहरूको आपूर्ति र वितरण थालियो । यसले कृषिमा यान्त्रिकरण सुरुआत गर्न ठूलो योगदान पुऱ्यायो ।

वि.सं. २०२७ सालमा खाद्य प्रविधि तथा गुण नियन्त्रण विभागबाट फलफूल प्रशोधन गर्ने पाइलट प्लाण्ट स्थापना भई कार्य सञ्चालन भयो । वि.सं. २०२८ सालमा जापान सरकार (JICA) को सहयोगमा जनकपुर कृषि विकास आयोजना स्थापना गरी सोमार्फत डीप ट्यूबवेल, पावर टिलर र आधुनिक कृषि औजारको प्रवर्द्धन गर्ने कार्य सुरु भयो । त्यसैगरी २०३० को दशकमा कृषि विकास बैंकले ट्रेक्टर र पम्पसेटमा प्राथमिकताका साथ कर्जा प्रवाह गरी कृषि यान्त्रिकरणमा योगदान पुऱ्यायो । पशु विकास फार्महरूमा यान्त्रिकरण गर्ने सिलसिलामा जर्मन सहयोग नियोग (GTZ) को सहयोगमा पशु विकास फार्म, पोखरामा फोरेज हार्भेष्टर, इन्कुवेटर, ह्याचर, साइलेज बनाउन प्रयोग गरिने उपकरणहरू आदिको प्रयोग सुरु भयो भने दोलखा जिल्लास्थित जिरी फार्ममा पनि स्वीस सरकारको सहयोगमा केही मेसिनरी औजारहरू प्रयोगमा आए।

वि.स.२०४८ सालदेखि नेपाल कृषि अनुसन्धान परिषद्अन्तर्गत रहेको कृषि इन्जिनियरिङ्ग महाशाखाले विभिन्न किसिमका कृषियन्त्र तथा उपकरणहरूको परीक्षण र विकास गर्दै आएको छ । साथै, वि.सं.२०६१ सालमा कृषि विभागअन्तर्गत स्थापित कृषि इन्जिनियरिङ्ग निर्देशनालयले कृषियन्त्रहरूको प्रवर्द्धनात्मक प्रचार, प्रसार तथा तालिम कार्यक्रम र अन्य सेवा पुऱ्याउँदै आएको छ ।

### ३. वर्तमान स्थिति

मुलुकको कृषि क्षेत्रमा मुख्यतया परम्परागत हातेयन्त्र र जमिन तयार गर्न पशुद्वारा सञ्चालित काठे हलोमा नै निर्भर भएको पाइन्छ । समयको माग, सरकारी निकायको प्रयास र निजी क्षेत्रको लगानीको कारणले नेपालको तराई एवं केही पहाडी उपत्यकाहरूमा कृषि यान्त्रिकरणले गति लिन थालेको छ । यी क्षेत्रहरूमा फलामे हलो, ट्रेक्टर, पावरटिलर, पम्पसेट, स्प्रेयर, धान/गहुँ चुट्ने थ्रेसर, धान कुट्ने/पिस्नेमिल, तेल पेल्ने मिल, ढुवानीको लागि ट्रेलर आदिको बढ्दो प्रयोग भएको पाइन्छ ।

पशुपालनतर्फ, विशेष गरी व्यावसायिक गाईभैंसी फार्महरू, कुखुरापालन, चल्ला उत्पादन, दाना उत्पादन, दुग्ध प्रशोधन तथा दुग्धजन्य पदार्थको विविधीकरणमा यन्त्रको प्रयोग बढ्दो छ । कृत्रिम गर्भाधान कार्यको लागि आवश्यक पर्ने तरल नाइट्रोजनको उत्पादन तथा वितरण, वीर्य सङ्कलन तथा प्रशोधन गर्ने कार्यका लागि स्वचालित तथा कम्प्युटरजडित उपकरणहरूको प्रयोग पोखरास्थित राष्ट्रिय पशु प्रजनन् केन्द्रमा भैरहेको छ । त्यसैगरी मत्स्यपालनका क्षेत्रमा पनि पानीको गुणस्तर परीक्षण गर्न, माछा समात्न, रोग परीक्षण गर्न, दाना प्रयोग गर्न र माछा ढुवानी तथा भण्डारण गर्न विभिन्न किसिमका उपकरणहरूको प्रयोग हुदै आएको छ ।

हाल तराईका जिल्ला र केही पहाडी उपत्यकामा कृषियन्त्र तथा उपकरण सेवा भाडामा दिने प्रचलन सुरु भएको छ । तराईका केही जिल्लाहरूमा कम्बाइन हार्भेस्टरको सफल प्रयोग, धान रोप्ने मेसिनको सुरुआत भएको छ। जिरो टिलेज सिड ड्रिलले गहुँ छर्ने प्रविधिको अनुशरण र विस्तार हुँदैछ। पहाडी जिल्लाहरूमा मिनिटिलर प्रविधिप्रति कृषकको आकर्षण बढ्दो छ । ग्राभिटि रोपवे प्रविधिको सफल अनुशरण र सुधारिएको घट्टको बहुउपयोग हुन थालेको छ। यसैगरी देशका विभिन्न स्थानमा खोलिएका दुग्धजन्य व्यवसायमा संलग्न कृषक समूह, समिति र सहकारीहरूले साना तथा मझौलास्तरका डेरीहरू स्थापना गरी यी डेरीहरूमा चिस्यान केन्द्रको स्थापना, ल्याक्टोमेसिन, क्रिम सेपरेटर, आइसक्रिम बनाउने मेसिन, गर्वर सेन्ट्रिफ्युज तथा व्युटाइरोमिटर, दूध दुहुने मेसिनजस्ता उपकरणहरूको प्रयोग दिनानुदिन बढ्दै गइरहेको छ । कृषि विकास मन्त्रालयअन्तर्गत र सम्बद्ध निकाय तथा आयोजनाहरूले आ-आफ्नो सीमित स्रोतसाधन र कार्यक्रमबाट यन्त्र तथा उपकरणसम्बन्धी प्रविधि विकास, प्रसार र सेवाका साथै कृषकलाई सहुलियत/अनुदान उपलब्ध गराउँदै आएका छन् । यद्यपि, उपयुक्त कृषि यान्त्रिकरणको लागि स्पष्ट नीतिगत व्यवस्थाको अभावले देशमा कृषि यान्त्रिकरणले स्पष्ट र सुनिश्चित गति लिन सकेको छैन ।

## ४.समस्या तथा चुनौती

४.१ कृषि यान्त्रिकरण क्षेत्रका समस्याहरू

देशको कृषि यान्त्रिकरणमा देहायबमोजिमका समस्याहरू रहेका छन्-

(क) उपयुक्त र गुणस्तरीय कृषियन्त्र तथा उपकरणका सम्बन्धमा कृषक र उद्यमी वर्गमा पर्याप्त ज्ञान नभएको र यन्त्र तथा उपकरणहरूमा उद्यमी व्यावसायी र कृषकहरूको पहुँच नपुगेको ।

(ख) खेतीयोग्य जमिन खण्डीकरण भैरहेको अवस्थामा साना किसानका लागि उपयुक्त कृषियन्त्रको पहिचान र विकास हुन नसकेको ।

(ग) देशका अधिकांश भू-भाग पहाडी र विकट भएकाले कृषि क्षेत्रमा यान्त्रिकरण गर्न कठिनाइ परेको ।

(घ) ग्रामीण पूर्वाधारको अभाव, ऊर्जा सङ्कट आदिका कारण कृषि यान्त्रिकरणमा बाधा परेको ।

(ङ) परम्परागत आरन चलाउने समुदायको सीपको व्यावसायिकरण हुन नसकी लोप हुने अवस्थामा पुगेकाले किसानहरू तिनका सेवा पाउनबाट वञ्चित भएको ।

(च) उपयुक्त नीतिको अभावले देशभित्र यन्त्र तथा उपकरणको कारखाना नभएको र आयातितभन्दा देशभित्र निर्माण हुने कृषि उपकरणहरू महँगो हुने गरेको ।

(छ) हाल विदेशबाट आयातित यन्त्र तथा उपकरणमा निर्भर हुन परिरहेकोले मर्मतसम्भार सेवा र पार्टपुर्जा सरल र सुलभ नभएको ।

(ज) कृषियन्त्र तथा उपकरणको अनुसन्धान, विकास, प्रसार तथा नियमनका लागि संस्थागत संरचना र कार्यक्रम पर्याप्त नभएको ।

(झ) सुलभ कर्जा प्रवाहमा कठिनाइ तथा लगानीमैत्री वातावरण नभएको ।

(ञ) कृषि यान्त्रिकरणसम्बन्धी अनुसन्धान तथा प्रवर्द्धनको लागि दक्ष/अर्धदक्ष जनशक्ति पर्याप्त नभएको ।

(ट) कृषि प्रयोजनका विभिन्न यन्त्रहरू अन्य कार्यमा प्रयोग हुने गरेको ।

४.२ कृषि यान्त्रिकरण क्षेत्रका चुनौतीहरू

देशको कृषि यान्त्रिकरणमा देहाय बमोजिमका चुनौतीहरू रहेका छन्-

(क) निर्वाहमुखी कृषि र जमिनमा कृषकको स्वामित्व कम हुनु ।

(ख) सडक, विद्युत् र सञ्चार सेवामा पहुँच कम हुनु ।

(ग) पहाडी तथा दुर्गम भू-भागमा यान्त्रिकरण गर्न कठिनाइ हुनु ।

(घ) छरिएर रहेको कृषक बस्ती, विभिन्न पशुपालन, विभिन्न बाली र मौसमअनुसार मेल खाने खालका यान्त्रिकरण गर्न कठिनाइ हुनु ।

(ङ) इन्धनको आपूर्ति र मूल्यमा अस्थिरता हुनु ।

## ५. कृषि यान्त्रिकरण प्रवर्द्धन नीतिको आवश्यकता

युवा जनशक्तिको पलायन, कृषि श्रमिकको कमी र अधिक उत्पादन लागतको कारणले मुलुकको कृषि व्यावसायिकरण हुन नसकेको हालको अवस्थामा उपयुक्त कृषि यान्त्रिकरणको माध्यमबाट कृषि पेशालाई प्रतिष्ठित उद्यमको रूपमा विकास गरी कृषि व्यवसायको विकास एवं विस्तारद्वारा कृषकहरूको जीवनस्तरमा सुधार ल्याई गरिबी न्यूनीकरण तथा दिगो आर्थिक विकासमा योगदान पुऱ्याउन कृषि यान्त्रिकरण प्रवर्द्धन नीतिको आवश्यकता महसुस गरिएको छ । यो नीतिले देहायका कार्यहरूमा योगदान पुऱ्याउने छ :

(क) विभिन्न भौगोलिक स्थान सुहाउँदो प्रविधि पहिचान, अनुसन्धान, विकास तथा विस्तार गरी कृषि यान्त्रिकरणमा कृषक तथा उद्यमीको पहुँच वृद्धि गर्न ।

(ख) यान्त्रिकरणसम्बन्धी अनुदान, सहयोग, लगानी तथा सुविधासम्बन्धमा स्पष्ट व्यवस्था गर्न ।

(ग) सरकारी, सहकारी तथा निजी क्षेत्रको सहकार्य बढाउन ।

(घ) महिलाहरूको अत्यधिक र कष्टकर श्रमभार घटाई उक्त समय उत्पादनशील कार्यमा लगाउन ।

(ङ) युवा जनशक्तिलाई यस क्षेत्रमा आकर्षित गरी रोजगारीको अवसर सिर्जना गर्न ।

(च) श्रमशक्तिको दक्षता अभिवृद्धिबाट उत्पादन लागत घटाउँदै कृषिमा व्यावसायिकरण तथा औद्योगिकीकरण गर्न योगदान पुऱ्याउन ।

(छ) नेपाल सरकारबाट जारी गरिएका विभिन्न नीतिहरूमा छरिएर रहेका कृषि यान्त्रिकरणसम्बन्धी व्यवस्थाहरूलाई एकरूपतामा ल्याउन ।

## ६. परिदृष्टि (Vision)

विद्यमान कृषि प्रणालीमा कृषि यान्त्रिकरणको माध्यमबाट आधुनिकीकरण एवं व्यावसायिकरण गरी राष्ट्रिय विकासमा योगदान पुऱ्याउने ।

### ७. परिलक्ष्य (Mission)

कृषि यान्त्रिकरणको माध्यमबाट कृषि व्यवसायको आधुनिकीकरण गर्दै दिगो आर्थिक विकास गर्ने ।

### ८. लक्ष्य (Goal)

कृषि क्षेत्रको उत्पादकत्व वृद्धि गर्न र त्यसलाई दिगो र प्रतिस्पर्धी बनाउन कृषियन्त्र तथा उपकरणको अनुसन्धान, अनुशरण, विकास, प्रयोग, विस्तार एवं प्रवर्द्धन गर्ने ।

### ९. उद्देश्य (Objectives)

यस नीतिका उद्देश्यहरू देहायबमोजिम रहेका छन् :

९.१. मुलुकको आर्थिक एवं भौगोलिक अवस्था सुहाउँदो कृषि यान्त्रिकरणको माध्यमबाट उत्पादकत्व वृद्धि गरी कृषि व्यवसायलाई दिगो, प्रतिस्पर्धी र व्यावसायिक बनाउने ।

९.२. सरकारी, निजी तथा सहकारी क्षेत्रको सहकार्यबाट कृषि यान्त्रिकरणसम्बन्धी सेवा तथा व्यवसायमा अभिवृद्धि गरी कृषियन्त्र तथा उपकरणहरूमा कृषक/उद्यमीहरूको पहुँच विस्तार गर्ने ।

९.३. महिला तथा वातावरणमैत्री कृषियन्त्र तथा उपकरणहरूको पहिचान तथा प्रवर्द्धन गर्ने ।

९.४. कृषि यान्त्रिकरणको लागि संस्थागत संरचना विकास गर्नुका साथै कृषियन्त्र तथा उपकरणहरूको गुणस्तर निर्धारण, नियमन, अनुगमन एवं प्रवर्द्धन गर्ने ।

### १०. नीति र कार्यनीति

यी उद्देश्यहरू परिपूर्ति गर्न देहायबमोजिमका नीति र कार्यनीतिहरू रहेका छन् -

उद्देश्य १. मुलुकको आर्थिक एवं भौगोलिक अवस्था सुहाउँदो कृषि यान्त्रिकरणको माध्यमबाट उत्पादकत्व वृद्धि गरी कृषि पेशालाई दिगो, प्रतिस्पर्धी र व्यावसायिक बनाउने ।

१०.१.१ विभिन्न भू-धरातल अनुकूल र आम कृषकहरूको पहुँचमा पुग्नसक्ने उपयुक्त खालका कृषियन्त्र तथा उपकरणको पहिचान,

अनुसन्धान, विकास तथा प्रवर्द्धन गरिनेछ ।

१०.१.२ अनुसन्धानबाट पहिचान र विकास भएका एवं अन्य उपयुक्त यन्त्र तथा उपकरणहरूको प्रवर्द्धन गर्न तालिम, प्रदर्शन, कृषियन्त्र मेला प्रदर्शनीको साथै सञ्चार माध्यमको प्रयोग गरिनेछ ।

१०.१.३ परम्परागत रूपमा प्रयोग हुँदै आएका कृषि औजारहरूको अभिलेखीकरण, संरक्षण तथा अनुसन्धानबाट परिमार्जन र विकास गर्दै प्रवर्द्धन र प्रोत्साहनमा जोड दिइनेछ ।

१०.१.४ तराई क्षेत्रका लागि उपयोगी हुने यान्त्रिक शक्तिबाट सञ्चालित मेसिन औजारहरूको प्रवर्द्धन र प्रोत्साहनमा जोड दिइनेछ ।

१०.१.५ यन्त्र तथा उपकरण उत्पादन र सेवा दिने आरनलगायतका परम्परागत पेसालाई आधुनिकीकरण र व्यावसायिकरण गर्न टेवा पुऱ्याइनेछ ।

१०.१.६ उपयुक्त कृषियन्त्र तथा उपकरणहरूको पहिचान, अनुसन्धान, उत्पादन, विकास र सेवा प्रवाहमा निजी क्षेत्रको संलग्नतालाई जोड दिइनेछ ।

१०.१.७ कृषि यान्त्रिकरणको माध्यमबाट कृषि उत्पादकत्व वृद्धि, स्थानीय रोजगारी सिर्जना, परम्परागत प्रविधि प्रवर्द्धन/संरक्षण र नवीनतम खोज र अनुसन्धानका साथै स्थानीयस्तरमा कृषि यान्त्रिकरणसम्बन्धी सचेतना प्रवर्द्धनमा स्थानीय निकायको सहभागिता र सहकार्यमा जोड दिइनेछ ।

१०.१.८ कृषि बालीहरूको उत्पादनका लागि खनजोत, जमिनको तयारी, मलबीउ छर्ने, बेर्ना रोप्ने, गोडमेल, बाली संरक्षण, सिँचाइ तथा कृषिजन्य उपजको कटानी, सङ्कलन, भण्डारण, ढुवानी, फार्मस्तरमा गरिने ग्रेडिङ्ग, प्याकेजिङ्ग, लेवलिङ्ग, सफाइ, सञ्चयन, फार्मस्तरमा उत्पादनोपरान्त गरिने प्रशोधनका लागि उपयुक्त खालका उपकरणको प्रयोगलाई विस्तार गरिनेछ । त्यसैगरी पशुपन्छीपालन, मत्स्यपालन, व्यवसायिक कीटपालन (मौरी, रेशम ईत्यादि), च्याउको उत्पादन, भण्डारण, सङ्कलन, ढुवानी, फार्मस्तरमा उत्पादनोपरान्त गरिने ग्रेडिङ्ग, प्याकेजिङ्ग, लेबलिङग, सफाइ, सञ्चयन, फार्मस्तरमा उत्पादनोपरान्त गरिने प्रशोधन लागि उपयुक्त खालका उपकरणको प्रयोगलाई विस्तार गरिनेछ ।

१०.१.९ कृषि व्यवसायसम्बद्ध कार्यहरूका लागि नियमित ऊर्जा आपूर्तिमा प्राथमिकता दिने र ऊर्जाको मूल्य/शुल्कमा सहुलियत

दिइनेछ ।

१०.१.१० नेपाल सरकारले प्रोत्साहन गर्न तोकिएका कृषियन्त्र तथा उपकरण खरीद गर्दा पुँजिगत अनुदान उपलब्ध गराइनेछ ।

१०.१.११ कृषियन्त्र तथा उपकरणमा कृषकहरूको पहुँच बढाउन कृषक समूह, कृषि तथा पशुसेवामा आबद्ध सहकारी र गैरसरकारी संस्था परिचालन गरिनेछ ।

१०.१.१२ कृषियन्त्रहरूमा सीमान्तकृत कृषकहरूको पहुँच बढाउन निश्चित अवधिका लागि समूहगत/व्यक्तिगत रूपमा सरल ब्याजदर र बिनाधितोमा ऋण वा अनुदानको व्यवस्था गरिनुका साथै सहकारी/निजी क्षेत्रमार्फत कृषियन्त्र तथा उपकरण भाडामा लिने दिने व्यवस्थाको पनि विकास गरिनेछ ।

१०.१.१३ कृषियन्त्र तथा उपकरण सञ्चालक (Machine Operator) को बिमा गर्ने र बिमा प्रिमियममा सहुलियत दिइनेछ ।

१०.१.१४ बायोग्यास, सौर्यशक्ति जस्ता नवीकरणीय र वैकल्पिक ऊर्जाको प्रयोगलाई प्रोत्साहन गरिनेछ ।

१०.१.१५ नवीन (Innovative) तथा अनुकरणीय खालका यन्त्रहरू विकास गर्ने वा प्रयोगमा ल्याउने कृषक, व्यावसायी, अनुसन्धानकर्ता वा प्रसारकर्तालाई प्रोत्साहन स्वरूप पुरस्कृत गरिनेछ ।

१०.१.१६ निश्चित क्षेत्रफलभन्दा बढीमा व्यावसायिक कृषि खेती गर्ने वा जमिन एकीकरण (Land consolidation) गरी निश्चित क्षेत्रफलभन्दा बढीमा सामूहिक खेती गर्ने वा निश्चित सङ्ख्याभन्दा बढी पशुपालन गर्ने कृषक, कृषक समूह, कृषि सहकारीलाई प्रोत्साहनस्वरूप तोकिएका कृषियन्त्र तथा उपकरणहरू खरीदमा निश्चित अवधिका लागि सरल ब्याजदरमा ऋण वा अनुदानको व्यवस्था गरिनेछ ।

१०.१.१७ पशुशक्तिको दक्षता अभिवृद्धि गर्ने उपकरणको पहिचान, अनुसन्धान र विकास गरी प्रवर्द्धन गरिनेछ ।

१०.१.१८ बहुउपयोगी (Multi-purpose) यन्त्र तथा उपकरणहरूको पहिचान, प्रवर्द्धन गरी तिनका उपयोगमा कृषकहरूको पहुँच अभिवृद्धि गरिनेछ ।

उद्देश्य २. सरकारी, निजी तथा सहकारी क्षेत्रको सहकार्यबाट कृषि यान्त्रीकरणसम्बन्धी सेवा तथा व्यवसायमा अभिवृद्धि गरी कृषि क्षेत्रमा

प्रयोग हुने यन्त्र तथा उपकरणहरूमा कृषक/उद्यमीहरूको पहुँच विस्तार गर्ने ।

१०.२.१ कृषियन्त्र तथा उपकरणहरूको पहिचान, उत्पादन, व्यापार, सेवा तथा विस्तारमा निजी तथा सहकारी क्षेत्रलाई सहभागी गराउने साथै यसमा सरकारी-निजी साझेदारी (Public-Private Partnership) को अवधारणालाई प्रोत्साहन गरिनेछ ।

१०.२.२ कृषि विकासका लागि उपयुक्त तथा आवश्यक कृषियन्त्र तथा उपकरणहरूको आयात प्रतिस्थापन गर्न, स्थानीय सीप विकास गरी रोजगारी वृद्धि गर्न स्वदेशमै कृषिऔजार, यन्त्र तथा उपकरण उत्पादन गर्ने घरेलु कारखाना वा ठूला कृषियन्त्र कारखाना स्थापना गर्न सहकारी/निजी क्षेत्रका साथै स्वदेशी साझेदारीमा विदेशी प्रविधि र लगानी भित्र्याउन प्रोत्साहन गरिनेछ ।

१०.२.३ कृषियन्त्र तथा उपकरण उत्पादनमा प्रयोग हुने कच्चा पदार्थ आयात गर्दा लागेको भन्सार तथा मूल्य अभिवृद्धि कर शोधभर्ना र देशभित्र उत्पादित यन्त्र तथा उपकरणहरूमा मूल्य अभिवृद्धि कर तथा अन्तःशुल्क छुटको सुविधा दिइनेछ ।

१०.२.४ कृषि व्यवसायका लागि यन्त्र तथा उपकरणहरू, पार्टपूर्जाहरू स्वदेश मै उत्पादन गर्ने कृषियन्त्र कारखानालाई निश्चित अवधिसम्म आयकरमा छुटको सुविधा दिइनेछ ।

१०.२.५ कृषक, कृषक समूह वा कृषि सहकारीले सम्बन्धित निकायको सिफारिसमा कृषियन्त्र तथा उपकरण खरीद/आयात गर्दा उपकरणलाई नै धितो राखी वित्तीय संस्थामार्फत सहुलियत ब्याजदरमा कर्जा उपलब्ध गराइनेछ ।

१०.२.६ कृषक,कृषक समूह वा कृषि सहकारीले सम्बन्धित निकायको सिफारिसमा कृषि उपजहरू ढुवानीका साधन खरीद वा आयात गर्दा मूल्य अभिवृद्धि करछुट तथा भन्सार छुट उपलब्ध गराइनेछ ।

१०.२.७ सरकारी पूर्ण लगानी र साझेदारीमा निर्माण गरिने विभिन्न पशुपन्छीलगायतका वधशाला, वधस्थल तथा सङ्कलनस्थल र बजार केन्द्रहरूमा उपयुक्त यन्त्रको प्रयोग गर्न प्रोत्साहन गरिनेछ ।

१०.२.८ निजी उद्यमी, कृषक, कृषक समूह वा कृषक सहकारीले भाडामा कृषियन्त्रको सेवा उपलब्ध गराउनको लागि तिनको खरीद वा

आयात गर्दा मूल्य अभिवृद्धि कर र भन्सार छुट तथा कर्जामा सहुलियत ब्याज सुविधा प्रदान गरिनेछ ।

१०.२.९ प्रत्येक विकास क्षेत्रहरूमा आधुनिक कृषियन्त्र कार्यशाला स्थापना, सुधार, अनुसन्धान, विकास र यन्त्र सञ्चालन र मर्मतसम्भारसम्बन्धी तालिम दिन सक्ने कृषियन्त्र स्रोत तथा सेवा केन्द्र व्यवस्था गरी कृषियन्त्र प्रयोगसम्बन्धी सेवा प्रदान गर्ने र यस कार्यका लागि सहकारी, निजी तथा सामुदायिक क्षेत्रको सहभागितासमेत आकर्षित गरिनेछ ।

१०.२.१० जिल्लास्तरमा कृषियन्त्र उत्पादन, वितरण तथा मर्मत सम्भार केन्द्र स्थापना गर्न उचित वातावरण सिर्जना गरिनेछ ।

१०.२.११ कृषियन्त्रहरूको सेवा भाडा निर्धारण गर्न निम्नअनुसार कृषियन्त्रहरूको सेवा भाडा निर्धारण समिति हुनेछ ।

* जिल्ला कृषि विकास कार्यालयको वरिष्ठ कृषि विकास अधिकृत - संयोजक
* जिल्ला पशु सेवा कार्यालयको अधिकृत - प्रतिनिधि
* जिल्ला उद्योग वाणिज्य सङ्घ - प्रतिनिधि
* संयोजकले तोकेको किसान - प्रतिनिधि
* सेवा प्रदायकको - प्रतिनिधि
* जिल्ला विकास समितिले तोकेको प्राविधिक अधिकृत - प्रतिनिधि

उक्त समितिले भाडा दर निर्धारण गरी जिल्ला दररेट निर्धारण समितिबाट स्वीकृत गराई मात्र लागू हुने व्यवस्था गरिनेछ । समितिमा मनोनित सदस्यहरूको पदावधि एक वर्षको रहनेछ ।

१०.२.१२ साना हाते ट्रेक्टर र कम अश्वशक्तिका चार पाङ्ग्रे ट्रेक्टर र त्यसमा प्रयोग हुने यन्त्रमा मूल्य अभिवृद्धि करमा छुट, भन्सार छुट र अनुदान दिई प्रोत्साहन गरिनेछ ।

१०.२.१३ कृषि कार्यका लागि प्रयोग हुने सहुलियतमा उपलब्ध गराइएको ट्रेक्टर-ट्रेलर तथा अन्य ढुवानीका साधनहरूलाई अलग पहिचानको रजिष्ट्रेशन नम्बर (Number Plate) व्यवस्था गरिनेछ ।

१०.२.१४ कृषियन्त्र उत्पादन, खरीद र आयात गर्दा सहुलियत ब्याजदरमा कर्जा उपलब्ध गराउने र कर्जा प्रक्रिया र छुट सुविधा पाउने व्यवस्था सरलीकृत गरिनेछ ।

१०.२.१५ कृषियन्त्रहरू आयात गर्दा उत्पादक देशको आधिकारिक निकायबाट प्रमाणीकरण भएको वा नेपालमा आधिकारिक निकायबाट परीक्षण तथा प्रमाणीकरण गरेको यन्त्रलाई मात्र अनुदान सुविधा उपलब्ध गराइनेछ ।

१०.२.१६ क्षमता र मूल्य अनुसारको सानो/ठूलो ट्रेक्टर, पावर टिलर, दूध ढुवानी ट्याङ्ककर, माछा मासु बोक्ने रेफ्रिजेरेटर भ्यान जस्ता यन्त्रहरूमा लाग्ने वार्षिक नवीकरण शुल्क र तेश्रो पक्ष बिमा फरक फरक गरिनेछ ।

उद्देश्य ३. महिला तथा वातावरणमैत्री कृषियन्त्रहरूको पहिचान तथा प्रवर्द्धन गर्ने ।

१०.३.१ वातावरणमैत्री र इन्धन किफायती यन्त्रको विस्तारमा बढावा दिइनेछ ।

१०.३.२ दिगो कृषि र स्रोत संरक्षण प्रविधिका लागि उपयोगी हुने प्रविधि र यन्त्रलाई बढावा दिइनेछ ।

१०.३.३ महिलाहरूको कार्यबोझ र कष्टकर श्रम घटाउने खालका यन्त्रहरूको प्रयोग र विस्तारमा जोड दिइनेछ ।

१०.३.४ कृषकस्तरमा प्राङ्गारिक मल र प्राङ्गारिक तथा जैविक विषादी उत्पादन गर्न प्रयोग हुने र एकीकृत शत्रुजीव व्यवस्थापन (IPM), एकीकृत खाद्यतत्त्व व्यवस्थापन (INM), असल पशु चिकित्सा अभ्यास (GVP), असल पशुपालन अभ्यास (GLP), असल कृषि अभ्यास (GAP),असल मत्स्यपालन अभ्यासका लागि उपयोगी हुने खालका यन्त्रहरूको प्रवर्द्धन गरिनेछ ।

१०.३.६ उपयुक्त कृषि यान्त्रिकरणको प्रवर्द्धनमा प्रचलित सामग्रीको साथै सूचना प्रविधिको प्रयोगमा जोड दिइनेछ ।

उद्देश्य ४. कृषि यान्त्रिकरण प्रवर्द्धनको लागि संस्थागत संरचना विकास गर्नुका साथै कृषियन्त्रहरूको गुणस्तरनिर्धारण, नियमन, अनुगमन एवं प्रवर्द्धन गर्ने ।

१०.४.१ कृषि व्यवसायमा प्रयोग हुने उपयुक्त यन्त्रहरूको पहिचान, अनुसन्धान, विकास तथा विस्तारका लागि पर्याप्त जनशक्ति विकास गरिनेछ ।

१०.४.२ कृषि यान्त्रिकरणको सम्बन्धमा न्यून अवस्थामा रहेको दक्ष

प्राविधिकको आपूर्ति सुनिश्चित गर्न कृषि इन्जिनियरिङ्ग शिक्षण प्रशिक्षण/संस्थाहरूको क्षमता विकास गर्ने, साथै कृषि यान्त्रिकरणमा आवश्यक मध्यमस्तरको जनशक्ति उत्पादन गर्न प्राविधिक शिक्षा तथा व्यावसायिक तालिम परिषद्लगायतका शिक्षण तथा प्रशिक्षण संस्थाहरूलाई प्रोत्साहन गरिनेछ ।

१०.४.३ कृषियन्त्रहरूको मर्मत सम्भारका लागि पर्याप्त मात्रामा मध्यम वर्गीय जनशक्ति उपलब्ध गराउन कृषक र व्यावसायीलाई आवश्यकताअनुरूप विभिन्नस्तरका तालिमको व्यवस्था गरिनेछ ।

१०.४.४ माध्यमिक र उच्च माध्यमिकस्तरको व्यावसायिक शिक्षामा कृषि इन्जिनियरिङ्गको पाठ्यक्रम समावेश गर्न प्रोत्साहन गरिनेछ ।

१०.४.५ कृषकहरूलाई कृषियन्त्रको सञ्चालन र मर्मतसम्बन्धी अनिवार्य तालिमसम्बन्धित व्यापारी तथा उद्यमीले दिनुपर्ने व्यवस्था गरिनेछ ।

१०.४.६ कृषियन्त्रको मूल्य, गुणस्तर, क्षमता, प्रकार, मेक, मोडेल, सुरक्षित उपयोग, मर्मतसम्भारलगायतको जानकारी प्रष्ट रूपमा नेपाली भाषामा प्रदान गर्ने र स्पेयरपार्ट्स उपलब्ध गराउने अनिवार्य जिम्मेवारी उत्पादक, आयातकर्ता तथा वितरकको हुने व्यवस्था गरिनेछ ।

१०.४.७ कृषि यान्त्रिकरणसम्बन्धी प्रचार-प्रसार गर्ने कार्यालयहरूमा प्राविधिक कर्मचारीको दरबन्दी थप वा मिलान गरी कृषि यान्त्रिकरण प्रसार सेवा विस्तार गरिनेछ ।

१०.४.८ नेपाल कृषि अनुसन्धान परिषद्को कृषि इन्जिनियरिङ्ग महाशाखाको स्तरोन्नत्ति गर्न प्राविधिक जनशक्ति आपूर्ति गर्ने व्यवस्था र सुविधायुक्त अनुसन्धान कार्यशालाको स्थापना र विस्तार गरिनेछ । उच्च पहाडी, मध्य पहाडी र मध्य पश्चिम तराई क्षेत्रमा कृषियन्त्र अनुसन्धान केन्द्रको स्थापनाको साथै कृषि औजार अनुसन्धान केन्द्र रानीघाटको क्षमता विकास गरिनेछ ।

१०.४.९ नेपाल कृषि अनुसन्धान परिषद्, कृषि विभाग र पशु सेवा विभागअन्तर्गतका फार्महरूमा उपयुक्त कृषियन्त्रहरूको प्रयोग गरी कृषकलाई सोको उपयोग र फाइदाबारे जानकारी प्रदान गरिनेछ ।

१०.४.१० नेपाल सरकारबाट अनुदान प्रदान गरिने यन्त्रहरूको गुणस्तर निर्धारणका लागि कृषि इन्जिनियरिङ्ग निर्देशनालय र कृषि इन्जिनियरिङ्ग महाशाखाका प्रतिनिधि रहने समिति गठन गरी लागू गरिनेछ ।

१०.४.११ अनुसन्धानका क्रममा परीक्षण गरिएका नतिजाहरू र खुला बजारमा उपलब्ध यन्त्रहरूको नमुना सङ्कलन गरी परीक्षण गरिएका नतिजाहरू, जस्तै किफायती, प्रभावकारिता, सुरक्षा (प्रयोगकर्ता, उपभोक्ता र वातावरणको लागि) आदि सार्वजनिक गरिनेछ ।

१०.४.१२ अनधिकृत रूपमा वितरण हुने अनुपयुक्त तथा गुणस्तरहीन कृषि औजार, यन्त्रहरूलाई निरुत्साहित गराउन वितरक र उपभोक्ताहरूलाई जागरुक गराइनुको साथै प्रभावकारी अनुगमनको व्यवस्था गरिनेछ ।

१०.४.१३ परम्परागत र स्वदेशी कृषियन्त्र र प्रविधिको उत्पादन/प्रयोगको बौद्धिक सम्पति अधिकार (Intellectual Property Right) को सुरक्षाको व्यवस्था गरिनेछ ।

## ११. संस्थागत संरचना

११.१ यो नीति र यस नीतिबमोजिम कार्यक्रमको समन्वय र प्राविधिक सहयोग गर्न कृषि विभागअन्तर्गत रहेको कृषि इन्जिनियरिङ्ग निर्देशनालयलाई कृषि विकास मन्त्रालयअन्तर्गत छुट्टै केन्द्रीय स्तरको कार्यालयको रूपमा स्थापना गरिनेछ ।

११.२ क्षेत्रीयस्तरमा सेवा टेवा पुऱ्याउन कृषि इन्जिनियरिङ्ग निर्देशनालय मातहतमा कार्यालयहरू स्थापना गरिनेछ ।

११.३ नेपाल कृषि अनुसन्धान परिषद्अन्तर्गतको कृषि इन्जिनियरिङ्ग महाशाखालाई केन्द्रीयस्तरको कार्यालयको रूपमा स्तरोन्नति गरी कृषि यान्त्रिकरण अनुसन्धानसम्बन्धी कार्यलाई एकीकृत एवं समन्वयात्मक रूपमा सञ्चालन गरिनेछ ।

११.४ जिल्ला कृषि विकास तथा पशु सेवा कार्यालयहरूको क्षमता अभिवृद्धि गर्न कृषि इन्जिनियरिङ्ग समूहका कर्मचारीको व्यवस्था गरिनेछ ।

११.५ नेपाल कृषि अनुसन्धान परिषद्अन्तर्गतको पर्सा जिल्लास्थित कृषि औजार अनुसन्धान केन्द्र, रानीघाटको क्षमता विकास गरिनुको साथै उच्च पहाडी, मध्य पहाडी र मध्य/सुदूर पश्चिम तराईमा

कृषियन्त्र अनुसन्धान केन्द्रहरूको स्थापना गरिनेछ ।

११.६ यस नीतिको कार्यान्वयन गर्ने सम्बन्धमा नीतिगत निर्णय गर्न र नेपाल सरकारलाई समय समयमा राय सुझाव उपलब्ध गराउनुका साथै कार्यान्वयनका लागि मातहतका निकायमा निर्देशन गर्न देहायबमोजिमको कृषि यान्त्रिकरण निर्देशक समिति रहनेछ :

| | |
|---|---|
| (क) सचिव, कृषि विकास मन्त्रालय | अध्यक्ष |
| (ख) सह-सचिव, (कृषि तथा ग्रामीण विकास) राष्ट्रिय योजना आयोग | सदस्य |
| (ग) सह-सचिव, अर्थ मन्त्रालय | सदस्य |
| (घ) सह-सचिव, वाणिज्य तथा आपूर्ति मन्त्रालय | सदस्य |
| (ङ) सह-सचिव, उद्योग मन्त्रालय | सदस्य |
| (च) सह-सचिव, सङ्घीय मामिला तथा स्थानीय विकास मन्त्रालय | सदस्य |
| (छ) सह-सचिव, भूमि सुधार तथा व्यवस्था मन्त्रालय | सदस्य |
| (ज) सह-सचिव, सहकारी तथा गरिबी निवारण मन्त्रालय | सदस्य |
| (झ) सह-सचिव, वन तथा भू-संरक्षण मन्त्रालय | सदस्य |
| (ञ) सह-सचिव, सिँचाइ मन्त्रालय | सदस्य |
| (ट) सह-सचिव,विज्ञान, प्रविधि तथा वातावरण मन्त्रालय | सदस्य |
| (ठ) कार्यकारी निर्देशक, नेपाल कृषि अनुसन्धान परिषद् | सदस्य |
| (ड) अध्यक्ष, नेपाल उद्योग वाणिज्य महासङ्घ | सदस्य |
| (ढ) सह-सचिव, कृषि व्यवसाय प्रवर्द्धन तथा तथ्याङ्क महाशाखा, कृषि विकास मन्त्रालय | सदस्य-सचिव |

११.७ यस नीतिसम्बन्धी समन्वय, प्राविधिक सल्लाह र नीतिगत निर्णयका लागि सिफारिस गर्न देहायबमोजिमको कृषि यान्त्रिकरण प्राविधिक समिति रहनेछ :

| | |
|---|---|
| (क) सह-सचिव, कृषि व्यवसाय तथा प्रवर्द्धन महाशाखा, कृषि विकास मन्त्रालय | अध्यक्ष |
| (ख) महानिर्देशक, कृषि विभाग | सदस्य |
| (ग) महानिर्देशक, पशु सेवा विभाग | सदस्य |
| (घ) महानिर्देशक, खाद्य प्रविधि तथा गुण नियन्त्रण विभाग | सदस्य |
| (ङ) प्रतिनिधि, केन्द्रीय कृषि सहकारी महासङ्घ | सदस्य |

(च) प्रमुख, कृषि इन्जिनियरिङ्ग महाशाखा, नेपाल कृषि अनुसन्धान परिषद् — सदस्य
(छ) कार्यकारी निर्देशक, कृषि उद्यम केन्द्र — सदस्य
(ज) प्रतिनिधि, कृषि इन्जिनियरिङ्ग शिक्षाण संस्थान — सदस्य
(झ) समितिले छनौट गरेको यन्त्र उत्पादक/आयातकर्ता — सदस्य
(ञ) समितिले छनौट गरेको सेवा प्रदायक — सदस्य
(ट) कार्यक्रम निर्देशक, कृषि इन्जिनियरिङ्ग निर्देशनालय, कृषि विभाग — सदस्य- सचिव

## १२. आर्थिक पक्ष

यो नीति र यस नीतिबमोजिमको कार्यक्रम कार्यान्वयन गर्न नेपाल सरकारको तर्फबाट दिइने अनुदान तथा सहुलियत वार्षिक बजेट वक्तव्यमार्फत व्यवस्थित गरिनेछ । त्यसैगरी अन्य सङ्घ संस्थाहरू, गैरसरकारी तथा निजी क्षेत्रसमेतको स्रोत साधन परिचालन हुने गरी व्यवस्था गरिनेछ ।

## १३. कानुनी व्यवस्था

* यस नीतिको प्रभावकारी कार्यान्वयन गर्नको लागि आवश्यकताअनुसार ऐन, नियम तथा निर्देशिका, कार्यविधि वा मापदण्डहरू तर्जुमा गरिनेछ ।
* यस नीति कार्यान्वयनको सिलसिलामा नेपाल सरकारको वार्षिक आर्थिक विधेयकमार्फत केही व्यवस्थाहरू परिमार्जन गर्न सक्नेछ ।

## १४. प्रचार प्रसार, अनुगमन तथा मूल्याङ्कन

* यस नीतिमा समावेश गरिएका विषय-वस्तुको प्रभावकारी कार्यान्वयन गर्नको लागि यान्त्रिकरणको प्रचार प्रसारलगायतका कार्यमा कृषि विकास मन्त्रालयले सम्बन्धित निकायलाई परिचालन गर्नेछ ।
* यस नीतिको प्रभावकारी कार्यान्वयनको लागि अनुगमन गर्ने तथा कार्यान्वयन गर्नेसम्बन्धी निकाय, सम्बन्धित विभाग, कृषि विकास मन्त्रालयका अतिरिक्त दफा ११.६ बमोजिमको समितिले गर्नेछ ।
* यस नीतिको प्रगति समीक्षा वार्षिक रूपमा दफा ११.६ बमोजिमको समितिले गर्नेछ ।

## १५. नीतिको परिमार्जन

कृषि विकास मन्त्रालयले आवश्यकताअनुसार यस नीतिको पुनरावलोकन गरी सिफारिस गरेमा नेपाल सरकारले संशोधन वा परिमार्जन गर्न सक्ने छ ।

## १६. वाधा अड्काउ फुकाउने

यस नीतिको कार्यान्वयनको सिलसिलामा कुनै अस्पष्टता भएमा वा वाधा अड्काउ परेमा कृषि यान्त्रिकरण निर्देशक समितिले स्पष्ट पार्ने वा वाधा अड्काउ फुकाउनेछ ।

## १७. जोखिम

कृषि विकास मन्त्रालयको मौजुदा जनशक्ति तथा विनियोजित बजेटबाट यस नीतिको कार्यान्वयन गर्न बजेट नपुग भएको अवस्थामा, अर्थ मन्त्रालयबाट वर्षिक रूपमा बजेट उपलब्ध नभएको अवस्थामा र लक्ष्यअनुरूपको साङ्गठनिक संरचना तयार हुन नसकेमा यस नीति कार्यान्वयनमा कठिनाइ पर्न सक्नेछ ।

# वातावरणमैत्री सवारी तथा यातायात नीति, २०७१

## १. पृष्ठभूमि

जलविद्युत्को दृष्टिकोणले नेपाल महत्त्वपूर्ण देशको रूपमा विश्वभर चिनिन्छ । जहाँ हिमाल, पहाड हुँदै तराईतर्फ बगिरहने ६००० भन्दा बढी नदी नालाहरूबाट ४३,००० मेघावाटभन्दा बढी विद्युत् फाइदाजनक रूपमा उत्पादन गर्न सकिने सम्भावना रहेको अनुमान गरिएको छ । यसो हुँदाहुँदै पनि पर्याप्त मात्रामा जलविद्युत् र विद्युतीय सवारी साधनको विकास र विस्तार हुन सकेको छैन । जल विद्युत् र विद्युतीय सवारी साधनको विकास भएमा यसले राष्ट्रको आर्थिक, सामाजिक, समृद्धि हासिल गर्न सकिने प्रचुर सम्भावना देखिन्छ । तर खनिज इन्धनमा नेपाल परनिर्भर भैरहेको विद्यमान अवस्थामा यसको अन्वेषण भइरहे पनि भरपर्दो परिणाम प्राप्त भइनसकेको अवस्था र विगतमा जलविद्युत्मा पर्याप्त विकास हुन नसकेको कारणले लोडसेडिङलगायत खनिजजन्य इन्धनको समस्या भोग्नुपरेको छ । अर्कोतर्फ बढ्दो शहरीकरण र दिन प्रतिदिन यातायातको साधनको वृद्धिले गर्दा खनिज इन्धनको माग तीव्र रूपमा बढिरहेको छ ।

खनिज इन्धनको विश्वव्यापी बढ्दो उपभोग र आकासिँदै गएको मूल्य एवं यसको सीमितताको कारणले गर्दा नेपालको कुल निर्यातबाट प्राप्त गर्ने वैदेशिक मुद्रा बराबरको रकम वर्षेनी यसको लागि खर्च गर्दा पनि नधान्ने अवस्था सिर्जना भै सकेकोले यसको विकल्पको लागि विद्युत् र विद्युतीय सवारीको विकासमा शीघ्र जोड दिनुपर्ने आवश्यकता रहेको छ । विगतमा ट्रलीबस र ६०० वटाभन्दा बढी सफा टेम्पो सञ्चालनमा ल्याइएको भए तापनि यसको सही रूपमा व्यवस्थापन हुन नसकेको कारणले ट्रलीबस बन्द हुन पुग्यो भने सफा टेम्पोलगायत अन्य विद्युतीय सवारी तथा यातायातको साधनको पनि पर्याप्त विकास हुन सकेन ।

विगतमा खनिज इन्धनबाट सञ्चालन हुने सवारी साधनलाई वातावरणमैत्री सवारी तथा यातायातका साधनको रूपमा रूपान्तरण गर्ने निजी क्षेत्रको प्रयासलाई समयानुकूल प्रोत्साहन तथा प्राथमिकता पुऱ्याउन नसक्नु, सरकारी क्षेत्रबाट पनि पर्याप्त ध्यान पुग्न नक्सनु, सम्बद्ध पक्षहरूबीच पनि साझेदारीको कमी रहनु, विद्युतीयलगायत कम इन्धन खपत र कम प्रदूषण गर्ने वैकल्पिक वा नवीकरणीय ऊर्जाबाट सञ्चालन हुने वातावरणमैत्री सवारी

तथा यातायात नीतिलगायत कानुनी पक्षको कमी रहनुले वतावरणमैत्री तथा विद्युतीय यातायातको व्यवस्था (Electricity Based Transport System) को यथोचित विकास हुन नसकेको पाइन्छ। छिमेकीलगायत अन्य देशले वैकल्पिक ऊर्जाको विकासमा जोड दिई प्रचुर मात्रामा वातावरणमैत्री विद्युतीय सवारी तथा यातायातको सफल विकास गरिरहेको अवस्थालाई मध्यनजर राख्दा नेपालमा पनि वैकल्पिक वा नवीकरणीय ऊर्जाको पर्याप्त उपलब्धताको सम्भावना रहेकोले प्राथमिकताका साथ यसको विकासमा ध्यान दिनुपर्ने अवस्था रहेको छ।

यातायात क्षेत्रमा प्रयोग हुने खनिज इन्धनबाट मुद्रा वर्हिगमन, वैदेशिक निर्भरता, वातावरण प्रदूषण विश्वमा भएको जलवायु परिवर्तनको सन्दर्भमा, विश्व उष्णीकरण, हरित ग्याँसहरू तथा हानिकारक कणजन्य तत्वको उत्सर्जन गर्ने विषयहरू जस्ता कार्यमा यातायात क्षेत्रबाट वातावरणमा उत्पन्न हुने नकारात्मक असरहरूलाई न्यूनीकरण गर्दै हरित विकास गर्नुपर्ने आवश्यकता भएको छ। स्वदेशी सीप र प्रविधिको प्रयोगबाट देशमा उपलब्ध हुने उत्पादनका साधन र स्रोतको समुचित व्यवस्थापन तथा उपयोगद्वारा संरक्षण एवं संवर्द्धन गर्दै नीजि सार्वजनिक साझेदारी सहकारी सरकारी र स्वदेशी तथा विदेशी लगानीलाई परिचालन गरी व्यवस्थित रूपमा औद्योगिकीकरणको प्रक्रियालाई तीव्र बनाई आवश्यक पूर्वाधारको निर्माण तथा विकास गरी सफा शहर कार्यक्रमलाई प्रभावकारी कार्यान्वयन एवं व्यवस्थित गर्दै उत्पादन तथा रोजगारीको अवसर वृद्धि गरी आर्थिक समृद्धि हासिल गरी राष्ट्रिय अर्थतन्त्रमा सबल, गतिशील तथा प्रतिस्पर्धी आत्मनिर्भर अर्थतन्त्र निर्माण गर्नु आजको आवश्यकता रहेको छ। संविधानले परिकल्पना गरेबमोजिम समावेशी समाजको लागि समेत दिगो यातायातको प्रवर्द्धनले कोशेढुंगाको कार्य गर्दछ। नेपालको त्रिवर्षीय योजना २०६७/६८ तथा २०६९/७० ले सार्वजनिक यातायातलाई भरपर्दो सुरक्षित वातावरणमैत्री तथा सर्वसाधारणको पहुँचमा पुऱ्याई रोजगारीको सृजना गर्नुका साथै आर्थिक विकासमा टेवा पुऱ्याउने गरी विकास गर्ने लक्ष्य लिएको छ। खनिजजन्य इन्धनको प्रयोगमा कमी गर्दै परनिर्भरता कम गर्ने खालको वातावरणमैत्री सवारी तथा यातायातका साधनको विकास र राष्ट्रिय उत्पादनलाई प्रोत्साहन गर्न तत्काल, अल्पकालीन र दीर्घकालीन लक्ष्य र उद्देश्यसहित नीतिगत तथा कानुनी व्यवस्थाको आवश्यकता महसुस गरिएकोले यो नीति तर्जुमा गरिएको छ।

## २. परिभाषा तथा व्याख्या

२.१. विषय वा प्रसङ्गले अर्को अर्थ नलागेमा यस नीतिमा वातावरणमैत्री

सवारी तथा यातायातका साधन भन्नाले यातायात क्षेत्रमा प्रयोग उपयोग, उत्पादन एवं सञ्चालनबाट वातावरणमा हुने प्रदूषणले मानव जाति, जीवजन्तु, वनस्पति प्रकृति तथा भौतिक वस्तुहरू माथि हुने प्रतिकूल प्रभावलाई कमगरी वायुमण्डलमा हुने धुवा तथा अन्य हानिकारक कणजन्य तत्व रहित वा न्यून हुने अथवा न`पाल सरकारले तोकेको प्रदुर्षण मापदण्ड भन्दा न्यून प्रदूषण गर्ने वैकल्पिक वा नवीकरणरणीय ऊर्जाबाट सञ्चालन हुने यात्रीबाहक तथा मालबहाक सवारी तथा यातायातका साधनलाई वातावरणमैत्री सवारी तथा यातायातका साधन बुझ्नु पर्दछ ।

जस्तै विद्युत् सञ्चित गरी वा उत्पादित विद्युत् प्रयोग गरी सञ्चालन हुने विद्युतीय सवारी तथा यातायातका साधनहरू विद्युतीय साइकल मोटर साइकल, स्कुटर, रिक्सा, टेम्पो, ट्राइसाइकल, कार, बस, ट्राम, ट्रलीबस, रज्जुमार्ग, केवलकार, विद्युतीय रेललगायत सौर्य ऊर्जा, वायुऊर्जा, जैविकऊर्जा, वायोमास ऊर्जा, फ्युलसेल ग्यास आदि जस्ता वैकल्पिक वा नवीकरणीय ऊर्जाबाट सञ्चालन हुने तथा विद्युत् इन्धन वा ग्यास वा अन्य दुवैबाट सञ्चालन हुने भइ कम इन्धन र कम प्रदूषण गर्ने हाइब्रिड तथा यस्तै प्रकारका सवारी साधन र नेपाल सरकारले वातावरणमैत्री सवारी तथा यातायातका साधन भनी तोकिएका समेतलाई बुझ्नुपर्दछ ।

२.२ व्याख्या: कुनै विषय वा शब्द अस्पष्ट र यस नीतिसँग सम्बन्धित भएमा तर नीति ऐन, नियम, कार्यविधि निर्देशिका आदिमा परिभाषित नभएमा त्यसलाई वातावरणमैत्री सवारी तथा यातायात कार्य समितिले परिभाषित वा व्याख्या गरी केन्द्रीय वातावरणमैत्री सवारी तथा यातायात सञ्चालन समितिबाट निर्णय भई स्वीकृति भएको परिभाषा वा व्याख्यालाई बुझ्नुपर्छ ।

## ३. विगतका प्रयास

नेपालमा विद्युतीय यातायातको सुरुवात गर्ने पहिलो प्रयासको रूपमा धोर्सिङ मातातीर्थ मालबाहक रज्जुमार्गको स्थापना भएको थियो । तत्पश्चात बारपाकलगायत विभिन्न स्थानमा मालबाहक रज्जुमार्गको स्थापना भएतापनि यात्रुवाहक रज्जुमार्ग भने पहिलो पटक २०५५ सालमा कुरिनटारदेखि मनकामनासम्म मनकामना केवलरकारको रूपमा आरम्भ भएको देखिन्छ । तर विद्युतीय मालवाहक रज्जुमार्ग सञ्चालनमा विभिन्न व्यवधान आइ सुचारु रूपमा सञ्चालन हुन सकेको छैन ।

विगतमा काठमाडौं उपत्यकामा विद्युतीय ट्रली बस र सफा टेम्पो जस्ता वातावरणमैत्री सवारी तथा यातायातको साधनको विकासमा नेपाल सरकारले

जोड दिएको देखिन्छ । मित्र राष्ट्र चीनको सहयोगमा वि.सं. २०३२ सालमा २२ वटा ट्रली बस र त्यसका लागि आवश्यक पूर्वाधारहरूको निर्माण भएपछि नेपालमा विद्युतीय सवारी साधनको सुरुवात भएको पाइन्छ । सो ट्रली बसको सेवा काठमाडौंको त्रिपुरेश्वरदेखि भक्तपुरको सूर्यविनायकसम्म १३ कि.मि.को रुटमा चलेको थियो । यसले सस्तो र सर्वसुलभ सेवा प्रदान गर्दै आएको भएता पनि व्यवस्थापनमा देखिएका विविध कमजोरीको कारणले गर्दा सो सेवाले निरन्तरता पाउन सकेन ।

नेपाल सरकार र राष्ट्रिय तथा अन्तर्राष्ट्रिय विभिन्न संस्थाहरूको सहयोगबाट वि.सं. २०५६ सालमा विद्युतीय सवारीसाधनको पूर्णरूपमा सफा टेम्पो सञ्चालनमा आए तापनि यसले वृहत व्यावसायिक रूप लिन सफल हुन सकेको छैन । सफा टेम्पो चल्ने रुटमा खनिजजन्य इन्धनबाट सञ्चालन हुने सवारी साधनको चाप तथा बढ्दो् लोडसेडिङका कारणले सफा टेम्पोको पर्याप्त सङ्ख्यामा विकास हुन सकिरहेको छैन । साथै, विद्युतीय सवारीसाधन आयात गर्दा ब्याट्रिबाट सञ्चालित सवारीलाई विद्युतीय साधनको रूपमा मान्यता दिने स्पष्ट नीति नभएकोले समस्या देखापरेको थियो । यसरी स्पष्ट विद्यूतीय सवारी साधन तथा रूपान्तरणसम्बन्धी नीति एवं कानूनी व्यवस्थाको अभावमा पेट्रोल, डिजेलका सवारी साधनलाई ग्यासमा वा पेट्रोल, डिजेल र ग्यासका सवारी साधनलाई विद्युतीय, हाइब्रिड वा अन्य नवीकरणीय वा बैकल्पिक ऊर्जामा रूपान्तरण गर्ने नीजि क्षेत्रको प्रयास पनि नीति, ऐन, कानुन र प्रोत्साहनको अभावमा अगाडि बढ्न सकिरहेको छैन । तैपनि वातावरणप्रतिको जनचेतनाको कारणले यसको लोकप्रियतामा केही वृद्धि भएको आभास हुन्छ ।

राष्ट्रिय नीति तथा कानूनी व्यवस्थामा विद्युतीय यातायातको विकास, प्रवर्द्धन तथा संवर्द्धन गर्ने कुराहरू उल्लेख गरेको भएता पनि स्पष्ट रूपमा व्यवस्था भएको पाइँदैन । हुन त छैठौं, सातौं र आठौं पञ्च वर्षीय योजनामा ट्रलीबस र विद्युतीय रेलको विकासमा जोड दिएको छ । साथै नवौं योजनामा बीस वर्षे यातायात विकास दूरदृष्टीको कार्यक्रम लिएको छ । यस्तैगरी काठमाडौ उपत्यकाको वातावरण प्रदूषण कम गर्न ट्रलीबस विस्तार गर्न र ब्याट्रीबाट सञ्चालित सवारी साधनलाई प्रयोग गर्न प्रोत्साहन गर्ने उल्लेख हुनुको अलवा दशौं योजनामा विद्युतीय सवारी साधन र अन्य स्वच्छ ऊर्जाबाट सञ्चालित सवारीसधानलाई व्यापक रूपमा विस्तार गर्ने नीतिसमेत रहेको छ । यसै सर्न्दभमा राष्ट्रिय यातायात नीति २०५८ ले देशभर विद्युतीय यातायात सेवा विस्तार गर्न, प्रदूर्षणमुक्त सवारी साधनलाई कर तथा विभिन्न शुल्कमा निश्चित अवधिका लागि छुट दिने व्यवस्थासमेत गरेको छ ।

आर्थिक ऐन, २०५३ मा सफा टेम्पोको चेसिस वा चेसिससहितको इन्जिन र टेम्पोको पार्टपुर्जा आयात गर्दा १ प्रतिशत भन्सार दस्तुर लिने र बिक्री कर (टेम्पो उत्पादन र निर्यात गर्ने उद्योगमा) छुटको व्यवस्था भएको थियो । सोही ऐनले टेम्पोबाहेकका सवारी साधनमा ५ प्रतिसत भन्सार दस्तुर र चेसिस र चेसिस सहित इन्जिन मोटर, एकुमुलेटर ब्याट्री चार्जर र अन्य पार्टपूर्जामा बिक्री कर छुटको व्यवस्था पनि गरेको थियो । साथै अन्य सम्पूर्ण विद्युतीय ब्याट्री र ग्यासजन्य सवारी साधनमा १० प्रतिशत भन्सार दस्तुरमा छुट र बिक्री करमा पूर्ण छुट दिने व्यवस्थासमेत गरेको देखिन्छ । यातायात व्यवस्था कार्यालयमा दर्ता गरिएका पेट्रोल र डिजेलबाट सञ्चालन हुने टेम्पोहरू विद्युतीय सफा टेम्पोमा रूपान्तरण गर्न चाहने सवारीसाधन धनीहरूलाई पार्टपूर्जा आयातमा १ प्रतिशतको भन्सार दस्तुर र बिक्री कर छुट मिनाहा दिने व्यवस्था गरिएको थियो । यसैगरी आ.व. २०६६/०६७ देखि विद्युतीय सवारी साधनको अन्तुल्क र सवारी कर पूर्ण छुट दिइएको छ । सोही ऐनले बिक्री हुने प्रति लिटर पेट्रोल र डिजेलमा ५० पैसा बराबरको प्रदूषण करको व्यवस्थासमेत भएको पाइन्छ ।

वातावरण संरक्षण ऐन, २०५३ र वातावरण संरक्षण नियमावलीको व्यवस्थाले प्रदूषणमुक्त उद्योग र प्रविधिलाई अतिरिक्त सुविधा र सौलियत दिने व्यवस्था गरेको छ भने सरकारले प्रदुषणमुक्त सवारीसाधनलाई छुट्टै रुटको व्यवस्था गरी प्रश्रय दिइएको पाइन्छ । साथै पेट्रोल तथा डिजेलका सवारी साधनलाई पनि एलपी ग्यासमा रूपान्तरण गर्दा तुलनात्मक रूपले वातावरणमैत्री हुनुको अतिरिक्त इन्धन किफायती हुने हुँदा यस्तो कार्यलाई विभिन्न समयमा ग्यासमा रूपान्तरण गर्न स्वीकृति दिइएको पनि देखिन्छ ।

तत्कालीन संविधानसभा व्यवस्थापिका संसद्को अर्थ र श्रम सम्बन्ध समितिले विद्युतीय सवारीको विकास गरी राष्ट्रिय उत्पादनलाई प्रोत्साहन गर्न आवश्यक नीति र कार्यनीति बनाई लागू गर्ने सन्दर्भमा नेपाल सरकार सम्बन्धित निकायलाई निर्देशन गरेको थियो । साथै सोही समितिले सरकारी कार्यालयबाट लिलाम गर्ने गाडीहरूलाई मापदण्ड तयार गरी विद्युतीय सवारी साधनमा रूपान्तरण गर्ने तथा हाइब्रिड सवारी साधनको सन्दर्भमा पनि आवश्यक नीति तथा कानुन बनाई लागू गर्न निर्देशनसमेत गरेको थियो ।

## ४. वर्तमान स्थिति

नेपालमा विद्युतीय यातायातको सुरुवात दशकको पहिले भए पनि छ सयभन्दा बढी सफा टेम्पो, पन्ध्र सयभन्दा बढी दुई पाङ्ग्रे सवारी साधन, एक सयभन्दा बढी कार र केही माइक्रोबस तथा हाइब्रिड कार एवं एक

यात्रुवाहक रज्जुमार्ग र केही मालवाहक रज्जुमार्ग मात्र सञ्चालनमा रहेका छन् । तर विगतमा स्पष्ट नीति र कानुनको अभावले गर्दा विद्युतीय सवारी साधनसँग सम्बन्धित पक्षहरूलाई न्यूनतम रूपमा पनि प्रवर्द्धन गरी विकास गर्न नसकिएको अवस्था छ । स्वदेशी उद्योगहरू दुईवटाबाहेक अन्य बन्द हुन पुगे, साथै वातावरणमैत्री सवारी साधनमा रूपान्तरण गर्ने कार्यहरू पनि अलपत्र अवस्थामा रहेका छन् ।

अर्कोतर्फ खनिज इन्धनका सवारी साधन उत्पादन गर्ने विभिन्न देशका कम्पनीहरूले विद्युतीय सवारी साधनको परीक्षण गरी व्यावसायिक उत्पादन गर्न थालिसकेको अवस्था छ । यस कुरालाई विचार गर्दा नेपालको सन्दर्भमा बदलिँदो परिस्थिति, खुला आर्थिक, अवस्था खनिज इन्धनको बढ्दो मूल्य, खस्कदोँ वातावरणको स्तर, जलविद्युत्को प्रचुर सम्भावना र यसको स्वदेश मै खपत हुने अवस्था रहेकाले वातावरणमैत्री सवारी तथा यातायातका साधनसम्बन्धी कार्यलाई यथाशीघ्र प्रवर्द्धन गर्नुपर्ने जरुरी भएको छ ।

## ५. समस्या र चुनौती

वातावरणमैत्री सवारी तथा यातायातको सङ्ख्या र बजार अपेक्षित रूपमा विस्तार हुन नसक्नु, नियमित रूपमा हुने लोडसेडिङले गर्दा विद्युतीय सवारी साधनको ब्याट्री चार्ज गर्न नसक्नु, ठूला तथा साना विद्युतीय सवारी साधन सञ्चालन हुन सक्ने स्थानहरूमा चार्जिङ स्टेसनको लागि उपयुक्त स्थान तथा विद्युत् आपूर्तिको उचित व्यवस्था हुन नसक्नु, टेम्पोको चार्जिङ स्टेसनबाहेक हाल अन्य विद्युतीय सवारी साधनको लागि चार्जिङ्ग स्टेसनको पनि अभाव रहनु, सम्बद्ध निकायबाट यससम्बन्धी प्रशिक्षणको व्यवस्था पनि हुन नसकेको र यी कुराहरूलाई उचित प्रवर्द्धन गर्नको लागि स्पष्ट नीतिको समेत अभाव रहेकोले यी समस्याको रूपमा देखिएका छन् । साथै रज्जुमार्ग निर्माणको लागि आवश्यक पर्ने एकद्वार नीतिको अभाव, भौतिक पूर्वाधारलगायत जग्गा प्राप्तिमा समेत समस्या रहेको छ । यसले गर्दा वातावरणमैत्री सवारी तथा यातायातका साधनको सेवा र उद्योग एवम् व्यवसायमा नै प्रत्यक्ष रूपमा असर पारेको छ । यसको प्रोत्साहनको लागि पर्याप्त नीति तर्जुमा गर्न नसकिएको कारणले वातावरणमैत्री सवारी तथा यातायातको विकास, प्रोत्साहन र प्रवर्द्धन हुन सकेको छैन ।

विद्यमान अवस्थामा हालको प्रविधिले वातावरणमैत्री सवारी तथा यातायात अत्याधिक महङ्गो ब्याट्री, चार्जर सवारी साधन/पार्टपुर्जा आयात गर्न अस्वस्थ प्रतिस्पर्धा हुने अवस्था, ब्याट्री र इन्धन वा ब्याट्री र ग्यासलाई समिश्रण गरी इन्धन कम गरी सस्तो बनाउने प्रविधि पनि पूर्ण विकास हुन नसकेको,

विद्युत् उत्पादनको अवस्था कमजोर रहेकोले विद्युत् सङ्कट व्यापक भएकोले सञ्चालित विद्युतीय यातायातको गुणस्तरमा वृद्धि, उत्पादनमा उद्यमीलाई आकर्षण तथा आम जनमानसमा विद्युतीय सवारी साधनप्रतिको सकरात्मक दृष्टिकोणमा वृद्धि गर्नु चुनौतीको रूपमा रहेको छ । समय समयमा विद्युतीय सवारी साधनलाई दिइँदै आएको सुविधाहरू निरन्तरता नहुनु, दिइएको सुविधा पनि सहज रूपमा उपलब्ध हुन नसक्नु, दुई तथा तीन पाङग्रेलगायत विद्युतीय सवारी साधनको हकमा छुट्टै वर्गीकरण, मापदण्ड निर्धारण गर्ने संयन्त्र नहुनु, दर्ता प्रक्रियामा उपयुक्त व्यवस्था हुन नसक्नु, वातावरणमैत्री सवारी तथा यातायातका साधानको सञ्चालनका लागि छुट्टै रुटको व्यवस्था गर्न नसक्नु, भएकालाई पनि प्रभावकारी रूपमा कार्यान्वयन गर्न नसक्नु, यातायात क्षेत्रमा अदृश्य रूपमा सिन्डिकेट प्रणालीको निर्मुल हुन नसकेको, अस्वच्छ ढङ्गबाट बोलवालाको मात्र रुट एकाधिकार हुनु, सडकको प्रकृति तथा सवारीको गति र भार क्षमताअनुसारको सडकको वर्गीकरण र सोअनुसारको सवारी साधनको रुट नछुट्याउनु, सडकको क्षमता र जनधनत्त्वअनुसारको आवश्यक पर्ने सवारी साधनको सङ्ख्या यकिन गरी वैज्ञानिक ढङ्गबाट रुट दिने व्यवस्था नहुनु । प्रदुर्षण तथा जाच पास, फिटनेस प्रभावकारी नहुनु । सवारी तथा यातायात व्यवस्था ऐन तथा नियमावली समयानुकूल सुधार तथा परिमार्जन हुन नसक्नु, सवारी साधन आयाततर्फ मात्र ध्यान दिनु र त्यसमा पनि भौगोलिक अवस्थितिको आधारमा उपयुक्त हुने खालको नहुनु । स्वदेशमा उत्पादन तथा सञ्चालन तर्फ कुनै ध्यान नदिनु तथा ब्याट्रीलगायत अन्य पार्टपूर्जा यन्त्र वा उपकरण आदिको आपूर्ति र व्यवस्थापनको लागि राष्ट्रियस्तरबाट प्रयास नहुनु चुनौतीको रूपमै रहेको छ ।

### ६. नयाँ नीतिको आवश्यकता

वातावरणमैत्री सवारी तथा यातायातका साधनको उत्पादन, आयात, दर्ता तथा सञ्चालनमा रहेका विभिन्न समस्या तथा चुनौतीको सामना गर्न हाल चालिएका प्रयासहरूलाई सफल पार्न, राष्ट्रिय स्रोत र साधनको यथोचित उपयोग गरी राष्ट्रलाई आत्मनिर्भर बनाउन र राष्ट्रिय यातायात नीति २०५८ ले नसमेटेका विषयहरूलाई समेत समेटी उपयुक्त वातावरणमैत्री सवारी तथा यातायातका साधनको विविध पक्षहरूलाई सम्बोधन गर्नका लागि देहाय बमोजिम नीतिको आवश्यक रहेको छ :

क) संस्थागत व्यवस्थाबाट वातावरणमैत्री सवारी तथा यातायातका साधनको क्षमता अभिवृद्धि, प्रविधि विकास र प्रवर्द्धनमा जोड दिन

ख) देशको आवश्यकता र अर्थतन्त्रको गतिशीलताको लागि उपयुक्त

हुने खालका वातावरणमैत्री विद्युतीयलगायत सौर्य ऊर्जा, वायुऊर्जा, जैविकऊर्जा, बायोमासऊर्जा, फ्युलसेल, ग्यास आदि कम इन्धन खपत तथा कम प्रदूषण हुने ग्यास हाइब्रिड जस्ता वैकल्पिक वा नवीकरणीय ऊर्जालाई यातायात क्षेत्रमा उपयोग तथा देशको भौगालिक अवस्थितिको आधारमा उपयुक्त हुने वातावरणमैत्री सवारी तथा यातायातका साधनको सञ्चालन, विकास र विस्तार एवं राष्ट्रिय उत्पादनलाई प्राथमिकता, प्रोत्साहन, प्रवर्द्धन र संरक्षण गर्न,

ग) वातावरणमैत्री सवारी तथा यातायातका साधनको विकासको लागि आवश्यक भौतिक तथा प्राविधिक पूर्वाधार एवं कानुनी व्यवस्थाको निर्माण गर्न,

घ) खनिज इन्धनबाट सञ्चालित सवारी साधनलाई वातावरणमैत्री सवारी तथा यातायातका साधनमा रूपान्तरणको लागि यसलाई आवश्यकता पर्ने कानुनी, प्राविधिक तथा भौतिक पूर्वाधारको व्यवस्था गरी वातावरणमैत्री सवारी तथा यातायातका साधनको विकास एवं विस्तारको लागि प्रोत्साहन गरी उत्पादन र सञ्चालनमा जोड दिन,

ङ) जलवायु परिवर्तनको सन्दर्भमा विश्व उष्णीकरण (विश्वव्यापी तापक्रममा वृद्धि) हरितगृह ग्यासहरू तथा हानिकारक कणजन्य तत्व (Particulate Mater) उत्सर्जन गरिएको कार्यमा यातायात क्षेत्रबाट वातावरणमा हुने नकारात्मक असरलाई न्यूनीकरण गर्न वातावरणमैत्री सवारी तथा यातायातका साधनहरूबाट कार्बन उत्सर्जनमा न्यूनीकर ण गराउन र कार्बन व्यापारलाई बढवा दिई उपलब्ध चुनौती र अवसरको उपयोग गरी गरिबी न्यूनीकरण तथा दिगो आर्थिक विकास लक्ष्य पूरा गर्दै हरित विकासमा योगदान गर्न,

च) वातावरणमैत्री सवारी तथा यातायातको साधनको विकास र यसका राष्ट्रिय उत्पादनलाई प्रोत्साहन गरी अल्पकालीन, मध्यकालीन र दीर्घकालीन लक्ष्य र उद्देश्यसहित नीतिगत तथा कानुनी व्यवस्था गर्ने ।

## ७. वातावरणमैत्री सवारी तथा यातायात नीतिको दूरदृष्टि परिदृष्टि, लक्ष्य तथा उद्देश्य

वातावरणमैत्री सवारी तथा यातायात नीतिको दूरदृष्टि परिदृष्टि, लक्ष्य तथा उद्देश्य देहायबमोजिम रहेका छन् :

७.१ दूरदृष्टि (Vision)

सबैको आवतजावत गर्न पाउने मौलिक अधिकारको संरक्षण र अर्थतन्त्रको गतिशीलताको लागि नेपाल राज्यभरि सुरक्षित, सुविधायुक्त, सुलभ र भरपर्दो वातावरणमैत्री सवारी तथा यातायात सेवाको उच्चतम उपयोग गरी देशको दिगो आर्थिक, सामाजिक तथा वातावरणीय विकास हासिल गर्ने ।

७.२ परिदृष्टि (Mission)

राष्ट्रको दिगो सामाजिक, आर्थिक तथा वातावरणीय विकासको लागि यातायात क्षेत्रमा विद्युतीयलगायत नवीकरणीय वा वैकल्पिक ऊर्जाको अधिकतम उपयोग गरी वातावरणमैत्री सवारी तथा यातायातका साधनको तीव्र विकास र विस्तार उपयोग नियमन र व्यवस्थापन सुनिश्चित गर्ने ।

७.३ लक्ष्य (Goal)

७.३.१ राष्ट्रिय उत्पादनलाई प्रोत्साहन गरी विद्युतीयलगायत नवीकरणीय वा वैकल्पिक ऊर्जाबाट सञ्चालन हुने वातावरणमैत्री सवारी तथा यातायातको साधनको विकास र विस्तारमा जोड दिने,

७.३.२ स्वच्छ तथा सफा वातावरण बनाई हरित शहरको विकासको लागि विद्युतीयलगायत नवीकरणीय वा वैकल्पिक ऊर्जाबाट सञ्चालन हुने वातावरणमैत्री सवारी तथा यातायातका साधनको पूर्वाधार विकासलाई प्राथमिकता दिने,

७.३.३ वातावरणमैत्री सवारी तथा यातायातका साधनको उद्योग, व्यवसाय तथा प्रविधिलाई प्रवर्द्धन गरी अर्थतन्त्रमा राष्ट्रिय विकासका आधारहरू निर्माण गर्ने,

७.३.४ देशमा उपलब्ध स्रोत साधन र प्रविधिको समुचित उपयोग गरी खनिज इन्धनबाट सञ्चालित सवारी साधनलाई वातावरणमैत्री सवारी तथा यातायातका साधनमा रूपान्तरण गरी वातावरणमैत्री सवारी तथा यातायातका रूपमा सञ्चालनमा ल्याउने,

७.३.५ देशको दिगो, आर्थिक तथा सामाजिक विकासमा योगदान पुऱ्याई स्वदेशमै रोजगारीको अवसर सिर्जना गर्ने,

७.३.६ वातावरणमैत्री सवारी तथा यातायातका साधनको अधिकतम प्रयोग मार्फत खनिजजन्य इन्धनको प्रयोग एवं सवारी

उत्सर्जन (Vehicle Emission) बाट हुने विश्व उष्णीकरण, हरितगृह ग्यासहरू तथा हानीकारक कणजन्य तत्व कार्बन उत्सर्जनमा कमी ल्याई वायु प्रदूषणलाई न्यूनीकरण गरी वातावरण संरक्षणमा योगदान पु¥याउने ।

७.३.७ वि.सं. २००७ (सन् २०२०) सम्ममा समग्र सवारी तथा यातायातको साधनको कम्तीमा २० प्रतिशत वातारणमैत्री सवारी तथा यातायातका साधनहरूलाई सञ्चालनमा ल्याइने व्यवस्था गर्ने ।

## ७.४ उद्देश्य (Objective)

७.४.१ वातावरणमैत्री सवारी तथा यातायातका साधनको सुरक्षित सुविधायुक्त, सुलभ, भरपर्दो सञ्चालन, विकास विस्तार राष्ट्रिय उत्पादनलाई प्राथमिकता दिई प्रोत्साहन एवं प्रवर्द्धन गर्ने,

७.४.२ देशको आवश्यकता र अर्थतन्त्रको गतिशीलताको लागि उपयुक्त हुने खालका वातावरणमैत्री विद्युतीय कम इन्धन खपत हुने, हाइब्रिड, कम प्रदूषण हुने ग्यासलगायत वैकल्पिक वा नवीकरणीय ऊर्जालाई उपयोग तथा देशको भौगोलिक अवस्थितिको आधारमा उपयुक्त हुने वातावरणमैत्री विद्युतीयलगायत वैकल्पिक वा नवीकरणीय ऊर्जाबाट सञ्चालन हुने यातायातको साधनहरूमा रूपान्तरण, उत्पादन तथा सञ्चालनमा प्रोत्साहन तथा प्रवर्द्धन गरी विकास र विस्तार गर्न आवश्यक भौतिक पूर्वाधार निर्माण र आवश्यक कानुनी व्यवस्था गर्ने,

७.४.३ खनिजजन्य इन्धनको प्रयोग हुने यातायातका साधनमा कमी ल्याई वातावरणमैत्री यातायातका साधनहरूको उपयोग बढाई वायु प्रदूषणलाई न्यूनीकरण गर्दै दिगो वातावरण संरक्षणमा योगदान पु¥याउने,

७.४.४ वातावरणमैत्री सवारी तथा यातायातसँग सम्बन्धित उद्योग व्यवसायको विकास र प्रवर्द्धन गरी स्वदेशमै प्रविधि विकास तथा रोजगारीको अवसरहरू अभिवृद्धि गर्ने ।

## ८. नीति (Policy)

८.१ वातावरणमैत्री सवारी तथा यातायातका साधनको विकासका लागि आवश्यक कानुनी तथा भौतिक एवं प्राविधिक पूर्वाधारको निर्माण गरिनेछ ।

८.२ वातावरणमैत्री सवारी तथा यातायातका साधनको सञ्चालन, विकास र विस्तार गरी राष्ट्रिय उत्पादनलाई प्राथमिकता दिई यस क्षेत्रको समग्र विकासलाई प्रोत्साहन तथा संरक्षण गरिनेछ ।

८.३ सरकारी तथा गैरसरकारी सङ्घ संस्था, कूटनैतिक नियोग, व्यक्ति विशेषद्वारा प्रयोग भइरहेका सञ्चालनमा रहेका तर मर्मत खर्च बढी लाग्ने खालका विभिन्न कारणले सञ्चालनमा नरहेका वा लिलाम गर्नुपर्ने वा अन्य कुनै कारणले बिक्री वितरण हुने सवारी साधनलाई प्राविधिक रूपले सम्भव भएसम्म विद्युतीय सवारी साधनमा रूपान्तरण गरी सञ्चालनमा ल्याउन प्रोत्साहन गर्ने व्यवस्था गरिनेछ । साथै सरकारी तथा गैरसरकारी सङ्घ संस्था, कूटनैतिक नियोग आदिमा सवारी साधनहरू खरिद गर्दा स्वदेशमा उत्पादित तथा रूपान्तरित वातावरणमैत्री सवारी तथा यातायातको साधनलाई प्राथमिकतामा राखी वातावरणमैत्री सवारी तथा यातायातका साधनमा खरिद गर्नुपर्ने अनिवार्य व्यवस्था मिलाई क्रमशः तीव्र रूपमा वृद्धि गर्दै लगिनेछ ।

८.४ वातावरणमैत्री सवारी तथा यातायातका साधनको उत्पादन, सञ्चालन तथा स्वदेशी उद्योग व्यवसायको संरक्षण, प्रवर्द्धन एवं विकासको लागि केन्द्रीयस्तरमा एउटा केन्द्रीय वातावरणमैत्री सवारी तथा यातायात सञ्चालन समिति, एउटा वातावरणमैत्री सवारी तथा यातायात कार्य समिति तथा स्थानीय स्तरमा आवश्यकताअनुसार वातावरणमैत्री सवारी तथा यातायात व्यवस्थापन समिति गठन गरिनेछ ।

८.५ वातावरणमैत्री सवारी तथा यातायातका साधनको दर्ता, अभिलेख, नियन्त्रण, नियमन कार्यको लागि भौतिक पूर्वाधार तथा यातायात मन्त्रालय वा अन्तर्गत स्थायी सङ्गठनका रूपमा कार्यालय स्थापना गरिनेछ ।

८.६ भौतिक पूर्वाधार तथा यातायात मन्त्रालय वा अन्तर्गत वातावरणमैत्री सवारी तथा यातायात

साधनको विकासका लागि अध्ययन, अनुसन्धान, परीक्षण र यस प्रकारका साधन तथा स्वदेशी उद्योग व्यवसायको स्तर उन्नति संरक्षण तथा प्रवर्द्धन विस्तार एवं दक्ष जनशक्ति विकास परिचालन योजना र पूर्वाधार विकास आदिको वातावरणमैत्री सवारी तथा यातायात विकास कोष स्थापना गरिनेछ ।

८.७ वातावरणमैत्री सवारी तथा यातायात प्रणालीको विकासका लागि स्वदेशमा रूपान्तरित तथा उत्पादित सवारी साधनलाई प्राथमिकता राखी यस प्रकारका सवारी साधनहरूलाई मात्र विशेष स्थान तोकी वैज्ञानिक रुट व्यवस्थापन गरी सार्वजनिक यातायातको रूपमा सञ्चालनमा ल्याइनेछ । हाल भएका प्रदूषणयुक्त र प्रदूषणरहित तथा गतिअनुसारको यातायातका साधनहरूलाई छुट्टाछुट्टै वैज्ञानिक रुटहरूको व्यवस्थापन गरी सञ्चालनमा ल्याइनेछ ।

८.८ नेपाल सरकारले तोकेअनुसारका प्रदूषणयुक्त र प्रदूषणरहित वस्तुहरू छुट्याई कुनै पनि हानिकारक र प्रदूषणयुक्त वस्तुहरूको उचित वातावरणमैत्री व्यवस्थापन गरिनेछ ।

८.९ सौर्य ऊर्जा, फ्युल सेल (Fuel Cell) जस्ता नवीकरणीय वा वैकल्पिक ऊर्जाबाट सञ्चालन हुने सवारी साधन प्रवर्द्धन, विकास, विस्तार र परीक्षणको लागि उपयुक्त वातावरणको सिर्जना गरिनेछ । त्यस्ता नवीकरणीय ऊर्जा (Hydrogen Fuel Cell) जस्ता वातावरणमैत्री सवारी तथा यातायातका साधनको अनुसन्धान तथा विकास गर्न निजी, सहकारी, सार्वजनिक र साझेदारी संस्थालाई सुविधा सहुलियत दिने व्यवस्था गरिनेछ ।

## ९. रणनीति र कार्यनीतिः

यस नीतिलाई कार्यान्वयन गर्नका लागि देहायबमोजिमको रणनीति र कार्यनीति अवलम्बन गरिनेछ :

९.१ वातावरणमैत्री सवारी तथा यातायातका साधनको विकास र उत्पादनलाई प्राथमिकता : वातावरणमैत्री सवारी तथा यातायातका साधनको तथा यातायातका साधनको सञ्चालन, विकास र विस्तार गरी राष्ट्रिय उत्पादनलाई प्राथमिकता दिई यस क्षेत्रको समग्र विकासलाई प्रोत्साहन, संरक्षण तथा प्रवर्द्धन

गर्ने नीति कार्यान्वयन गर्न देहयाअनुसारको रणनीति र कार्यनीति अवलम्बन गरिनेछ ।

९.१.१ वातावरणमैत्री सवारी तथा यातायातका साधनको राष्ट्रिय उत्पादनलाई प्राथमिकता दिई यस क्षेत्रको समग्र विकासलाई प्रोत्साहन, संरक्षण तथा प्रवर्द्धन गरिने छ ।

९.१.२ नेपाल सरकार तथा सरकारी स्वामित्वका निकाय, सङ्घ संस्थाहरूले सवारी साधन खरिद गर्दा स्वदेशमा उत्पादितलाई प्राथमिकता राखी वातावरणमैत्री सवारी तथा यातायातका साधनलाई तीव्र वृद्धि गर्दै वि.सं. २०७७ (सन् २०२०) सम्ममा समग्र सवारी साधनहरूको सङ्ख्यामा २० प्रतिशतभन्दा बढी सङ्ख्यामा वातावरणमैत्री सवारी तथा यातायातका साधनहरूको सञ्चालन हुने व्यवस्था गरिनेछ ।

९.१.३ प्रचलित अर्थसँग सम्बन्धित कानुनहरू (आयकर ऐन, २०५८, भन्सार ऐन, २०६४, मूल्य अभिवृद्धि कर ऐन, २०५२, अन्त शुल्क ऐन, २०५८, आर्थिक ऐन आदि) मा नै छुट तथा थप व्यवस्था गरी स्वदेशमा उत्पादित, रूपान्तरित तथा सञ्चालित वातावरणमैत्री सवारी तथा यातायातका साधनको उत्पादन, रूपान्तरण तथा सञ्चालन गर्ने उद्योग वा व्यवसायलाई प्रोत्साहन, संरक्षण, प्रवर्द्धन गरी वातावरणमैत्री सवारी तथा यातायात सञ्चालन प्रणालीको विकास गर्ने र वातावरणमैत्री सवारी तथा यातायातका साधनलाई थप प्रतिस्पर्धी बनाई अधिकतम प्रयोग गर्ने नीति अवलम्बन गरिनेछ ।

९.१.४ वातावरणमैत्री विद्युतीय दुई पाङ्ग्रे सवारी साधनलाई साइकल र मोटरसाइकलमा ३ पाङ्ग्रे विद्युतीय सवारी साधनलाई रिक्सा र टेम्पो वा ट्राइसाइकलमा वर्गीकरण गर्ने र शारीरिक रूपले भिन्न क्षमता राख्ने व्यक्तिले चलाउने तीन पाङग्रे सवारी साधनहरूसमेतको वर्गीकरण गरी नियमन गरिने र यस्ता सवारी साधनलाई प्रवर्द्धन र संरक्षणको लागि आवश्यक व्यवस्था गरिनेछ ।

९.१.५ स्वदेशमा उत्पादित वातावरणमैत्री विद्युतीय (साइकल, मोटरसाइकल, स्कुटर, रिक्सा, ट्राइसाइकल, टेम्पो, ट्याक्सी, कार, माइक्रोबस आदि) लाई प्राथमिकता दिँदै वातावरणमैत्री सवारी तथा यातायातका साधनको लागि छुट्टै परीक्षण गरी दर्ता तथा सञ्चालनसहित नियमन प्रक्रिया सहज गरी

रोजगारी अभिवृद्धिको वातावरण सिर्जना गरिनेछ ।

९.१.६ वातावरणमैत्री सवारी तथा यातायातका साधनमा लगानी गर्न निजी क्षेत्रलाई प्रोत्साहन गर्नुको साथै सरकारी, साझेदारी सार्वजनिक सहकारी र निजी एवं संयुक्त लगानीका उद्योग व्यवसाय सञ्चालन गर्ने वातावरण निर्माण गरिनेछ ।

९.१.७ वातावरणमैत्री सवारी तथा यातायातका साधनको विकासका लागि उत्पादन, सञ्चालन गर्ने व्यक्ति, फर्म, कम्पनी, सहकारी उद्योग वा व्यवसायलाई प्राथमिकता प्राप्त क्षेत्रमा राखी बैंक एवं वित्तीय संस्थाहरूबाट आवश्यक ऋण सुविधा प्रदान गर्ने व्यवस्था मिलाइनेछ ।

९.१.८ वातावरणमैत्री सवारी तथा यातायातका साधनमा दिएको सुविधाको उपयोगको अवस्थाको अनुगमन, नियमन, निरीक्षण प्रक्रियालाई व्यवस्थित, व्यवहारिक र प्रभावकारी बनाइनेछ ।

९.१.९ पर्यटकीय, धार्मिक, सांस्कृतिक तथा ऐतिहासिक स्थलहरूको संरक्षण तथा संवर्द्धनको लागि वातावरणमैत्री सवारी तथा यातायात साधनहरूको सार्वजनिक यातायातमा सञ्चालन गर्न जोड दिइ पर्यटन विकासलाई बढावा दिइनेछ ।

९.१.१० विद्युतीय सोलार, ग्यास, हाइब्रिड आदि स्वच्छ ऊर्जाबाट सञ्चालन हुने वातावरणमैत्री सवारी तथा यातायातका साधनको स्वदेशमै उत्पादन गर्न एसेम्बल उद्योगहरूलाई प्रोत्साहन गरी विद्युत् ब्याट्री, सोलार, ग्यासलगायतबाट ग्यास विद्युत् वा इन्धन, विद्युत्, सम्मिलित हाइब्रिड सवारी वातावरणमैत्री सवारी तथा यातायातका साधनको एसेम्बलीङमार्फत एसेम्बलिङ उद्योग दर्ता गरी स्वदेशमै नयाँ प्रकृतिको वातावरणमैत्री सवारी साधनलाई प्रोत्साहन तथा प्रवर्द्धन गरिने व्यवस्था मिलाइनेछ। यस्ता प्रकारबाट सञ्चालनमा आउने सवारी वातावरणमैत्री सवारी तथा यातायातका साधनलाई प्रोत्साहन गर्न सहज एवं सरल तरिकाबाट दर्ता एवं रुट परमिट प्राप्त गर्ने व्यवस्था गरिनेछ ।

९.१.११ स्वदेशमा जडित वा रूपान्तरित वा उत्पादित वातावरणमैत्री सार्वजनिक यातायातका साधनहरूको सञ्चालनमा आउने सवारी तथा यातायातका साधनलाई प्रोत्साहन गर्न एवं सरल तरिकाबाट रुट परमिट तथा रुट व्यवस्थापनलगायतका

नियमनका सरल उपायहरू गरिनेछ। यस्ता सवारी साधनको सञ्चालन निजी, साझेदारी, सहकारी र सरकारी क्षेत्र सबैको लागि प्रोत्साहन गरिनेछ । काठमाडौं उपत्यकाभित्र सुरुमा केही स्थानहरूमा नमुनाको रूपमा नेपालमा बनेका वातावरणमैत्री सवारी तथा यातायातका साधनलाई मात्र रुट नम्बरहरू वैज्ञानिक तवरबाट तोकी यस्ता सवारी साधनहरूलाई मात्र सञ्चालनको व्यवस्था मिलाइनेछ र यस्तो कार्यलाई क्रमश वृद्धि गर्दै काठमाडौं बाहिर पनि विस्तार गरिनेछ ।

९.१.१२ सडकको प्रकृति तथा सवारीको गति र भार क्षमताअनुसार सडकको वर्गीकरण र सोअनुसारको सवारी निर्धारण गरी सवारी सङ्ख्या र समय यकिन गरी प्रत्येक वर्ष कुन अनुपातमा वृद्धि गर्ने हो सो व्यवस्था गरी, स्थानीय छोटो, मध्यम र लामो दुरीमा सानो तथा मझौला सवारी साधनहरू तीन पाङ्ग्रे रिक्सा, टेम्पो, चार पाङ्ग्रे (ट्याक्सी, माइक्रोबस, मिनिबसलगायत मालबाहकसमेत आदि) एवं ठूला बस तथा ट्रलीबस तथा ट्रलीबसलगायत सघन यातायात (Mass Transport) समेतका वातावरणमैत्री सवारी तथा यातायातका साधनलाई प्राथमिकतामा राखी सार्वजनिक यातायात सञ्चालन गर्न जोड दिइनेछ ।

९.१.१३ प्रचलित कानूनको प्रतिकूल हुने गरी यातायात सेवा सञ्चालक, व्यावसायी, सङ्घ संस्था तथा सोसँग सम्बन्धित व्यक्तिसमेतलाई कारबाही गरिनेछ र स्वच्छ प्रतिस्पर्धी रूपमा उत्कृष्ट सेवा सञ्चालन गर्नेलाई पुरस्कृत र प्रोत्साहन गरिनेछ। साथै वातावरणमैत्री सवारी तथा यातायातका साधनलगायत सघन यातायात (Mass Transport) लाई नीजि, सहकारी, सार्वजनिक वा साझेदारी वा वैदेशिक लगानीमा निमार्ण-सञ्चालन-हस्तान्तरण (BOT), निर्माण स्वामित्व-सञ्चालन -हस्तान्तरण (BOOT) प्रणालीमा सञ्चालन गर्नेलाई प्रोत्साहन, कर छुटको व्यवस्था गरिनेछ ।

९.२ आवश्यक पूर्वाधार निर्माण :-

वातावरणमैत्री सवारी तथा यातायातका साधनको विकासका लागि आवश्यक पूर्वाधार निर्माणलाई प्राथमिकताका साथ यस क्षेत्रको समग्र विकासलाई प्रोत्साहन तथा प्रवर्द्धन

गर्ने नीति कार्यान्वयन गर्न देहायबमोजिमको रणनीति र कार्यनीति अवलम्बन गरिनेछ :

९.२.१ सरकारी, निजी तथा साझेदारी, सहकारी आदिको लगानीमा सरकारले उपयुक्त स्थानहरूमा रज्जुमार्ग र चार्जिङ्ग स्टेसनको प्रायोजनको लागि आवश्यक पर्ने जग्गालगायतका भौतिक पूर्वाधारको व्यवस्था गरी रज्जुमार्ग तथा चार्जिङ्ग स्टेसन सञ्चालन गर्न प्रोत्साहन गरिनेछ ।

९.२.२ वातावरणमैत्री सवारी तथा यातायातका साधनको उत्पादन तथा रूपान्तरण र सञ्चालन गर्ने उद्योग, रज्जुमार्ग, चार्जिङ स्टेसनमा नियमित विद्युत् उपलब्ध गराउन सम्भव भएको क्षेत्रमा दोहोरो फिडरको व्यवस्था मिलाई विद्युत् पिकलोडको समयबाहेक राती खेरजाने बिजुलीको उपयोग बढ्ने हुँदा यस्ता उद्योग तथा चार्जिङ स्टेसनहरूलाई सहुलियत दरमा विद्युत् उपलब्ध गराउने व्यवस्था मिलाइनेछ ।

९.२.३ विद्युतीय सवारी साधनको पार्किङ तथा मर्मत सम्भार केन्द्रको उचित व्यवस्थापनको लागि निजी लगानी आकर्षित गर्न प्रोत्साहन गर्ने व्यवस्था गरिनेछ । साथै सौर्य ऊर्जासमेतबाट चार्जिङ्गको पूर्वाधारसहित पार्किङ्ग स्थानको निर्माण गर्न निजी क्षेत्रलाई प्रोत्साहन गरिनेछ ।

९.२.४ काठमाडौं उपत्यकामा रिङरोड वरिपरि नमुना योजना (पाइलट प्रोजेक्ट) को रूपमा कम्तीमा १० वटा स्थानमा नेपाल सरकारले उपयुक्त क्षेत्रहरू सहुलियतमा लिजमा उपलब्ध गराई चार्जिङ्ग स्टेसनको अवधारणालाई प्रोत्सहन गर्ने, सपिङ सेन्टर, सपिङ महल, होटाल तथा ठूला फार्किङ क्षेत्रमा पार्किङ शुल्कमा सहुलियत एवं चार्जिङ गर्न पाउने व्यवस्था मिलाइनेछ । चार्जिङ्ग स्टेसनको विद्युत् खपतको मिटर जाँचलाई व्यावहारिक र प्रभावकारी बनाई सवारी साधन चार्ज गर्दा लागेको विद्युत् शुल्क र सेवा शुल्क सहुलियत दरमा उपलब्ध गराउने व्यवस्था गरिनेछ ।

९.२.५ वातावरणमैत्री सवारी साधनमा प्रयोग हुने ब्याट्री चार्जर, मोटर कन्टोलर, च्यासिसलगायत अन्य पार्टपूर्जा उपकरणको उचित आपूर्ति र व्यवस्थापन तथा पहुँच सरल र सहज बनाइनेछ । ब्याट्रीलाई प्रदूषणयुक्त र प्रदूषणरहित छुट्याई वातावरण मैत्री व्यवस्थापनको लागि अल्पकालीन,

दीर्घकालीन योजना तथा कार्यक्रम बनाई भविष्यमा निजी, साझेदारी, सहकारी, सरकारी तवरबाट राष्ट्रियस्तरको ब्याट्री पुनः चक्रण (रिसाइकल) केन्द्र वा उद्योग स्थापना गरी व्यवस्थित बनाइनेछ । प्रदूषण कम गर्न प्रयोगपश्चात् रिसाइकल गर्ने व्यवस्था मिलाइने छ। सो व्यवस्था नहुन्जेल सम्मलाई अल्पकालीन उपायहरू गरिनेछ। रिसाइक्लिन केन्द्र वा उद्योगलाई अन्य वातावरणमैत्री उद्योगसरह सहुलियत दिने र प्रत्येक रिसाइक्लिन गर्दा यसबाट राष्ट्रिय पुँजीमा पर्ने सकारात्मक असरलाई विचार गरी ब्याट्रीमा लाग्ने करबाट प्रदूषण कर छुट्याई वा "Polluter Pay Principle" का आधारमा प्रदुषकले तिर्ने रकम वातावरणमैत्री सवारी तथा यातायात विकास कोषमा जम्मा गरिनेछ र त्यसबाट अनुदान दिने व्यवस्था मिलाइनेछ ।

९.२.६ वातवाणमैत्री सवारी तथा यातायातको साधन र सोमा प्रयोग हुने पार्टपूर्जा उत्पादन गर्ने स्वदेशी उद्योगलाई प्रोत्साहन, संरक्षण र प्रवर्द्धन गरी विकास गरिनेछ ।

९.२.७ देशको आवश्यकता र अर्थतन्त्रको गतिशीलताको लागि निजी, साझेदारी, सहकारी, सार्वजनिक सरकारी क्षेत्रको निजी वा संयुक्त लगानीमा काठमाडौं उपत्यकालगायत देशका अन्य क्षेत्रमा सम्भाव्यता हेरी विद्युतीय सोलार ग्यास फ्युल सेल हाइब्रिड आदि कम इन्धन खपत र कम प्रदूषण गर्ने साइकल, मोटर साइकल, स्कुटर, रिक्सा, ट्राइसाइकल, टेम्पो, ट्याक्सी, माइक्रोबस, मिनिबस, बस, ट्राम, ट्रलीबस, रज्जुमार्ग, विद्युतीय रेललगायत मालबाहक सवारी साधन आदिको पूर्वाधार विकास गरी सञ्चालन गर्न जोड दिइनेछ ।

९.२.८ दिगो विकास र वातावरणमैत्री अवधारणालाई अङ्गीकार गर्न काठमाडौं उपत्यकालगायत अन्य शहरमा सडकहरूमा समेत साइकल र विद्युतीय साइकलका लागि छुट्टै लेन बनाई साइकलमैत्री वातावरणीय नमुना शहर निर्माणलाई प्राथमिकता दिइनेछ ।

९.२.९ नेपाल सरकारले उपयुक्त ठानेका निश्चित क्षेत्रहरू छुट्याई वातावरणमैत्री सार्वजनिक यातायात सेवाको लागि मात्र रुटहरू व्यवस्थापन गरी क्रमशः वृद्धि गरी तथा सञ्चालनमा

ल्याउने व्यवस्था मिलाइनेछ । यस्तो व्यवस्था देशका सबै ठाउँमा क्रमशः वृद्धि गरिने छ ।

९.२.१० वातावरणमैत्री यातायातसँग सम्बन्धित उद्योग तथा व्यवसायको लागि आवश्यक पर्ने जनशक्ति (इलेक्ट्रिसियन, मिस्त्री, चालक, परिचालक, इलेक्ट्रिकल र मेकानिकल इन्जिनियर आदि) प्रशस्त्र भए पनि वृतिविकास, दक्षता अभिवृद्धि, विशेष तालिम, सीप प्रशिक्षण आदिको व्यवस्था मिलाई गुणस्तर विकास गरी उद्योग तथा व्यवसायलाई उकास्नको लागि सहयोग पुऱ्याउन निजी, साझेदारी, सहकारी, सरकारी तवरबाट समय-समयमा व्यवस्थ मिलाइने छ ।

९.३ वातावरणमैत्री सवारी साधनमा रूपान्तरणः

खनिज इन्धनबाट सञ्चालित सवारी साधनलाई विद्युत्बाट तथा नवीकरणीय वा वैकल्पिक ऊर्जाबाट चल्ने सवारी साधनमा रूपान्तरण गर्न प्रोत्साहन एवं आवश्यक कानुनी तथा प्राविधिक व्यवस्था गरी वातावरणमैत्री सवारी तथा यातायातका साधनको उत्पादन, सञ्चालन, विकास र विस्तार एवं प्रवर्द्धनमा जोड दिन देहायअनुसारको रणनीति र कार्यनीति अवलम्बन गरिनेछ :

९.३.१ प्रचलित कानुनबमोजिम दर्ता भएका प्रदूषण बढी हुने, मर्मत खर्च बढी लाग्ने यातायातका सवारी साधनलाई वातावरणमैत्री सवारी तथा यातायातका साधनमा रूपान्तरण गरी प्रोत्साहन, प्रवर्द्धन, संरक्षण र विकास गरी अनावश्यक ढङ्गबाट आयात हुने यातायातका साधनलाई निरुत्साहित गरिनेछ ।

९.३.२ सरकारी कार्यालयबाट लिलाम हुने सवारीलाई लिलाम नगरी विद्युतीय सवारीमा रूपान्तरण गरी सञ्चालनमा ल्याउन प्रोत्साहन गरिनेछ । यसका लागि सरकारी कार्यालयमा लामो समय चालू नरहेको सवारीलाई विद्युतीय सवारीमा रूपान्तरण गर्ने व्यवस्था मिलाइनेछ । प्राविधिक रूपले विद्युतीय सवारीमा रूपान्तरण हुन नसक्ने भएमा मात्र लिलाम गर्नुपर्ने व्यवस्था मिलाइनेछ ।

९.३.३. पुराना सवारी साधनहरूलाई विस्थापन गर्नुपर्दा वातावरणमैत्री सवारीमा रूपान्तरण गर्न प्राविधिक रूपले सम्भव भएसम्म विद्युतीयलगायत वातावरणमैत्री सवारीमा रूपान्तरण गर्न

प्रोत्साहन गरिनेछ ।

९.३.४ विभिन्न कारणले सञ्चालन गर्न कठिनाइ भएका सवारी साधनहरू, मोडल परिवर्तनका कारण बन्द हुने अवस्थाका सवारी साधनहरू, उत्पादक कम्पनी बन्द हुनाले समस्यामा परेका सवारी साधनहरू र अन्य कारणबाट इन्जिनलगायतका पार्ट्स अभाव भै बन्द गर्नुपर्ने सवारी साधनहरूलाई विद्युतीय सवारी साधनमा रूपान्तरण गरी सञ्चालन गर्न प्रोत्साहन गरिनेछ ।

९.३.५ प्रचलित कानुनबमोजिम दर्ता भैसकेका सवारी तथा यातायातका साधनलाई वातावरणमैत्री सवारी तथा यातायातका साधनमा रूपान्तरण गर्न उपयुक्तताका आधारमा प्रकृया पूरा गरी स्वीकृति दिने व्यवस्था गरिनेछ ।

९.३.६ उपत्यकाबाट विस्थापित डिजेल वा पेट्रोलबाट सञ्चालन हुने ३ पाङ्ग्रे टेम्पोलगायतका सवारी साधनलाई नगरपालिका तथा गाउँ क्षेत्रबाट आवश्यक भएमा सहुलियत दिएर विस्थापित वा रूपान्तरण गरी त्यस स्थानमा विद्युतीय हाइब्रिड तथा ग्यासका सवारी साधन सञ्चालन गर्ने व्यवस्था गरिनेछ । प्रदूषणयुक्त यस प्रकारका अन्य सवारी साधनलाई समेत आवश्यक भएमा सहुलियत दिएर विस्थापित वा रूपान्तरण गरी वातावरणमैत्री सवारी तथा यातायातका साधनलाई प्रोत्साहन गरी सफा, स्वच्छ, हरित शहरको विकासमा जोड दिइनेछ ।

९.४ काठमाडौं उपत्यका तथा रिङ्गरोडभित्र चल्ने सार्वजनिक यातायातको साधनको निश्चित दूरी तथा रुटमा भएका अस्वस्थ अवस्था, असुविधायुक्त प्रदूषण बढी गर्ने सवारी तथा यातायातका साधनलाई क्रमशः विस्थापित वा रूपान्तरण गरी रूपान्तरित वा नयाँ वातावरणमैत्री सवारी तथा यातायातका साधनलाई प्राथमिकतामा राखी निश्चित न्यूनतमस्तरको सेवाको मापदण्ड पूरा गर्ने सवारी तथा यातायातका साधनलाई सडकको प्रकृतिअनुसार सञ्चालनमा साना, मझौला, ठूला सार्वजनिक यातायात (टेम्पो, टयाक्सी, बस आदि) को साधनलाई प्रोत्साहन गरी शहरभित्र एकरूपता कायम गर्न एकै किसिमको रङ्ग लगाउने र वातावरणमैत्री सवारी तथा यातायातको छुट्टै रुट र पहिचानसहितको रुट

नम्बर वैज्ञानिक तवरले राखी प्रदूषणमुक्त, स्वच्छ, सफा, हरित शहरको विकासमा जोड दिइनेछ र यस्तो कार्यलाई क्रमशः उपत्यकाबाहिर पनि विस्तार गरिनेछ ।

९.५ नियमन निकायको व्यवस्था

वातावरणमैत्री सवारी तथा यातायातका साधनको दर्ता, अभिलेख, नियन्त्रण, नियमन कार्यको लागि भौतिक पूर्वाधार तथा यातायात मन्त्रालयअन्तर्गत स्थायी सङ्गठनका रूपमा कार्यालय स्थापना गरिनेछ। यस कार्यालयलाई वातावरणमैत्री सवारी तथा यातायातको साधनको लागि दक्ष जनशक्ति परिचालन कार्य योजना र पूर्वाधारले व्यवस्थित गरिनेछ ।

९.६ जलवायु परिवर्तनको सन्दर्भमा विश्व उष्णीकरण, विश्वव्यापी तापक्रममा वृद्धि, हरितगृह ग्यासहरू तथा हानिकारक कणजन्य तत्व Particulate Matter उत्सर्जन गरिएको कार्यमा यातायात क्षेत्रबाट वातावरणमा हुने नकारात्मक असरलाई न्यूनीकरण गर्न वातावरणमैत्री सवारी तथा यातायात साधनहरूबाट कार्बन उत्सर्जनमा न्यूनीकरण गराई कार्बन व्यापारलाई बढावा दिई आर्थिक विकास गर्न योगदान पुऱ्याउन सम्बन्धित निकायबाट आवश्यक तादम्यता र समन्वय गरी न्यून कार्बन आर्थिक विकास रणनीति Low Carbon Economic Development Strategy बनाइने छ ।

## १०. संस्थागत संरचना

१०.१ वातावरणमैत्री सवारी तथा यातायातका साधनको विकास गरी राष्ट्रिय उत्पादनलाई प्रोत्साहन गर्न, स्वदेशी सीप र प्रविधिको प्रयोगबाट देशमा उपलब्ध हुने उत्पादनका साधन र स्रोतको समुचित व्यवस्थापन तथा उपयोगद्वारा संरक्षण एवं प्रवर्द्धन गर्दै निजी, सार्वजनिक साझेदारी, सहकारी, सरकारी र स्वदेशी तथा विदेशी लगानीलाई परिचालन गरी व्यवस्थित रूपमा औद्योगिकीकरणको प्रक्रियालाई तीव्र बनाई आवश्यक पूर्वाधार संरचनाको निर्माण तथा विकास गरी सफा शहर कार्यक्रमलाई प्रभावकारी कार्यान्वयन एवं व्यवस्थित गर्दै उत्पादन तथा रोजगारीको अवसर वृद्धि गरी आर्थिक समृद्धि हासिल गरी राष्ट्रिय अर्थतन्त्रमा सवल, गतिशील तथा प्रतिस्पर्धी, आत्मनिर्भर अर्थतन्त्र निर्माण गर्न, राष्ट्रको दिगो विकास

गर्न, वातावरणमैत्री सवारी तथा यातायातका साधनको उत्पादन गर्ने स्वदेशी उद्योग सीप र प्रविधिको दिगो विकास गर्न, मुद्राको बहिर्गमन, वैदेशिक निर्भरता, वातावरण प्रदूषण, जलवायु परिवर्तनको सन्दर्भमा विश्व उष्णीकरण विश्वव्यापी तापक्रममा वृद्धि, हरितगृह ग्याँसहरू तथा हानिकारक कणजन्य तत्त्व Particulate Matter उत्सर्जन गरिएको कार्यमा यातायात क्षेत्रबाट वातावरणमा हुने नकारात्मक असरलाई न्यूनीकण गर्न वातावरणमैत्री सवारी तथा यातायातका साधनहरूबाट कार्बन उत्सर्जनमा न्यूनीकरण गराई कार्बन व्यापारलाई बढवा दिई आर्थिक विकासमा जोड दिई हरित विकासमा योगदान दिन भौतिक पूर्वाधार विकास तथा कानुनी व्यवस्था गर्नेलगायत यस नीतिमा उल्लेखित लक्ष्य तथा उद्देश्य पूरा गर्न, नीतिलाई कार्यान्वयन गराउन सम्बन्धित निकायबीच नीतिगत समन्वय र सामञ्जस्यता अनुगमन र मूल्याङ्कन र नेपाल सरकारलाई समय समयमा सुझाव दिन एवं नीतिलाई थप क्रियाशील बनाउनको लागि देहायबमोजिमको एउटा केन्द्रीय वातावरणमैत्री सवारी तथा यातायात सञ्चालन समिति गठन गरिनेछ ।

| | | |
|---|---|---|
| १) | मन्त्री वा राज्यमन्त्री, भौतिक पूर्वाधार तथा यातायात मन्त्रालय | संयोजक |
| २) | सदस्य, राष्ट्रियय योजना आयोग | सदस्य |
| ३) | सचिव, अर्थ मन्त्रालय | सदस्य |
| ४) | सचिव, भौतिक पूर्वाधार तथा यातायात मन्त्रालय | सदस्य |
| ५) | सचिव, शहरी विकास मन्त्रालय | सदस्य |
| ६) | सचिव, उद्योग मन्त्रालय | सदस्य |
| ७) | सचिव, ऊर्जा मन्त्रालय | सदस्य |
| ८) | सचिव, विज्ञान, प्रविधि तथा वातावरण मन्त्रालय | सदस्य |
| ९) | सचिव, सङ्घीय मामिला तथा स्थानीय विकास मन्त्रालय | सदस्य |
| १०) | प्रमुख, काठमाडौं उपत्यका विकास प्राधिकरण | सदस्य |
| ११) | प्रहरी अतिरिक्त महानिरीक्षक, प्रहरी प्रधान कार्यालय | सदस्य |
| १२) | वातावरणमैत्री सवारी तथा यातायात साधनसँग सम्बन्धित उत्पादक तथा व्यावसायी संस्थाहरूमध्येबाट एक जना र भौतिक पूर्वाधार तथा यातायात मन्त्रालयबाट मनोनित विशेषज्ञ गरी जम्मा दुई जना | सदस्य |

| | | |
|---|---|---|
| १३. | अध्यक्ष, यातायात व्यावसायी महासङ्घहरूमध्येबाट भौतिक पूर्वाधार तथा यातायात मन्त्रालयबाट मनोनित गर्ने एक जना | सदस्य |
| १४) | सहसचिव, (यातायात हेर्ने) भौतिक पूर्वाधार तथा यातायात मन्त्रालय | सदस्य - सचिव |

उक्त समितिले आफ्नो कार्यविधि आफैँ तय गर्नेछ र बैठकमा आवश्यकताअनुसार राष्ट्रिय तथा अन्तर्राष्ट्रिय सङ्घ सङ्गठनका प्रतिनिधिलाई आमन्त्रण गर्न सक्नेछ ।

१०.२ केन्द्रीय वातावरणमैत्री सवारी तथा यातायात सञ्चालन समितिको निर्णय, निर्देशन तथा नीतिगतलगायतका अन्य तोकिएका कार्य विवरणहरूको प्रभावकारी कार्यान्वयन गर्न र कार्यान्वयनको स्तरमा देखिएको समस्याको समाधान गर्न वातावरणमैत्री सवारी तथा यातायातका साधनको विकास, विस्तार र राष्ट्रिय उत्पादनलाई प्रोत्साहन, प्रवर्द्धन, संरक्षण गर्नुका साथै नियामक निकायको रूपमा कार्य गरी भौतिक पूर्वाधार तथा यातायात मन्त्रालयअन्तर्गत वातावरणमैत्री सवारी तथा यातायात कार्य समिति स्थापना गरिनेछ । यस कार्य समितिमा देहायबमोजिमका पदाधिकारी रहनेछन् :

| | | |
|---|---|---|
| १) | सचिव भौतिक पूर्वाधार तथा यातायात मन्त्रालय | संयोजक |
| २) | सह-सचिव अर्थ मन्त्रालय | सदस्य |
| ३) | सचिव, शहरी विकास मन्त्रालय | सदस्य |
| ४) | सह-सचिव, उद्योग मन्त्रालय | सदस्य |
| ५) | सह-सचिव, ऊर्जा मन्त्रालय | सदस्य |
| ६) | सह-सचिव, विज्ञान, प्रविधि तथा वातावरण मन्त्रालय | सदस्य |
| ७) | सह-सचिव, सङ्घीय मामिला तथा स्थानीय विकास मन्त्रालय | सदस्य |
| ८) | महानिर्देशक, सडक विभाग | सदस्य |
| ९) | महानिर्देशक, रेल विभाग | सदस्य |
| १०. | निर्देशक, नेपाल विद्युत् प्राधिकरण | सदस्य |
| ११) | सीडीई, (मेकानिकल) भौतिक पूर्वाधार तथा यातायात मन्त्रालय | सदस्य |
| १२) | प्रहरी उपरीक्षक, महानगरीय ट्राफिक प्रहरी महाशाखा | सदस्य |
| १३) | प्रतिनिधि, काठमाडौं उपत्यका विकास प्राधिकरण | सदस्य |
| १४) | नेपाल विज्ञान तथा प्रविधि प्रतिष्ठानबाट विज्ञ एक जना | सदस्य |

| | | |
|---|---|---|
| १५) | वातावरणमैत्री सवारी तथा यातायात साधनसँग सम्बन्धित उत्पादक तथा व्यावसायी मजदुर मध्येबाट दुई जना र नीति निर्माण वा परामर्शमा संलग्न संस्थाबाट एक जना विज्ञ गरी भौतिक पूर्वाधार तथा यातायात मन्त्रालयबाट मनोनित जम्मा ३ जना | |
| १६) | यातायात व्यावसायी महासङ्घहरूमध्येबाट भौतिक पूर्वाधार तथा यातायात मन्त्रालयले मनोनित गर्ने एक जना | सदस्य |
| १७) | महानिर्देशक यातायात व्यवस्था विभाग | सदस्य-सचिव |

यस समितिको कार्यदेश तोकिएबमोजिम हुनेछ र आवश्यकताअनुसार सरकारी तथा गैरसरकारी सङ्घ संस्था वा निकायका प्रतिनिधिलाई आमन्त्रण गर्न सक्नेछ ।

१०.३ वातावरणमैत्री सवारी तथा यातायात कार्य समिति वातावरणमैत्री सवारी तथा यातायातको विकासको लागि सम्बन्धित गाउँ, नगरपालिका, उपमहानगरपालिका, जिल्लामा यातायात व्यवस्थापन समिति वा आवश्यकताबमोजिम स्थानीयस्तरमा वातावरणमैत्री सवारी तथा यातायात व्यवस्थापन समिति गठन गरी आवश्यक कार्य गर्न सक्नेछ तथा काठमाडौं उपत्यकाका लागि काठमाडौं उपत्यका विकास प्राधिकरणमा छुट्टै कार्यकारी समितिमार्फत काम गर्न सक्नेछ । वातावरणमैत्री सवारी तथा यातायात प्रणालीको विकास गरी प्रदूषणमुक्त, स्वच्छ सफा शहर कार्यक्रमलाई प्रभावकारी र व्यवस्थित गर्न यातायातसम्बन्धी व्यवस्थापकीय र समन्वयकारी निकायको रूपमा वातावरणमैत्री यातायातको पूर्वाधार र सञ्चालनमा प्राथमिकता तथा नीति कार्यान्वयन गर्न देहायबमोजिमको काठमाडौं उपत्यका वातावरणमैत्री सवारी तथा यातायात व्यवस्थापन समिति गठन गरिनेछ :

| | | |
|---|---|---|
| १) | प्रमुख, काठमाडौं उपत्यका विकास प्राधिकरण | संयोजक |
| २) | कार्यकारी अधिकृतहरू काठमाडौं उपत्यकाका तोकिएका नगरपालिाहरू | सदस्य |
| ३) | सी.डी.ई.(मे.) भौकि पूर्वाधार तथा यातायात मन्त्रालय | सदस्य |
| ४) | प्राविधिक निर्देशक, यातायात व्यवस्था विभाग | सदस्य |
| ५) | प्राविधिक निर्देशक, रेल विभाग | सदस्य |

| | | |
|---|---|---|
| ६) | सी.डी.ई. सडक तथा ट्राफिक शाखा, सडक विभाग | सदस्य |
| ७) | प्रहरी उपरीक्षक, महानगरीय ट्राफिक प्रहरी महाशाखा | सदस्य |
| ८) | प्रतिनिधि, नेपाल विद्युत् प्राधिकरण | सदस्य |
| ९) | प्रतिनिधि, नगरपालिकाहरूमध्येबाट नगरपालिका स्तरीय वातावरणमैत्री यातायातसँग सम्बन्धित सङ्गठन (मनोनित) | सदस्य |
| १०) | प्रतिनिधि, नगरपालिकाहरूमध्येबाट नगरपालिका स्तरीय यातायात सङ्गठन (मनोनीत) | सदस्य |
| ११) | प्रतिनिधि, नगरपालिका स्तरीय वातावरणमैत्री यातायातसँग सम्बन्धित मजुर सङ्गठन (मनोनीत) | सदस्य |
| १२) | मनोनीत, यातायात विशेषज्ञ | सदस्य |
| १३) | वातावरणमैत्री सवारी तथा यातायातसम्बन्धी नियामक कार्यालयको प्रमुख, बागमती अञ्चल | सदस्य सचिव |

यस समितिको कार्यदेश तोकिएबमोजिम हुनेछ र आवश्यकता अनसार सरकारी तथा गैरसरकारी सङ्घ संस्था वा निकायका प्रतिनिधिलाई आमन्त्रण गर्न सक्नेछ ।

१०.४ भौतिक पूर्वाधार तथा यातायात मन्त्रालयअन्तर्गत वातावरणमैत्री सवारी तथा यातायात प्रणालीको विकासका लागि अध्ययन, अनुसन्धान, परीक्षण र यस प्रकारका सवारी साधन तथा स्वदेशी उद्योग व्यवसायको स्तर उन्नति, संरक्षण तथा प्रवर्द्धन, विस्तार एवं दक्ष जनशक्ति विकास, तालिम, सीप, प्रशिक्षाण, जनचेतना आदिको परिचालन योजना र पूर्वाधार विकासको लागि वातावरणमैत्री सवारी तथा यातायात विकास कोष स्थापना गरिनेछ । सो कोषमा खनिज इन्धन बिक्री वापत तथा अन्य वस्तुहरूमा वातावरण प्रदूषण करबापत लिइँदै आएको रकमको एक तिहाई र वातावरणमैत्री सवारी साधनले प्रदूषण विकासको लागि प्राप्त रकमको कम्तीमा ५० प्रतिशत र निजी क्षेत्र, गैरसरकारी सङ्घ संस्था, वैदेशिक सहयोग साथै नेपाल सरकारबाट उपलब्ध हुने साधन स्रोत सो कोषमा जम्मा गरिनेछ। वातावरणमैत्री सवारी तथा यातायात विकास कोष सञ्चालन तथा व्यवस्थापनको लागि केन्द्रीय वातावरणमैत्री सवारी तथा यातायात सञ्चालनन समितिले तोकेको समिति वा निकायबाट

सञ्चालन तथा व्यवस्थापन गरिनेछ । यसको लागि कार्यदेश वा कार्यविधि निर्देशिकामा तोकिए बमोजिम हुनेछ ।

११) **आर्थिक पक्ष**

नीति कार्यान्वयनका लागि कार्ययोजना बनाई तद्नुसार वार्षिक कार्यक्रमहरूको तर्जुमा गरी आवश्यक स्रोत साधनको व्यवस्थापन गरिनेछ । यस्ता कार्यक्रमहरू सरकारी क्षेत्रको स्रोत, वातावरणमैत्री सवारी तथा यातायात विकास कोषलगायत गैरसरकारी सङ्घ संस्था र निजी क्षेत्रसमेतको स्रोत साधन परिचालन हुने व्यवस्था गरिनेछ ।

१२) **कानुनी व्यवस्था**

१२.१ कानुनी सुधार

१२.१.१ यस नीतिको प्रभावकारी कार्यान्वयन गर्नका लागि सम्बन्धित ऐन, नियमन तथा निर्देशिकाहरूको परिमार्जन तथा संशोधन गर्नुका साथै आवश्यकताअनुसार नयाँ ऐन, नियम तथा निर्देशिकाहरू निर्माण गरिनेछ ।

१२.१.२ वातावरणमैत्री सवारी तथा यातायातको विकास तथा राष्ट्रिय उत्पादनलाई प्रोत्साहन गर्न सम्बन्धित तथा सरोकारवाला सङ्घ संस्थाहरूको परिचालन गर्न आवश्यक कानुनी सुधार गरिनेछ ।

१२.२ नीतिगत सुधार परिमार्जन एवं संशोधन

यस किसिमको नीतिलाई हरेक पाच पाच वर्षमा पुनरावलोकन गरी आवश्यकताअनुसार सुधार गरिँदै लगिनेछ ।

१२.३ नीतिको कार्यान्वयन व्यवस्था

नीति कार्यान्वयनका लागि सबै पक्षसित समन्वय र सामन्जस्यता कायम गरी आवश्यक विषयगत तथा क्षेत्रगत रणनीति तयार गरिनेछ । यी रणनीतिहरूको कार्यान्वयनको लागि कार्ययोजना तयार गरिनेछ ।

१३) **अनुगमन तथा मूल्याङ्कन**

भौतिक पूर्वाधार तथा यातायात मन्त्रालयले सम्बन्धित निकायहरूसँग समन्वय गरी आवधिक मूल्याङ्कन तथा अनुगमन गरी सोको प्रतिवेदन केन्द्रीय वातावरणमैत्री सवारी तथा यातायात सञ्चालन समितिमा पेस गर्नेछ ।

### १४) जोखिम

यस नीतिको कार्यान्वयन गर्दा देहायबमोजिम जोखिम रहन सक्ने पूर्वानुमान गरिएको छ :

१४.१ यो नीति कार्यान्वयन गर्नका लागि उपयुक्त कानुनी व्यवस्था, संस्थागत संरचना, दक्ष जनशक्तिको उपलब्धता र सक्षम व्यवस्थापकीय क्षमताको आवश्यकता पर्दछ । हालको कानुनी व्यवस्था, संस्थागत स्वरूप र व्यवस्थापकीय क्षमता तदअनुरूप नभएकोले नीति कार्यान्वयन गर्न केही चुनौती हुन सक्ने देखिन्छ ।

१४.२ नीति कार्यान्वयनका लागि प्रक्षेपण गरिएको योजनाअनुसार स्रोत साधन उपलब्ध हुन आवश्यक छ ।

१४.३ नीतिले परिकल्पना गरेअनुसार अन्तरनिकाय समन्वय प्रभावकारी हुनुपर्ने र यसको लागि सम्बद्ध सरोकार निकायहरूबाट आवश्यक सहयोग अपेक्ष गरिएको छ ।

### १५) बाधा अडकाउ फुकाउने

१५.१ प्रचलित कानुनले नसमेटिएको तर नीतिमा उल्लेखित कुनै कार्य गर्नु परेमा केन्द्रीय वातावरणमैत्री सवारी तथा यातायात सञ्चालन समितिले आवश्यक कार्यनीति या कार्यविधि बनाई कार्यान्वयन गर्नेछ ।

१५.२ वातावरणमैत्री सवारी तथा यातायातका साधनको विषय समेट्ने यो प्रमुख नीति हो । यस नीति अनुकूल नभएका ऐन, नियम तथा नीतिहरू यो नीति लागू भएको एक वर्षभित्र सम्बन्धित निकायले संशोधन र परिमार्जन गर्नुपर्नेछ ।